

# ॥ श्रीविष्णुस्मृतिः ॥


सङ्कलन एवं भावानुवाद : मोहन प्रसाद सापकोटा

sapkotamps731@gmail.com


तस्बिर श्रोतः पिक्सेल्स डटकम

(भाषा : संस्कृत-नेपाली)

## विषयसूची

# श्री गणेशाय नमः
# अथ श्रीविष्णुस्मृतिप्रारम्भः

## प्रथमोऽध्यायः
## (पहिलो अध्याय)

**ब्रह्मरात्र्यां व्यतीतायां प्रबुद्धे पद्मसम्भवे ।**
**विष्णुः सिसृक्षुर्भूतानि ज्ञात्वा भूमिं जलानुगाम् ॥१॥**

भगवान् ब्रह्मा रात बितेर बिउँझिएपछि सारा जगत जलमग्न देखी भगवान् विष्णुले जीव सृष्टिको चाहना गर्नुभयो ।

नोट : ब्रह्मरात्रि भनेको ब्रह्माको एक रात हो र यो एक कल्प बराबर हुन्छ ।

**जलक्रीडारुचिशुभं कल्पादिषु यथा पुरा ।**
**वाराहमास्थितो रूपमुज्जहार वसुन्धराम् ॥२॥**



(त्यसपछि) पहिलेपहिलेको कल्पको शुरुमा जस्तै गरी (यसपटक पनि) जलक्रिडामा रुची राख्ने बराहको शुभ रूप धारण गरी जलमा डुबिरहेकी पृथ्वीलाई (उहाँले अर्थात् विष्णुले) उद्धार गर्नुभयो ।

नोट : एक कल्प भनेको चार अरब बत्तीस करोड वर्षको सामूहिक नाम हो ।

**वेदपादो यूपदंष्ट्रः क्रतुदन्तश्चितीमुखः ।**
**अग्निजिह्वो दर्भरोमा ब्रह्मशीर्षो महातपाः ॥३॥**

महातपस्वी ती भगवान् बराहका गोडा वेदहरू, दाह्रा मौलो, दाँत यज्ञ, मुख चिता, जिभ्रो अग्नि, रौं कुश र ब्रह्म शिर थियो ।

**अहोरात्रेक्षणो दिव्यो वेदाङ्गश्रुतिभूषणः ।**
**आज्यनासः स्रुवतुण्डः सामघोषस्वनो महान् ॥४॥**

दिव्यस्वरुप भएका उहाँका दिन र रात नै आँखा थिए, वेदका अङ्ग उहाँका कानका गहना थिए, होमका लागि तयार पारिएको पवित्र घिउ उहाँको सुँघ्ने इन्द्रिय र सुरो उहाँको नाक थियो अनि पवित्र सामवेद उहाँको स्वर थियो ।

**धर्मसत्यमयः श्रीमान्क्रमविक्रमसत्कृतः ।**
**प्रायश्चित्तमहाघोणः पशुजानुर्महाकृतिः ॥५॥**

धर्मात्मा एवं सत्यमय तथा तेजवान् उहाँका बल र उफ्राई पनि अद्भुत थिए, उहाँका प्रायश्चित नै नाकका पोरा थिए, पशु आकृतिका शिकारमा उद्यत घुँडा भएको उहाँको स्वरूप साँची नै अती विशाल थियो ।

**उद्गाचान्त्रो होमलिङ्गो बीजौषधिमहाफलः ।**
**वेद्यन्तरात्मा मन्त्रस्फिग्विकृतः सोमशोणितः ॥६॥**

सामवेद्का मन्त्र उहाँका आन्द्रा थिए, होम उहाँको लिङ्ग थियो, चरुका लागि तयार पारिएका दिव्य औषधी उहाँको बीज थियो, आत्माको कुरा जान्ने उहाँका पछिल्तिरको भाग मन्त्रहरु थिए अनि सोम नै उहाँको रगत थियो ।

**वेदिस्कन्धो हविर्गन्धो हव्यकव्यादिवेगवान् ।**
**प्राग्वंशकायो द्युतिमान्नानादीक्षाभिरान्वतः ॥७॥**



उहाँको वेदी काँध, हवि गन्ध र हव्यकव्य वेग थिए । उहाँ प्राग्वंश शरीरका, तेजिला एवं नाना थरी दीक्षाले समन्वित हुनु हुन्थ्यो ।

नोट : (१) वेदी : देवता, पितृ आदिको पूजा गर्न अग्लो गरी बनाइएको पेटी वा जमिन । (२) हवि : हवन, होम । (३) हव्यकव्य : देवता र पितृलाई चढाइने वस्तु । (४) प्राग्वंश : यज्ञशालाको पूर्वपट्टि जजमान आदिलाई बस्न बनाइएको घर, विष्णु । (५) दीक्षा : यज्ञ, पूजा, मन्त्र ।

**दक्षिणाहृदयो योगमहामन्त्रमयो महान् ।**
**पाकमौष्टरुचिर प्रवर्ग्यावर्तभूषणः ॥८॥**

दक्षिणा नै उहाँको हृदय थियो, उहाँ साधकका महान मन्त्रबाट आराधित रहने महान व्यक्तित्वका हुनुहुन्थ्यो । उहाँका ओठहरु उपाकर्मका आदिमन्त्र थिए भने उहाँका गहना सोमयज्ञका लागि तयार पारिएको दूध जस्ता थिए ।

नोटः उमाकर्म भनेको जनैपूर्णिमाको दिनदेखि सुरु गरिने वेदपाठ वा विधिपूर्वक वेदाध्ययनका लागि गरिने कर्म हो ।

**नानाछन्दोगतिपथो गुह्योपनिषादासनः ।**

**छायापत्नीसहायो वै मणिश्रृङ्ग इवोदितः ॥९॥**

छन्दहरु उहाँका मार्ग थिए । गोप्य उपनिषदहरु उहाँका आसन थिए । लक्ष्मी (छाया) सहित उहाँ मणिश्रृङ्ग पर्वत समान शोभायमान देखिनु हुन्थ्यो ।

**महीं सागरपर्यन्तां सशैलवनकाननाम् ।**
**एकार्णवजलभ्रष्टामेकार्णवगतः प्रभुः ॥१०॥**

सागरमा पर्वत, वन सहित डुबेकी पृथ्वीको उद्धार गर्न ईश्वर सो सागरमा प्रवेश गर्नुभयो ।

**दंष्ट्राग्रेण समुद्धृत्य लोकानां हितकाम्यया ।**
**आदिदेवो महायोगी चकार जगतीं पुनः ॥११॥**

दाह्राको टुप्पोले पृथ्वीलाई उचालेर लोककल्याणका लागि आदिदेव महायोगी परमात्माले पुनः जगतको सृष्टि गर्नुभयो ।

**एवं यज्ञवराहेण भूत्वा भूतहितार्थिना ।**
**उद्धृता पृथिवी सर्वा रसातलगता पुरा ॥१२॥**



यसरी भगवान्ले यज्ञवराह बनी लोक कल्याणका लागि रसातलमा डुबेकी सम्पूर्ण पृथ्वीको प्राचीनकालमा उद्धार गर्नु भएको थियो ।

**उद्धृत्य निश्चले स्थाने स्थापयित्वा तथा स्वके ।**
**यथास्थानं विभज्यापस्तद्गता मधुसूदनः ॥१३॥**
**सामुद्राश्च समुद्रेषु नादेयीश्च नदीषु च ।**
**पल्वलेषु च पाल्वल्य सरःसु च सरोभवाः ॥१४॥**

यसरी पृथ्वीको उद्धार गरी आफ्नै स्थानमा अचल बनाएर स्थापना गरिसकेपछि भगवान् मधुसूदनले समुद्रको पानी समुद्रमा, नदीको पानीलाई नदीमा, पोखरीको पानीलाई पोखरीमा र तलाउको पानीलाई तलाउमा हुनेगरी त्यही त्यही स्थानमा व्यवस्थित गर्नुभयो ।

**पातालसप्तकं चक्रे लोकानां सप्तकं तथा ।**
**द्वीपानामुदधीनां च स्थानानि विविधानि च ॥१५॥**

यसपछि सात पाताल, सात लोक, सात द्वीप, सात समुद्र र अरु विभिन्न

स्थानहरु पनि बनाउनु भयो ।

**स्थानापालाँल्लोकपालान्नदीशैलवनस्पतीन् ।**
**ऋषींश्च सप्त धर्मज्ञान्वेदान्साङ्गान्सुरासुरान् ॥१६॥**

यसपछि तिनको रक्षार्थ स्थानपाल तथा लोकपालको सृष्टि गरी नदी, पहाड, वनस्पति, सप्तर्षि, धर्मज्ञ, षडङ्ग सहितको वेद, देवता र दानवको सृष्टि गर्नू भयो ।

**पिशाचोरगगन्धर्वयक्षराक्षसमानुषान् ।**
**पशुपक्षिमृगाद्याँश्च भूतग्रामं चतुर्विधम् ॥**
**मेघेन्द्रचापशम्पाद्यान्यज्ञांश्च विविधाँस्तथा ॥१७॥**

यसरी नै उहाँले पिशाच, सरिसृप, गन्धर्व, यक्ष, राक्षस, मानिस, मृगादि पशु, पक्षि, चार थरी (गर्भज, अण्डज, स्वेदज र उद्भिज) जीवको वासस्थान, बादल, इन्द्रेणी, चटयाङ्ग तथा अनेक प्रकारका यज्ञको सृष्टि गर्नुभयो ।

**एवं वाराहो भगवान्कृत्वेदं सचराचरम् ।**
**जगज्जगाम लोकानामविज्ञातं तदा गतिम् ॥१८॥**

यसरी यो चराचर जगत्लाई सृष्टि गरिसकेपछि भगवान् वराह एक अज्ञात लोकतिर लाग्नु भयो ।

**अविज्ञातां गतिं याते देवदेवे जनार्दने ।**
**वसुधा चिन्तयामास का धृतिर्मे भविष्यति ॥१९॥**

जनार्दन भगवान् अन्तर्ध्यान हुनु भएपछि पृथ्वीलाई "कसरी म टिकिरहने होला" भन्ने चिन्ता हुन थाल्यो ।

**पृच्छामि कश्यपं गत्वा स मे वक्ष्यत्यसंशयम् ।**
**मदीयां वहते चिन्तां नित्यमेव महामुनिः ॥२०॥**

"अब गएर मुनि कश्यपलाई सोद्धछु । उनले मेरो शङ्का हटाइ दिने छन् । यी महामुनिले सधैं मेरो शङ्का हटाइ दिने गरेका छन् ।"

**एवं सा निश्चयं कृत्वा देवी स्त्रीरूपधारिणी ।**
**जगाम कश्यपं द्रष्टुं दृष्टवाँस्तां च कश्यपः ॥२१॥**

यो निश्चय गरी पृथ्वी एउटी स्त्रीको रूप धारण गरी कश्यप मुनि भएका ठाउँमा गइन् ।
कश्यपले पनि उनी आएको देखे ।

**नीलपङ्कजपत्राक्षीं शारदेन्दुनिभाननाम् ।**
**अलिसङ्घालकां शुभ्रां बन्धुजीवाधरां शुभाम् ॥२२॥**

नीलकमलका फूलका पत्तीजस्ता आँखा भएकी, शरद् ऋतुकी चन्द्रमाजस्तै तेजिली, भमराको भुण्डजस्तो कालो चुल्ठो भएकी, कान्तिमती, दोपहरीया फूलजस्तै लालियुक्त ओठ भएकी, अत्यन्त शोभावती,..।

**सुभ्रूं सुसूक्ष्मदशनां चारुनासां नतभ्रुवम् ।**
**कम्बुकण्ठीं संहतोरूं पीनोरुजघनस्थलाम् ॥२३॥**

राम्रा आँखीभुइँ, मिलेका र सूक्ष्म दाँत, सुन्दर नाक, झुकेका आँखीभुइँ, शङ्खजस्तो घाँटी, एक आपसमा स्पर्श गर्ने पुष्ट तिघ्रा एवं त्यसको सन्धिस्थल वा काछ वा कम्मर,..।

**विरेजतुः स्तनौ यस्याः समौ पीनौ निरन्तरौ ।**
**शक्रेभकुम्भसङ्काशौ शातकुम्भसमद्युती ॥२४॥**

एक आपसमा नजिकै रहेका, उन्नत, बराबर, इन्द्रको हात्तीको शीर जस्ता र राज्याभिषेकका लागि तयार पारिएका स्वर्णकलश जस्ता छाती,.. ।

**मृणालकोमलौ बाहू करौ किशलयोपमौ ।**
**रुक्मस्तम्भनिभावूरू गूढे श्लिष्टे च जानुनी ॥२५॥**

कमलको डाँठजस्ता कमला पाखुरा, भर्खर उम्रेका विरुवाका फेद (काण्ड) जस्ता हात, सुनका खम्बाजस्ता तिघ्रा, मासुले छोपिएका र एकअर्कामा छोइएला छोइएला जस्ता घुँडा,.. ।

**जङ्घे विरोमे सुसमे पादावतिमनोरमौ ।**
**जघनञ्च घनं मध्यं यथा केशरिणः शिशोः ॥२६॥**

रौं नभएका तिघ्रा, समान र सुन्दर चरण, मासुले भरिएको काछ वा पुट्ठा, अनि सिंहका

बच्चाको जस्तै लचकदार कम्मर,... ।

**प्रभायुता नखास्ताम्रा रूपं सर्वमनोहरम् ।**
**कुर्वाणां वीक्षितैर्नित्यं नीलोत्पलयुता दिशः ॥२७॥**

उजेल्याइएको तामाजस्तै चम्किला नङ, मानौ दशै दिशाले लोभिएर हेरिरहेको नीलकमल फूल जस्तो सम्पूर्ण सुन्दर रूप,..।

**कुर्वाणां प्रभया देवीं तथा वितिमिरा दिशः ।**
**सुसूक्ष्मशुक्लवसनां रत्नोत्तमविभूषिताम् ॥२८॥**

(लिई) दशै दिशालाई उज्यालो पार्दै, सेतो सूक्ष्म वस्त्र र गहना एवं आभूषणले सुसज्जित भई,.. ।

**पदन्यासैर्वसुमतीं सपद्मामिव कुर्वतीं ।**
**रूपयौवनसम्पन्नां विनीतवदुपस्थिताम् ॥२९॥**

कमल फूल नै हिँडिरहे जसरी हिँड्दै रुपयौवनले सम्पन्न भएकी यस्ती पृथ्वी नम्रतापूर्वक कश्यपका सामु उपस्थित भएकी थिइन् ।



**समीपमागतां दृष्ट्वा पूजयामास कश्यपः ।**
**उवाच तां वरारोहे विज्ञातं हृद्गतं मया ॥३०॥**

उनी नजिकै आएपछि कश्यपले यथायोग्य पूजा गरे र भने “हे अती उत्तम पृथ्वी देवी ! म तिम्रो मनको भावलाई बुझ्दछु” ।

**धरे तव विशालाक्षि गच्छ देवि जनार्दनम् ।**
**स ते वक्ष्यत्यशेषेण भाविनी ते यथा धृतिः ॥३१॥**

हे विशाल आँखा भएकी देवी ! तिमी विष्णु भगवान् कहाँ जाऊ । तिमीले के गरी धैर्य धारण गर्ने भन्ने कुरा उहाँले नै तिमीलाई बताउनु हुनेछ ।

**क्षीरोदे वसतिस्तस्य मया ज्ञाता शुभानने ।**
**ध्यानयोगेन चार्वङ्गि त्वदर्थं तत्प्रसादतः ॥३२॥**

तिम्रो कल्याणका लागि मैले ध्यानदृष्टिले हेर्दा म “उहाँ क्षीरोद सागरमा बसिरहनु भएको छ” (यती चाहीँ) भनी दिन्छु ।

**एवमित्युक्त्वा सम्पूज्य कश्यपं वसुधा ततः ।**
**प्रययौ केशवं द्रष्टुं क्षीरोदमथ सागरम् ॥३३॥**

यति सुनेपछि “हुन्छ म त्यसै गर्दछु नि त” भन्दै कश्यपलाई नमस्कार गरी विष्णुको दर्शन गर्न स्त्रीरुपी पृथ्वी क्षीरोद सागरतिर गइन् ।

**सा ददर्शामृतनिधिं चन्द्ररश्मिमनोहरम् ।**
**पवनक्षोभसञ्जातवीचीशतसमाकुलम् ॥३४॥**

अनि उनी क्षीरोद सागरमा पुगिन् । त्यो सागर अमृतको सागर थियो । चन्द्रमाको किरण जस्तै सुन्दर त्यो सागरमा हावाका कारण सैयौं लहरहरू चलिरहेका थिए ।

**हिमवच्छतसङ्काशं भूमण्डलमिवापरम् ।**
**वीचीहस्तैः प्रचलितैराह्वयानमिव क्षितिम् ॥३५॥**



यो तरङ्गको चम्किलो प्रतिबिम्ब यस्तो देखिन्थ्यो की मानौ सैयौं हिमालय सहितको त्यो अर्कै संसार हो र तिनले उनलाई नजिकैबाट बोलाइरहेका छन् ।

**तैरेव शुभ्रतां चन्द्रे विदधानमिवानिशम् ।**
**अन्तरस्थेन हरिणा विगताशेषकल्मषम् ॥३६॥**

ती हातबाट मानौ चन्द्रकिरण निरन्तर प्रवाहित भइरहेको भान हुन्थ्यो । अनि तिनमा रहेको अपराधको दागलाई मानौ विष्णुको उपस्थितिले भगाइ दिएको छ ।

**यस्मात्तस्मात्तु बिभ्रन्तं सुशुभ्रां तनुमूर्जिताम् ।**
**पाण्डुरं खगमागम्यमधोभुवनवर्तिनम् ॥३७॥**

शुद्ध र चम्किलो स्वरूपका कारण यसको रङ सेतो थियो, पंक्षीका लागि दुर्गम उसको आसन तल्लो भागमा थियो ।

**इन्द्रनीलकडाराढ्यं विपरीतमिवाम्बरम् ।**
**फलावलीसमुद्भूतवनसङ्घसमाचितम् ॥३८॥**

यसको तेज नीलो एवं गाढा पहेँलो रत्नसमान देखिन्थ्यो । पूरै आकाश नै धर्तीमा समेटिएको हो कि जस्तो लाग्दथ्यो । अनि अनेकौं फलफूलले सुसज्जित उपवनहरु सतहमा उत्रिएका नै पो हुन् कि जस्तो आभाष हुन्थ्यो ।

**निर्मोकमिव शेषाहेर्विस्तीर्णं तमतीव हि ।**
**तं दृष्ट्वा तत्र मध्यस्थं ददृशे केशवालयम् ॥३९॥**

अनि उसको आकार शेषनागको छाला समान विशाल थियो । यस्तो क्षीरसागर देखेपछि देवी पृथ्वीले त्यहाँ विराजमान हुनु भएका भगवान विष्णुको वासस्थानतिर ध्यान दिइन् ।

**अनिर्देश्यपरीमाणमनिर्देश्यर्धिसंयुतम् ।**
**शेयापर्यङ्कगं तस्मिन् ददर्श मधुसूदनम् ॥४०॥**

शब्दले वर्णन गर्न नसकिने आकारको (यस्तो) निवासमा बयान गर्न नसकिने गौरव भएका शेषशायी विष्णुलाई उनले देखिन् ।

**शेषाहिफणरत्नांशुदुर्विभाव्यमुखाम्बुजम् ।**

**शशाङ्कशतसङ्काशं सूर्यायुतसमप्रभम् ॥४१॥**

शेषको गलामा जडित रत्नको तेजका कारण उहाँका मुख-कमल प्रष्ट देखिँदैनथ्यो । उहाँ सैयौं चन्द्रमा समान चम्कीरहनु भएको थियो भने उहाँको वैभव असङ्ख्य सूर्यकिरण समान तेजिलो थियो ।

**पीतवाससमक्षोभ्यं सर्वरत्नविभूषितम् ।**
**मुकुटेनार्कवर्णेन कुण्डलाभ्यां विराजितम् ॥४२॥**

पिताम्बर वस्त्रधारी उहाँ सबै रत्नले विभूषित हुनुहुन्थ्यो । उहाँको मुकुट सूर्यसमान देदीप्यमान थियो र उहाँले कानमा कुण्डल लगाउनु भएको थियो ।

**सम्वाह्यमानाङ्घ्रियुगं लक्ष्म्या करतलैः शुभैः ।**
**शरीरधारिभिः शस्त्रैः सेव्यमानं समन्ततः ॥४३॥**

श्रीलक्ष्मी आफ्ना कोमल हातले उहाँको गोडा मिचिरहेकी थिइन् । उहाँको गुणयुक्तशरीरलाई सबैतिरबाट (सबैले) हेर्न खोजिरहेको जस्तो देखिन्थ्यो ।

**तं दृष्ट्वा पुण्डरीकाक्षं ववन्दे मधुसूदनम् ।**
**जानुभ्यामवनीं गत्वा विज्ञापयति चाप्यथ ॥४४॥**

(यस्ता) कमलनयन मधुसुदनलाई देखेपछि पृथ्वीले नमस्कार गरी घुँडा टेकेर भन्न लागिन् ।

**उद्धृताहं त्वया देव रसातलतलं गता ।**
**स्वस्थाने स्थापिता विष्णो लोकानां हितकाम्यया ॥४५॥**

"हे विष्णु ! पातालमा पुगेकी मलाई हजुरले लोककल्याणका लागि उद्धार गरी यथास्थानमा स्थापित गरि दिनुभयो" ।

**तत्राधुना मे देवेश का धृतिर्वै भविष्यति ।**
**एवमुक्तस्तदा देव्या देवो वचनमब्रवीत् ॥४६॥**

"हे देव ! त्यहाँ मेरो कसरी अब धैर्यता हुनेछ ?" यसपछि पृथ्वीलाई विष्णु भन्नु हुन्छ ।

**वर्णाश्रमाचाररताः शास्त्रैकतत्परायणाः ।**
**त्वां धरे धारयिष्यन्ति तेषां त्वद्भार आहितः ॥४७॥**

"हे पृथ्वी ! वर्णाश्रमको पालना गर्ने र शास्त्र अनुसारको आचरण गर्नेहरूले तिम्रो भार धारणा गर्ने छन् । तिमीलाई स्थिर बनाउने छन्, यस्तो वाचा छ ।" ।

**एवमुक्ता वसुमती देवदेवमभाषत ।**
**वर्णानामाश्रमाणाञ्च धर्मान् वद सनातनान् ॥४८॥**

यो सुनेपछि पृथ्वीले देवेशलाई भनिन् "(त्यसो भए) सनातनदेखि चल्दै आएको वर्ण र आश्रमका बारेमा बताउने कृपा गर्नुहवस्" ।

**तत्तोऽहं श्रोतुमिच्छामि त्वं हि मे परमा गतिः ।**
**नमस्ते देव देवेश देवारिबलसूदन ॥४९॥**

"हे देवताका देवता हजुरलाई नमस्कार छ । हे देवताका वैरीको बलनाशक, ती सबै कुरा हजुरको मुखारविन्दबाट सुन्न म लालायित छु, हजुर नै

मलाई स्थिर बनाउन सक्षम हुनु हुन्छ" ।

**नारायण जगन्नाथ शङ्खचक्रगदाधर ।**
**पद्मनाभ हृषिकेश महाबलपराक्रम ॥५०॥**

"हे नारायण ! हे जगन्नाथ ! हे शङ्खचक्रगदाधर ! हे पद्मनाभ !
हे हृषिकेश ! हे महाबलपराक्रम !.."

**अतीन्द्रिय सुदुष्पार देव शार्ङ्गधनुर्धरः ।**
**वराह भीम गोविन्द पुराण पुरुषोत्तम ॥५१॥**

हे इन्द्रियले जान्न नसकिने ! हे आदि-अन्त जान्न नसकिने ! हे देव ! हे शार्ङ्गधनुषधारी !
हे वराह ! हे भीम ! हे गोविन्द ! हे पुराण पुरुषोत्तम !..."

**हिरण्यकेश विश्वाक्ष यज्ञमूर्ते निरञ्जन ।**
**क्षेत्र क्षेत्रज्ञ लोकेश सलिलार्णवशायक ॥५२॥**

हे हिरण्यकेश ! हे विश्वचक्षु ! हे यज्ञमूर्ति ! हे निरञ्जन ! हे क्षेत्र क्षेत्रज्ञ !
हे लोकेश ! हे समुद्र नै शैया भएका प्रभू !..."

**मन्त्र मन्त्रवहाचिन्त्य वेदवेदाङ्गविग्रह ।**
**जगतोऽस्य समग्रस्य सृष्टिसंहारकारक ॥५३॥**

हे मन्त्र ! हे मन्त्रद्रष्टा ! हे अचिन्त्य ! हे वेदवेदाङ्गका विग्रहरुपी प्रभू ! हे यो समस्त
संसारका सृष्टि र संहार कर्ता !..."

**धर्माधर्मज्ञ धर्माङ्ग धर्मयोने वरप्रद ।**
**विष्वक्सेनामृत व्योम मधुकैटभसूदन ॥५४॥**

"हे धर्मअधर्मका ज्ञाता ! हे धर्म नै अङ्ग भएका प्रभू ! हे धर्मजनक ! हे वरदायक !
हे सर्वव्यापक ! हे अमृत ! हे आकाश ! हे मधुकैटभनाशक !.."

**बृहतां बृंहणाज्ञेय सर्व सर्वाभयप्रद ।**
**वरेण्यानघ जीमूताव्यय निर्माणकारक ॥५५॥**

" हे स्थूलमा स्थूलतम प्रभू ! हे सबैका अभयदाता ! हे वरदाता ! हे निष्पाप !
हे पालपोषणकर्ता ! हे अविनाशी ! हे निर्माणकर्ता !.."

**आप्यायन अपां स्थान चैतन्याधार निष्क्रिय ।**
**सप्तशीर्षाध्वरगुरो पुराण पुरुषोत्तम ॥५६॥**

"हे आफैंबाट जल उत्पन्न गरी जगतलाई तृप्ति गर्ने प्रभू ! हे ज्ञानका वासस्थान भएका प्रभू !
हे निष्क्रिय ! हे सप्तशीर्ष (?), हे ज्ञानगुरु ! हे पुराण पुरुषोत्तम !.."

**ध्रुवाक्षर सुसूक्ष्मेश भक्तवत्सल पावन ।**
**त्वं गतिः सर्वदेवानां त्वं गतिर्ब्रह्मवादिनाम् ॥५७॥**

"हे अटल अक्षर ! हे  सूक्ष्मेश ! हे भक्तवत्सल ! हे पावन ! हजुर नै देवता
र ब्रह्मवादीका लागि गन्तव्य हुनुहुन्छ ।"

**तथा विहितवेद्यानां गतिस्त्वं पुरुषोत्तम ।**
**प्रपन्नास्मि जगन्नाथ ध्रुवं वाचस्पतिं प्रभुम् ॥५८॥**



"वेदविज्ञका गन्तव्य पनि हजुर नै हुनु हुन्छ, पुरुषोत्तम !  हे वाणीका स्वामी ! हे ध्रुव !
हे प्रभू ! हे जगन्नाथ ! म हजुरका शरण आएको छु" ।

**सुब्रह्मण्यमनाधृष्यं वसुषेणं वसुप्रदम् ।**
**महायोगबलोपेतं पृश्निगर्भं धृतार्चिषम् ॥५९॥**

"हे सुब्रह्मण्य ! हे अनाधृष्य ! हे वसुषेण ! हे वसुप्रद ! हे महायोगी ! हे बलउत्पादक ! हे
पृश्निगर्भ ! हे धृतार्चिष !"..

**वासुदेवं महात्मानं पुण्डरीकाक्षमच्युतम् ।**
**सुरासुरगुरुं देवं विभुं भूतमहेश्वरम् ॥६०॥**

" हे वासुदेव ! हे महात्मा ! हे पुण्डरीकाक्ष ! हे अच्युत ! हे देवदानवका गुरु ! हे देव ! हे विभु !
हे भूतमहेश्वर !" ।

**एकव्यूहं चतुर्बाहुं जगत्कारणकारणम् ।**
**ब्रूहि मे भगवन्धर्मांश्चातुर्वर्ण्यस्य शाश्वतान् ॥६१॥**

हे शरीरविहीन ! हे चतुर्बाहु ! हे जगतका कारण ! मलाई चारवर्णको सनातन भगवत् धर्मका बारेमा बताउने कृपा गर्नुहोस्" ।

**आश्रमाचारसंयुक्तान्सरहस्यान्ससङ्ग्रहान् ।**
**एवमुक्तस्तु देवेशः पुनः क्षौणीमभाषत ॥६२॥**

"आश्रमका आचरण र तिनको गोप्य रहस्य सङ्ग्रहका बारेमा बताउनु होस्" । पृथ्वीले यति भनेपछि भगवानले फेरी भन्नुभयो ।

**श्रृणु देवी धरे धर्मांश्चातुवर्ण्यस्य शाश्वतान् ।**
**आश्रमाचारसंयुक्तान्सरहस्यान्ससङ्ग्रहान् ॥६३॥**

"देवी ! म चारै वर्णका व्यक्तिले धारण गर्नुपर्ने धर्मका सनातन आचरण र गोप्य रहस्य सङ्ग्रहका बारेमा बताउँदछु, सुन" ।

**ये तु त्वां धारयिष्यन्ति सन्तस्तेषां परायणान् ।**
**निषस्मा भव वामोरु काञ्चनेऽस्मिन्वरासने ॥६४॥**



हे सुनौला उरु भएकी पृथ्वी ! जो यी आचरण अनुसार चल्ने सन्त छन् तिनले नै तिमीलाई धैर्य धारण गर्न मद्दत गर्ने छन् र (ती नै) यो सुनको आसनमा बस्न पाउने छन् ।

**सुखासीना निबोध त्वं धर्मान्निगदतो मम ।**
**शुश्रुवे वैष्णवान्धर्मान्सुखासीन्म धरा तदा ॥६५॥**

"हे पृथ्वी ! आरामसँग बसेर मैले बताउने धर्मका बारेमा सुन" । त्यसपछि आरामसँग बसी पृथ्वीले भगवान् विष्णुका मुखारविन्दबाट निस्केको धर्मको उपदेश सुन्दिभइन् ।

**॥ समाप्तमिदं प्रथमोऽध्यायः ॥१॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको पहिलो अध्याय पूर्ण भयो ।



## द्वितीयोऽध्यायः
## (दोश्रो अध्याय)

**ब्राह्मणः क्षत्रियो वैश्यः शूद्रश्चेति वर्णाश्चत्वारः ॥१॥**

ब्राह्मण, क्षत्रिय, वैश्य र शूद्र-यी चार वर्ण हुन् ।

**तेषामाद्या द्विजातयस्त्रयः ॥२॥**

तिमध्ये शुरुका तीन वर्णलाई "द्विजाति वा द्विज" भनिन्छ ।

**तेषां निषेकाद्यः स्मशानान्तो मन्त्रक्रियासमूहः ॥३॥**

शुरुका तीन वर्णको समूह गर्धाधानदेखि अन्तिम संस्कारसम्मका कर्म (वेद) मन्त्र पढेर गर्ने समूह हो ।

**तेषाञ्च धर्माः ॥४॥**

तिनीहरुको धर्म यसप्रकार हुन्छ-।

**ब्राह्मणस्याध्यापनम् ॥५॥**

ब्राह्मणको धर्म (वेद) पढाउनु हो ।



**क्षत्रियस्य शस्त्रनित्यता ॥६॥**

क्षत्रियको धर्म सधैं शस्त्र-अभ्यास गर्नु हो ।

**वैश्यस्य पशुपालनम् ॥७॥**

वैश्यको धर्म पशुपालन गर्नु हो ।

**शूद्रस्य द्विजातिशुश्रूषा ॥८॥**

शूद्रको धर्म द्विजातिको सेवा गर्नु हो ।

**द्विजानां यजनाध्ययने ॥९॥**

द्विजातिको धर्म यज्ञ गर्नु र (वेद) अध्ययन गर्नु हो ।

**अथैतेषां वृत्तयः ॥१०॥**

अब तिनको आजीविका (पेसा) का बारेमा बताउँदछु ।

**ब्राह्मणस्य याजनप्रतिग्रहौ ॥११॥**

ब्राह्मणको धर्म यज्ञ गराउनु र दान लिनु हो ।

**क्षत्रियस्य क्षितित्राणम् ॥१२॥**

क्षत्रियको धर्म पृथ्वीको पालना (रक्षा गरी कर लिनु) गर्नु हो ।

**कृषिगोरक्षवाणिज्यकुसीदयोनिपोषणानि वैश्यस्य ॥१३॥**

वैश्यको धर्म खेती, गाईको रक्षा (पशुपालन), ब्यापार,
ब्याज  कमाउनु र अनाज उब्जाउनु हो ।

**शूद्रस्य सर्वशिल्पानि ॥१४॥**

शूद्रको धर्म सबै खालका शिल्पकार्य गर्नु हो ।

**आपद्यनन्तरा वृत्तिः ॥१५॥**

सबै वर्णले सङ्कट पर्दा एक तह (वर्ण) तलको पेसा लिनू ।

**क्षमा सत्यं दमः शौचं दानमिन्द्रियसंयमः ।**

**अहिंसा गुरुशुश्रूषा तीर्थानुसरणं दया ॥१६॥**

क्षमाशीलता, सत्यता, संयमता, शुद्धता, दान, इन्द्रिय नियन्त्रण,
अहिँसा, गुरुको सेवा, तीर्थयात्रा, दया,.. ।

**आर्जवं लोभशून्यत्वं देवब्राह्मणपूजनम् ।**
**अनभ्यसूया च तथा धर्मः सामान्य उच्यते ॥१७॥**

इमानदारीता, लोभशून्यता, देव-ब्राह्मणको पूजन र ईर्ष्याबाट टाढा
रहनु-यी सबै वर्णका सामान्य धर्म हुन् ।

**॥ समाप्तमिदं द्वितीयोऽध्यायः ॥२॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको दोश्रो अध्याय पूर्ण भयो ।



# तृतीयोऽध्यायः
# (तेश्रो अध्याय)

**अथ राजधर्माः ॥१॥**

अब राजधर्मका बारेमा बताउँदछु ।

**प्रजापरिपालनम् ॥२॥**

प्रजाको पालना (रक्षा एवं सम्बर्द्धन) गर्नू ।

**वर्णाश्रमाणां स्वे स्वे धर्मे व्यवस्थापनम् ॥३॥**

चारै वर्णका मानिसलाई आ-आफ्ना वर्णधर्ममा व्यवस्थित गर्नू ।

**राजा च जाङ्गलं पशव्यं सस्योपेतं देशमाश्रयेत् ॥४॥**



राजाले बस्नका लागि खुल्ला मैदान, पशुपालनका लागि योग्य र प्रचूर अनाज हुने स्थान तोक्नू (रोज्नू, आश्रय लिनू) ।

**वैश्यशूद्रप्रायं च ॥५॥**

त्यस्तो स्थानमा प्रशस्त मात्रामा  वैश्य र शूद्र पनि बसोवास गरिरहेका हुन् ।

**तत्र धन्वनृमहीवारिवृक्षगिरिदुर्गाणामन्यतमं दुर्गमाश्रयेत् ॥६॥**

त्यहाँ शक्ति सञ्चयन गर्नू जुन ठाउँ मरुभूमिले वा हतियारधारी मानिसले घेरिएको होस् वा त्यस्तो किल्ला होस् जुन् पर्वत, जल, रुख र पर्वतले घेरिएको होस् ।

**तत्र स्वस्वग्रामाधिपान्कुर्यात् ॥७॥**

त्यहाँ प्रत्येक गाउँमा एक-एक जना अध्यक्ष बनाउनू ।

**दशाध्यक्षान् ॥८॥**

दश गाउँको एक जना अध्यक्ष बनाउनू ।

**शताध्यक्षाञ्च ॥९॥**

सय गाउँको एक जना अध्यक्ष र... ।

**देशाध्यक्षांश्च ॥१०॥**

पूरै देश (जिल्ला) को एक जना अध्यक्ष बनाउनू ।

**ग्रामदोषाणां ग्रामाध्यक्षः परीहारं कुर्यात् ॥११॥**

गाउँका मुद्दामामिला गाउँ-अध्यक्षले निराकरण गर्नू ।

**अशक्तो दशग्रामाध्यक्षाय निवेदयेत् ॥१२॥**

उसले नसके दश गाउँका अध्यक्षलाई फैसला गर्न निवेदन दिनू ।



**सोऽप्यशक्तः शताध्यक्षाय ॥१३॥**

उसले पनि नसके सय गाउँका अध्यक्षलाई निवेदन गर्नू ।

**सोऽप्यशक्तो देशाध्यक्षाय ॥१४॥**

उसले पनि नसके देशको अध्यक्षलाई फैसलाका लागि निवेदन दिनू ।

**देशाध्यक्षोऽपि सर्वात्मना दोषमुच्छिन्द्यात् ॥१५॥**

देशाध्यक्ष (राजा वा कार्यकारी प्रमुख) ले पनि सबै कुरा
बिचार गरेर मात्र मुद्दा किनारा लगाउनू ।

**आकरशुल्कतरनागवनेष्वाप्तान्नियुञ्जीत ॥१६॥**

योग्य मानिसलाई खानीमा काम गर्न, कर तथा (नौका आदिको) यातायात भाडा (सवारी कर) उठाउन तथा आफ्ना हात्तीहरु तथा जङ्गलका लागि (वनदुर्ग वा पर्वत

दुर्गका रेखदेख कर्तामा) नियुक्त गर्नू ।

**धर्मिष्ठान्धर्मकार्येषु ॥१७॥**

धार्मिक व्यक्तिलाई धर्मकार्यमा नियुक्त गर्नू ।

**निपुणानर्थकार्येषु ॥१८॥**

सुन आदि जाँच्न वा असमञ्जसमा कुनै निर्णय गर्न पण्डित (विज्ञ) लाई नियुक्त गर्नू ।

**शूरान्सङ्ग्रामकर्मसु ॥१९॥**

वीरहरुलाई युद्धकर्ममा नियुक्त गर्नू ।

**उग्रानुग्रेषु ॥२०॥**

कठोर मानिसलाई जल्लाद आदि कठोर काममा नियुक्त गर्नू ।



**षण्ढान्स्त्रीषु ॥२१॥**

तेश्रो लिङ्गीहरुलाई आफ्ना स्त्रीहरुको हेरचाहमा नियुक्त गर्नू ।

**प्रजाभ्यो बल्यर्थं सम्वत्सरेण धान्यतः षष्ठमंशमादद्यात् ॥२२॥**

प्रजाबाट प्रतिवर्ष धान आदि अनाजको छैटौं भाग (कर) लिने गर्नू ।

**सर्वसस्येभ्यश्च ॥२३॥**

अरु सबै बालिनालीको पनि छैटौं भाग (कर) लिनू ।

**द्विकं शतं पशुहिरण्येभ्यो वस्त्रेभ्यश्च ॥२४॥**

पशुपालन, सुन र लुगामा सयमा दुई भाग कर लिनू ।

**मांसमधुघृतौषधिगन्धपुष्पमूलफलरसदारुपत्राजिनमृद्भाण्डाश्मभाण्डवैदलेभ्यः षष्ठभागम् ॥२५॥**

मासु, मह, घिउ, , जडिबूटी, अत्तर, फूल, कन्दमूल, फलफूल, तरल पदार्थ, मसला, काठ, तेजपात आदि पात, छाला, माटाका भाँडा, ढुङ्गाका भाँडा र बाँसले बनेका जुनसुकै सामानमा पनि छ भागको एक भाग कर लिनू ।

**ब्राह्मणेभ्यः करादानं न कुर्यात् ॥२६॥**

ब्राह्मणलाई कर नलगाउनू ।

**ते हि राज्ञो धर्मकरदाः ॥२७॥**

राजालाई कर तिर्नू तिनको (जनताको) धर्मनिष्ठता हो ।

**राजा च प्रजाभ्यः सुकृतदुष्कृतषष्ठांशभाक् ॥२८॥**



चरित्रवान् तथा अन्यायी दुवैथरी प्रजाका कर्मको छ भागको एक भागको भागिधार राजा हुन्छ ।

**स्वदेशपण्याच्च शुल्कांशं दशममादद्यात् ॥२९॥**

स्वदेशमा बेचिने बजारयोग्य सामानको (बजार मूल्यको) दशौं भाग कर लिनू ।

**परदेशपण्याच्च विंशतितमम् ॥३०॥**

विदेशमा बेचिने बजारयोग्य सामानको (बजार मूल्यको) बीसौं भाग (कर) लिनू ।

**शुल्कस्थानादपक्रामन्सर्वापहारमाप्नुयात् ॥३१॥**

चुँगीकर-गृह (ढाट)को अवज्ञा गर्नेको सबै सामान जफत गर्नू ।

**शिल्पिनः कर्मजीविनश्च शूद्राश्च मासेनैकं राज्ञः कर्म कुर्युः ॥३२॥**

शिल्पकार, श्रमिक र शूद्रले महिनामा एक दिन राजाका लागि काम गर्नू ।

**स्वाम्यमात्यदुर्गकोशदण्डराष्ट्रमित्राणि प्रकृतयः ॥३३॥**

राजतन्त्र, उनको सभा, उनको किल्ला, उनको खजाना, उनका सेना, उनको राज्य र उनका मित्र : यी राज्यका सात साङ्गठनिक तत्व हुन् ।

**तद्दूषकाँश्च हन्यात् ॥३४॥**

(राजाले) यिमध्ये कुनैको विरुद्ध कोही गए तिनलाई मार्नू (दण्ड दिनू) ।

**स्वराष्ट्रपरराष्ट्रयोश्च चारचक्षुः स्यात् ॥३५॥**

(राजाले) स्वदेश र विदेशमा गुप्तचर फैलाउनू ।

**साधूनां पूजनं कुर्यात् ॥३६॥**

सज्जनको आदर गर्नू ।



**दुष्टाँश्च हन्यात् ॥३७॥**

दुष्टलाई पनि मार्नू (दण्ड दिनू) ।

**शत्रुमित्रोदासीनमध्यमेषु सामभेददानदण्डान्यथार्हं यथाकालं प्रयुञ्जीत ॥३८॥**

शत्रु र मित्रका बीचमा आवश्यकतानुसार वार्ता, भेद (फुटाउने), धन र दण्डको नीति अपनाउनू ।

**सन्धिविग्रहयानासनसंश्रयद्वैधीभावाँश्च यथाकालमाश्रयेत् ॥३९॥**

समयको मर्म अनुसार सम्झौता, विद्रोह, छाउनीमा बस्ने काम, आश्रय लिने काम र सेना विस्तारको काम गर्नू ।

**चैत्रे मार्गशीर्षे वा यात्रां यायात् ॥४०॥**

चैत्र वा मार्ग महिनामा यात्रा (युद्धयात्रा) मा निस्कनू ।

**परस्य व्यसने वा ॥४१॥**

अथवा जब शत्रुबाट कुनै विपद आइपर्न सक्ने सम्भावना हुन्छ तब (युद्धयात्रामा) निस्कनू ।

**परदेशावाप्तौ तद्देशधर्मान्नोछिन्द्यात् ॥४२॥**

शत्रुराज्यलाई जितेपछि पनि त्यो देशको धर्म (कानून) जबरजस्ती नहटाउनू ।

**परेणाभियुक्तश्च सर्वात्मना स्वं राष्ट्रं गोपायेत् ॥४३॥**

शत्रुले आक्रमण गर्दा सबै प्रयाशले आफ्नु राज्य जोगाउनू ।

**नास्ति राज्ञां समरे तनुत्यागसदृशो धर्मः ॥४४॥**

राजाले (वा सेनाले) युद्धमा प्राण त्याग्नु समान  अर्को धर्म छैन ।

**गोब्राह्मणनृपमित्रधनदारजीवितरक्षणोद्ये हतास्ते स्वर्ग लोकभाजः ॥४५॥**

जो गाई, ब्राह्मण वा राजा वा वा मित्र वा आफ्नु सम्पत्ति वा विवाहिता पत्नी वा
आफ्नो जीवन जोगाउँदै गर्दा मारिन्छन् : ती स्वर्ग जान्छन् ।

**वर्णसङ्कररक्षणार्थञ्च ॥४६॥**

वर्णसङ्करता हुनबाट जोगाउने क्रममा (मारिने) पनि स्वर्ग जान्छन् ।

**राजा परपुरावाप्तौ तु तत्र तत्कुलीनमभिषिञ्चेत् ॥४७॥**

जितेको शत्रुदेशमा त्यही देशको कुलीन राजघरानको व्यक्तिलाई राज्यभिषेक गराउनू ।

**न राजकुलमुच्छिन्द्यात् ॥४८॥**

राजकुलको तबसम्म वंशनाश नगर्नू ...।

**अन्यत्राकुलीनराजकुलात् ॥४९॥**

जबसम्म त्यो राजकुलमा अधम वंश (राजा) हुँदैन ।

**मृगयाक्षस्त्रीपानाभिरतिं परिहरेत् ॥५०॥**

(राजाले) शिकार, पासा (जुवा), स्त्री र मद पिउनमा आनन्द नलिनू ।

**वाक्पारुष्यदण्डपारुष्ये च ॥५१॥**

मानहानी र दण्ड दिनमा पनि (आनन्द नलिनू) ।

**नार्थदूषणं कुर्यात् ॥५२॥**

बेकारका कुरामा धन खर्च नगर्नू ।

**आद्यद्वाराणि नोच्छिन्द्यात् ॥५३॥**



पहिलेका राजाबाट बनाइएका द्वार (आदि संरचना) हरु नभत्काउनू ।

नोट : आद्यद्वाराणि : पूर्वराजकृतानि तोरणगोपुरादीनि : पहिले पहिलेका राजा आदिले बनाएका शहरका बाहिरी ढोका, मन्दिरका ढोका, किल्लाका ढोका आदि ।

**नापात्रवर्षी स्यात् ॥५४॥**

कुपात्रलाई उदारता प्रदर्शन नगर्नू (जस्तैः नर्तकी, प्रशंसक, भाट आदि)

**आकरेभ्यः सर्वमादद्यात् ॥५५॥**

पूर्ण क्षमतामा खानीहरू चलाउनू वा पूरा उत्पादन गर्नू ।

**निधिं लब्ध्वा तदर्धं ब्राह्मणेभ्यो दद्यात् ॥५६॥**

खजाना भेटिए आधा ब्राह्मणलाई दिनू ।

**द्वितीयमर्धं कोशे प्रवेशयेत् ॥५७॥**

बाँकी आधा राजकोषमा दाखिला गर्नू ।

**निधिं ब्राह्मणो लब्ध्वा सर्वमादद्यात् ॥५८॥**

ब्राह्मणले खजाना भेटे उसैलाई सबै दिनू ।

**क्षत्रियश्चतुर्थमंशं राज्ञेऽपरं चतुर्थमंशं ब्राह्मणेभ्योऽर्धमादद्यात् ॥५९॥**

क्षत्रियले (खजाना भेटे) एक चतुर्थांश राजालाई, अर्को चतुर्थांश ब्राह्मणलाई र बाँकी आधा (जसले भेटेको हो) उसैलाई दिनू ।

**वैश्यस्तु चतुर्थमंशं राज्ञे दद्याद्ब्राह्मणेभ्योऽर्धमंशमादद्यात् ॥६०॥**

वैश्यले (खजाना भेटे) एक चौथाई राजालाई, आधा ब्राह्मणलाई र बाँकी एक चौथाई उसैलाई दिनू ।



**शूद्रश्चावाप्तं द्वादशधा विभज्य पञ्चांशान्राज्ञे दद्यात्पञ्चांशान्ब्राह्मणेभ्योंऽशद्वयमादद्यात् ॥६१॥**

शूद्रले भेटे बाह्र भाग लगाई पाँच भाग राजालाई, पाँच भाग ब्राह्मणलाई दिई बाँकी दुई भाग उसैलाई दिनू ।

**अनिवेदितविज्ञातस्य सर्वमपहरेत् ॥६२॥**

कसले खजाना भेटेको हो त्यो कसैले (राजालाई) नभने वा थाहा नपाइए त्यो सबै राजाले लिनू ।

**स्वनिहिताद्राज्ञे ब्राह्मणवर्जं द्वादशमंशं दद्युः ॥६३॥**

पहिले लुकाएको आफ्नै खजाना भेटे ब्राह्मण बाहेक सबैले बाह्रौं भाग राजालाई दिनू ।

**परनिहितं स्वनिहितमिति ब्रुवँस्तत्समं दण्डमावहेत् ॥६४॥**

अरुले लुकाएको धनलाई मैले लुकाएको खजाना भनी दाबी गर्दछ भने
उसलाई दाबी गरे बराबरको रकम जरिवाना तिराउनू ।

**बालानाथस्त्रीधनानि च राजा परिपालयेत् ॥६५॥**

बालक, अनाथ र स्त्रीको धनलाई राजाले रक्षा गर्नू ।

**चौरहृतं धनमवाप्य सर्वमेव सर्ववर्णेभ्यो दद्यात् ॥६६॥**

चोरले चोरेको धन पाएपछि त्यो सबै त्यसको मालिकलाई दिनू चाहे
त्यो जुनसुकै वर्णको किन नहोस् ।

**अनवाप्य च स्वकोशादेव दद्यात् ॥६७॥**

यदि (चोरेको सम्पत्ति) पाइएन भने राजकोषबाट भए पनि चोरी हुनेलाई दिनू ।

**शान्तिस्वस्त्ययनैर्दैवोपघातान्प्रशमयेत् ॥६८॥**



शान्तिस्वस्ति आदि गरी दैव आक्रमण (विपत्) आदिलाई साम्य (सन्तुष्ट) पार्नू ।

**परचक्रोपघातांश्च शस्त्रनित्यतया ॥६९॥**

शत्रुको आक्रमणलाई हतियारले शान्त पार्नू ।

**वेदेतिहासधर्मशास्त्रार्थकुशलं कुलीनमव्यङ्गं तपस्विनं पुरोहितञ्च वरयेत् ॥७०॥**

वेद, इतिहास, धर्मशास्त्रको अर्थ जान्ने, कुशल, कुलीन, पूर्ण अङ्ग भएको र
तपस्वीलाई पुरोहितमा वरण गर्नू ।

**शुचीनलुब्धानवहिताञ्छक्तिसम्पन्नान्सर्वार्थेषु च सहायान् ॥७१॥**

शुद्ध, लोभहीन, सावधान र सक्षम व्यक्तिलाई सबै कुरामा सल्लाह र
सहयोग गर्न (मन्त्रीमा) नियुक्त गर्नू ।

**स्वयमेव व्यवहारान्पश्येद्विद्वद्भिर्ब्राह्मणैः सार्धम् ॥७२॥**

विद्वान् ब्राह्मणलाई साथमा लिएर आफैंले विवादहरुको (मुद्दामामिला आदि) निराकरण गर्नू ।

**व्यवहारदर्शने ब्राह्मणं वा नियुञ्ज्यात् ॥७३॥**

वा न्यायिक कर्मका लागि ब्राह्मणलाई नियुक्त गर्नू ।

**जन्मकर्मव्रतोपेताश्च राज्ञा सभासदः कार्या रिपौ मित्रे च ये समाः कामक्रोधभयलोभादिभिः कार्यार्थिभिरनाहार्याः ॥७४॥**

न्यायाधिशमा (सभासद)जन्मादि कर्म र व्रत गर्ने त्यस्ता व्यक्तिलाई राजाले नियुक्त गर्नू जसका लागि शत्रु र मित्र समान हुन्छन्, जो काम-क्रोध-लोभ-मोहबाट र वादीआदि मार्फत गरिने भ्रष्टाचार, लोभ एवं क्रोध आदिबाट उन्मुक्त हुन्छन् ।

**राजा च सर्वकार्येषु साम्वत्सराधीनः स्यात् ॥७५॥**

राजाले सबै कार्यमा ज्योतिषीको अधिनमा रहनू ( उसको सल्लाहमा गर्नू) ।



**देवब्राह्मणान्सततमेव पूजयेत् ॥७६॥**

देवता र ब्राह्मणलाई सदैव पूजा गर्नू (श्रद्धा गर्नू) ।

**वृद्धसेवी भवेत् ॥७७॥**

वृद्धजनको सेवा गर्ने हुनू ।

**यज्ञयाजी च ॥७८॥**

यज्ञ गरिरहने खालको पनि हुनू ।

**न चास्य विषये ब्राह्मणः क्षुधार्तोऽवसीदेत् ॥७९॥**

आफ्नो राज्यका कुनै पनि ब्राह्मणलाई तिनको चाहना मारेर दुःख नदिनू ।

**न चान्योऽपि सत्कर्मनिरतः ॥८०॥**

न त अरु कसैलाई सत्कर्ममा (ब्राह्मण पेसामा) तन्मय बनाउनू ।

**ब्राह्मणेभ्यश्च भुवं प्रतिपादयेत् ॥८१॥**

ब्राह्मणलाई भूमि दान गर्नू ।

**येषां च प्रतिदयेत्तेषां स्ववंश्यान्भुवःप्रमाणं दानच्छेदोपवर्णनं (पूर्वतोऽमूकनद्याः पश्चिमतोऽमुकस्थानस्येदम्) च पटे ताम्रपट्टे वा लिखितं स्वमुद्राङ्कितं चागामिनृपविज्ञापनार्थं दद्यात् ॥८२॥**

जसलाई भूमि दान दिएको हो पछिका शासकलाई जानकारी दिन त्यो कुरा कपडामा वा ताम्रपत्र आदिमा लेखेर दिनू, तथा त्यो खितमा तीनपुस्ते र साँधसिमाना खुलाई कारण सहित हस्ताक्षर गरी दिनू ।

**परदत्ताश्च भुवं नापहरेत् ॥८३॥**

अरुले (पूर्वज राजा आदिले ब्राह्मण वा अरुलाई) दिएको भूमी नहडप्नू ।



**ब्राह्मणेभ्यः सर्वदायान् प्रयच्छेत् ॥८४॥**

ब्राह्मणलाई सबै किसिमका उपहारहरु प्रदान गर्नू ।

**सर्वतस्त्वात्मानं गोपायेत् ॥८५॥**

(ब्राह्मणलाई सत्कर्म गर्नबाट वञ्चित नगराउनू र अरुलाई (ब्राह्मणले गर्ने) सत्कर्म गर्न बाध्य नपार्नू) । सबैकुरा आत्मैले रेखदेख गर्नू ।

**सुदर्शनश्च स्यात् ॥८६॥**

शोभायमान देखिने (व्यक्तित्वको) हुनू ।

**विषघ्नागदमन्त्रधारी च ॥८७॥**

विष र विमारीको असर हटाउन मन्त्रजादूटुना (पनि) जान्ने हुनू ।

**नापरीक्षितमुपयुञ्ज्यात् ॥८८॥**

पहिले कसैले नखाएका कुरा नचाख्नू ।

**स्मितपूर्वाभिभाषी स्यात् ॥८९॥**

कसैसित कुरा गर्नू अघि मुस्कुराउने गर्नू ।

**वध्येष्वपि न भ्रूकुटीमाचरेत् ॥९०॥**

मृत्युदण्ड पाएकाप्रति पनि निधार खुम्च्याउने नगर्नू ।

**अपराधानुरूपञ्च दण्डं दण्डयेषु दापयेत् ॥९१॥**

अपराधका प्रकृति हेरी अपराधीलाई दण्ड दिनू वा जरिवाना तिराउनू ।

**सम्यग्दण्डप्रणयनं कुर्यात् ॥९२॥**



कानून (न्याय) अनुसार दण्डको विधान गर्नू ।

**द्वितीयमपराधं न स कस्यचित् क्षमेत ॥९३॥**

कसैको पनि दोश्रो अपराध क्षमा नगर्नू ।

**स्वधर्ममपालयन्नदण्डयो नामास्ति राज्ञः ॥९४॥**

आफ्नो धर्मपालनका क्रममा कोही पनि (अपराधी) राजाको दण्डबाट नउम्किऊन् ।

**यत्र श्यामो लोहिताक्षो दण्डश्चरति निर्भयः ।**
**प्रजास्तत्र विवर्धन्ते नेता चेत्साधु पश्यति ॥९५॥**

जहाँ काला राता आँखाको दण्ड निर्भयले विचरण गर्दछ, जहाँ राजा (नेता)
न्यायपूर्ण व्यवहार गर्दछन्, त्यहाँ जनताको सम्वृद्धि हुन्छ ।

**स्वराष्ट्रे न्यायदण्डः स्याद्भृशदण्डश्च शत्रुषु ।**

**सुहृत्स्वजिह्मः स्निग्धेषु ब्राह्मणेषु क्षमान्वितः ॥९६॥**

स्वदेशमा कानून अनुसार दण्ड र विदेशी शत्रुलाई शारीरिक दण्ड दिनू । आफ्ना हितैषीलाई समान व्यवहार गर्नू र ब्राह्मणप्रति क्षमाशील हुनू ।

**एवं वृत्तस्य नृपतेः शीलोञ्छेनापि जीवतः ।**
**विस्तीर्यते यशो लोके तैलबिन्दुरिवाम्भसि ॥९७॥**

यसरी राज्य चलाउने राजा चाहे उ शिला खोजेर जीवन धान्ने किन नहोस् उसको यश त्यसरी नै संसारमा फैलन्छ जसरी तेलको एक थोपा पानीमा फैलन्छ ।

**प्रजासुखे सुखी राजा तद्दुःखे यश्च दुःखितः ।**
**स कीर्तियुक्तो लोकेऽस्मिन् प्रेत्य स्वर्गे महीयते ॥९८॥**

प्रजाको सुखमा सुखी र दुःखमा दुखी हुने राजाको यस लोकमा कीर्ति फैलन्छ र मृत्युपछि उ स्वर्गमा पूजिन्छ ।

**॥ समाप्तमिदं तृतीयोऽध्यायः ॥३॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको तेश्रो अध्याय पूर्ण भयो ।



# चतुर्थोऽध्यायः
# (चौथो अध्याय)

**आलस्थार्कमरीचिगतं रजस्त्रसरेणुसंज्ञकम् ॥१॥**

धूलोको त्यो कण, जसलाई सूर्यको किरण जालीको बीचबाट
छिर्दा पनि बल्लतल्ल देखिन्छ त्यसलाई "त्रसरेणु" भनिन्छ ।

**तदष्टकं लिक्षा ॥२॥**

त्यो (त्रसरेणु) आठ वटाको एक "लिक्षा" (कपालमा हुने लिखा बराबर) हुन्छ ।

**तन्त्रयं राजसर्षपः ॥३॥**

ती (लिक्षा) तीन वटाको एक "राजसर्षप" (कालो सर्सिउँ बराबर) हुन्छ ।

**तन्त्रयं गौरसर्षपः ॥४॥**



ती (राजसर्षप) तीन वटाको एक "गौरसर्षप" (सेतो सर्सिउँ बराबर) हुन्छ ।

**तन्षट्कं यवः ॥५॥**

ती (गौरसर्षप) छ वटाको एक "यव" (जौ बराबर) हुन्छ ।

**तन्त्रयं कृष्णलम् ॥६॥**

ती (यव) तीन वटाको एक "कृष्णल" (रती बराबर) हुन्छ ।

**तत्पञ्चकं माषः ॥७॥**

त्यो (कृष्णल) पाँचको एक "माषा" हुन्छ ।

**तद्वादशमक्षार्धम् ॥८॥**

त्यो बाह्र वटा माषाको एक "अक्षार्ध" हुन्छ ।

**अक्षार्धमेव सचतुर्माषकं सुवर्णः ॥९॥**

एक अक्षार्ध र चार माषाको एक "सुवर्ण" हुन्छ ।

**चतुःसुवर्णको निष्कः ॥१०॥**

चार सुवर्णको एक "निष्क" हुन्छ ।

**द्वे कृष्णले समधृते रूप्यमाषकः ॥११॥**

दुई कृष्णलको तौल एउटा चाँदीको माषा समान हुन्छ ।

**तत्षोडशकं धरणम् ॥१२॥**

सोऱ्ह वटा चाँदीको माषा बराबर एक "धरण" (चाँदीको) हुन्छ ।

**ताम्रकार्षिकः कार्षापणः ॥१३॥**



एउटा कर्ष (वा अठार रती) बराबरको तामालाई "कार्षापण" भनिन्छ ।

**पणानां द्वे शते सार्धे प्रथमः साहसः स्मृतः ।**
**मध्यमः पञ्च विज्ञेयः सहस्रं त्वेव चोत्तमः ॥१४॥**

(दण्ड विधानमा) दुई सय पचास तामाको पणलाई "प्रथम साहस" भनी बताइन्छ । पाँच सयलाई "मध्यम साहस" र हजार पणलाई "उत्तम साहस" भनिन्छ ।

**॥ समाप्तमिदं चतुर्थोऽध्यायः ॥४॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको चौथो अध्याय पूर्ण भयो ।



## पञ्चमोऽध्यायः
## (पाँचौं अध्याय)

**अथ महापातकिनो ब्राह्मणवर्जं सर्वे वध्याः ॥१॥**

ब्राह्मण बाहेकका सबै महापापीहरु मृत्युदण्डका अधिकारी हुन्छन् ।

**न शारीरो ब्राह्मणस्य दण्डः ॥२॥**

ब्राह्मणका लागि शारीरिक दण्ड हुँदैन ।

**स्वदेशाद्ब्राह्मणं कृताङ्कं विवासयेत् ॥३॥**

आफ्नो देशबाट (महापापी) ब्राह्मणलाई डामेर (चिह्न लगाएर) देशनिकाला गर्नू ।

**तस्य च ब्रह्महत्यायामशिरस्कं पुरुषं ललाटे कुर्यात् ॥४॥**

ब्रह्महत्या गर्ने ब्राह्मणको निधारमा टाउको बिनाको लाशको चिह्न (मुर्कट्टा) अङ्कित गर्नू (डाम्नू) ।

**सुराध्वजं सुरापाने ॥५॥**

मदिरा पिउने ब्राह्मणको निधारमा (डामेर) मदिराको झण्डा बनाउनू ।

**श्वपदं स्तेये (सुवर्णस्तेये) ॥६॥**

सुन चोर्ने ब्राह्मणको निधारमा (डामेर) कुकुरको खुट्टा बनाउनू ।

**भगं गुरुतल्पगमने ॥७॥**

गुरुपत्नी गमन गर्ने ब्राह्मणको निधारमा (डामेर) योनीको चिह्न बनाउनू ।

**अन्यचापि वध्यकर्मणि तिष्ठन्तं समग्रधनमक्षतं विवासयेत् ॥८॥**

अन्य हत्यामा सबै सम्पत्ति जफत गरी चोटपटक नलगाई उसलाई देशनिकाला गर्नू ।

**कूटशासनकर्तॄंश्च राजा हन्यात् ॥९॥**

राजाज्ञा विपरित शासन गर्नेलाई मृत्युदण्ड दिनू ।

**कूटलेख्यकाराँश्च ॥१०॥**

राजाज्ञा विपरित लेख्नेलाई पनि मृत्युदण्ड दिनू ।

**गरदाग्निदप्रसह्यतस्करान्स्त्रीबालपुरुषघातिनश्च ॥११॥**

विष दिने, आगो लगाउने, डाँका गर्ने तथा स्त्री, बालक र पुरुष मार्नेलाई पनि मृत्युदण्ड दिनू ।

**ये च धान्यं दशभ्यः कुम्भेभ्योऽधिकमपहरेयुः ॥१२॥**

अनि दश कुम्भ (एक कुम्भ बराबर २४.५७६ कि.ग्रा.) भन्दा बढी अनाज चोर्नेलाई पनि मृत्युदण्ड दिनू ।



**धरिममेयानां (सुवर्णरजतादीनि) शतादभ्यधिकम् ॥१३॥**

सय माषा (एक माषा बराबर ०.९७२ ग्राम) भन्दा बढी (सुनचाँदी) आदि बलपूर्वक लिनेलाई पनि मृत्युदण्ड दिनू ।

**ये चाकुलीना राज्यमभिकामयेयुः ॥१४॥**

जो अकुलीन भएर पनि स्वतन्त्रताको चाहना (राज्य) राख्दछन् तिनलाई पनि मृत्युदण्ड दिनू ।

**सेतुभेदकाँश्च ॥१५॥**

बाँध भत्काउनेहरुलाई पनि मृत्युदण्ड दिनू ।

**प्रसह्यतस्कराणाञ्चावकाशभक्तप्रदाँश्च ॥१६॥**

अनि डाँकाहरुलाई बास र खाना दिनेलाई पनि मृत्युदण्ड दिनू ।

**अन्यच राजाशक्तेः[१] ॥१७॥**

जब राजा (दण्ड दिन) असमर्थ हुन्छन् (त्यसबेला सो कार्य गर्ने अर्थात् डाँकालाई खुवाउने वा बास दिनेलाई) नमार्नू ।

(१. राज्ञश्चेच्चौरनिवारणे न शक्तिस्तदा ग्रामनिवासिनामात्मत्राणाय चौरादिरक्षणेऽपि न वध इत्यर्थः ।)

**स्त्रियमशक्तभर्तृकां तदतिक्रमणीश्च[२] ॥१८॥**

अशक्त पतिलाई छाडी परपुरुषमा लम्पट स्त्रीलाई पनि मार्नू ।

(२.भरणादिसमर्थोऽप्यशक्तो निरोद्व्रुमन्यायेभ्ये भर्ता यस्यास्ताम् । तमतिक्रमितुं परपुरुषोपभोगलम्पटया शीलमस्यास्तां च स्त्रियं हन्यात् ।)

**हीनवर्णोऽधिकवर्णस्य येनाङ्गेनापराधं कुर्यात्तदेवास्य शातयेत् ॥१९॥**

तल्लो वर्गकाले माथिल्लो वर्गकालाई जुन अङ्गले अपराध गर्दछ उसको त्यही अङ्ग काटेर अङ्गहीन बनाउनू ।



**एकाशनोपवेशी कटचां कृताङ्को निर्वास्यः ॥२०॥**

माथिल्लो वर्गसँग समान आसनमा बस्नेलाई कमरमा चिह्न लगाई देशनिकाला गर्नू ।

**निष्ठीव्योष्ठद्वयविहीनः कार्यः ॥२१॥**

थुके दुवै ओठ काटिदिनू ।

**अवशर्धयिता च गुदहीनः ॥२२॥**

अपानवायू छोडे गुदबिहीन बनाउनू ।

**आक्रोशयिता च विजिह्वः ॥२३॥**

गालिगलौच गरे जिब्रो काट्नू ।

**दर्पेण धर्मोपदेशकारिणो राजा तप्तमासेचयेत्तैलमास्ये (उत्तमवर्णस्य धर्मोपदेशकारिणाम्) ॥२४॥**

तल्लो वर्गका कसैले अभिमान गरी धर्मोपदेश दिए उसका मुखमा उम्लिरहेको तेल हाल्नू ।

**द्रोहेण च नामजातिग्रहणे दशाङ्गुलोऽस्य शङ्कुर्निखेयः ( अस्य हीनवर्णस्य मुखे ज्वलन्नयोमयः शङ्कु) ॥२५॥**

तल्लो वर्णले ठूलो हुन माथिल्लो वर्णको जात र नाम लिए उसका मुखमा दश अङ्गुलको तातो किला ठोक्नू ।

**श्रुतदेशजातिकर्मणामन्यथावादी कार्षापणशतद्वयं दण्ड्यः (बहुवचनाच्छारीरमुपनयनादिसंस्कारकर्मः) ॥२६॥**

आफ्नो देशको वर्णव्यवस्था, जातिकर्म आदि नमान्नेलाई दुई सय कार्षापण जरिवाना गर्नू ।

**काणखञ्जादीनां तथावाद्यपि कार्षापणद्वयम् ॥२७॥**



कानो, खोरण्डो आदिलाई हियाएर कानो, खोरण्डो आदि भन्नेलाई दुई कार्षापण जरिवाना गर्नू ।

**गुरूनाक्षिपन्कार्षापणशतम् ॥२८॥**

गुरुको मानहानी गर्नेलाई सय कार्षापण जरिवाना गर्नू ।

**परस्य पतनीयाक्षेपे कृते तूत्तमसाहसम् ॥२९॥**

अरुलाई जातिच्यूत गराउनेलाई उत्तमसाहसको दण्ड गर्नू ।

**उपपातकयुक्ते मध्यमम् (उपपातकं गोवधादि) ॥३०॥**

गोवधादि उपपापमा मध्यमसाहसको दण्ड गर्नू ।

**त्रैविद्यवृद्धानां क्षेपे जातिपूगानां च ॥३१॥**

तीन वेद जान्ने ब्राह्मण, वृद्ध वा पूरै जात वा समूहलाई धिक्कार्नेलाई पनि (मध्यमसाहसको दण्ड गर्नू) ।

**ग्रामदेशयोः प्रथमसाहसम्॥३२॥**

गाऊँ वा देशलाई धिक्कार्नेलाई प्रथमसाहसको दण्ड दिनू ।

**न्यङ्गतायुक्ते क्षेपे कार्षापणशतम् (व्यङ्गतायुक्ताक्षेपे, अश्लीलं न्यङ्गसंयुतमिति नारदस्मरणात्) ॥३३॥**

अश्लील भाषा बोल्ने (म तिम्री छोरीलाई सुताउँदछु आदि) लाई सय कार्षापण जरिवाना गर्नू ।

**मातृयुक्ते तूत्तमम् (सवर्णा) ॥३४॥**

कसैकी आमाका विषयमा यस्तो अश्लील बोल्नेलाई उत्तमसाहसको दण्ड दिनू ।

**समवर्णाक्रोशने द्वादश पणान् दण्ड्यः ॥३५॥**



समान वर्णकालाई अपशब्द बोले बाह्र पण जरिवाना गर्नू ।

**हीनवर्णाक्रोशने षण्दण्ड्यः ॥३६॥**

तल्लो वर्णकालाई अपशब्द प्रयोग गरे छ पण जरिवाना गर्नू ।

**यथाकालमुत्तमसवर्णाक्षेपे तत्प्रमाणो दण्डः ॥३७॥**

माथ्लो वर्णकालाई वा समान वर्णकालाई अपशब्द प्रयोग गरे ठाउँका ठाउँ यही अनुसार दण्ड तिराउनू ।

**त्रयो वा कार्षापणाः (तयोर्वा कार्षापणास्त्रयः) ॥३८॥**

आफ्नो अपमानको जवाफ फर्काएको हो भने तीन कार्षापण तिराउनू ।

**शुक्तवाक्याभिधाने त्वेवमेव ॥३९॥**

खराब नामले बोलाए पनि यति नै तिराउनू ।

**पारजायी सवर्णागमने तूत्तमसाहसं दण्ड्यः ॥४०॥**

सवर्ण परस्त्री गमन गर्नेलाई उत्तमसाहस दण्ड दिनू ।

**हीनवर्णागमने मध्यमम् ॥४१॥**

तल्लो वर्णका परस्त्री गमन गरे मध्यमसाहस दण्ड दिनू ।

**गोगमने च ॥४२॥**

गो-गमनमा पनि (मध्यमसाहसको  दण्ड दिनू) ।

**अन्त्यागमने वध्यः ॥४३॥**

शूद्रा परस्त्री गमन गर्नेलाई प्राणदण्ड दिनू ।

**पशुगमने कार्षापणशतं दण्ड्यः (गोव्यतिरिक्तानाम्) ॥४४॥**

पशु गमन गरे (गाई बाहेक) सय पण तिराउनू ।

**दोषमनाख्याय कन्यां प्रयच्छँश्च ॥४५॥**

दोष नभनी वा लुकाएर कन्या विवाह गराउनेलाई पनि (सय पण तिराउनू) ।

**ताञ्च बिभृयात् ॥४६॥**

जसले यसको समर्थन गरेका छन् तिनलाई पनि (सय पण तिराउनू) ।

**अदुष्टां दुष्टामिति ब्रुवन्नुत्तमसाहसम् ॥४७॥**

निर्दोष कन्याको दोष देखाउनेलाई उत्तमसाहस दण्ड दिनू ।

**गजाश्वोष्ट्रगोघाती त्वेककरपादः कार्यः ॥४८॥**

हात्ती, घोडा वा गाई मार्नेको एउटा हात वा गोडा काट्नू ।

**विमांसविक्रयी च (विरुद्धमांसं श्वविड्वराहादेस्तद्विक्रयशीलः) ॥४९॥**

निषेधित (वा भुक्याएर) मासु बेच्ने (जस्तै कुकुर, सुँगुर आदि) लाई पनि यही सजायँ दिनू ।

**ग्राम्यपशुघाती कार्षापणशतं दण्ड्यः ॥५०॥**

अरुको घरपालुवा जनावर मार्नेलाई सय पण तिराउनू ।

**पशुस्वामिने तन्मूल्यं दद्यात् ॥५१॥**

पशुस्वामीलाई त्यसको मूल्य दिनू ।

**आरण्यपशुघाती पञ्चाशतं कार्षापणान् ॥५२॥**

जङ्गली जनावर मार्नेलाई पाँच सय पण तिराउनू ।



**पक्षिघाती मत्स्यघाती च दश कार्षापणान् ॥५३॥**

चरामार्ने र माछामार्नेलाई दश पण तिराउनू ।

**कीटोपघाती च कार्षापणम् ॥५४॥**

कीराफट्याङ्ग्रा मार्नेलाई एक पण तिराउनू ।

**फलोपगमद्रुमच्छेदी तूत्तमसाहसम्**
**(फलैरुपगम्यन्त इति फलोपगमाः । फलोपकारिणः पनसाम्रादयः) ॥५५॥**

फल फलेको वृक्ष काट्नेलाई (वा फलफूल नास गर्नेलाई उत्तमसाहस दण्ड गर्नू ।

**पुष्पोपगमद्रुमच्छेदी मध्यमम् ॥५६॥**

फूल फूलेको रुख काट्नेलाई मध्यमसाहस दण्ड दिनू ।

**वल्लीगुल्मलताछेदी कार्षापणशतम् ॥५७॥**

लहरा, झाडी र लहरे बोट काट्नेलाई सय पण तिराउनू ।

**तृणच्छेदद्येकम् ॥५८॥**

अर्काको घाँस चोरेर काट्नेलाई एक पण तिराउनू ।

**सर्वे च तत्स्वामिनां तदुत्पत्तिम् ॥५९॥**

अरुबाट काटिएका उक्त सबै पैदावारमा त्यसको मालिकको अधिकार हुन्छ ।

**हस्तेनोद्गूरयिता दश कार्षापणान् (ताडनार्थम्) ॥६०॥**

हिर्काउन हात उठाए (समान वर्णमा) दश पण तिराउनू ।

**पादेन विंशतिम् ॥६१॥**

हिर्काउन भनी गोडा उचाले बीस पण तिराउनू ।



**काष्ठेन प्रथमसाहसम् ॥६२॥**

हिर्काउन काठ वा दाउरा उठाए प्रथमसाहस दण्ड तिराउनू ।

**पाषाणेन मध्यमम् ॥६३॥**

हिर्काउन ढुङ्गा उठाए मध्यमसाहस दण्ड गर्नू ।

**शस्त्रेणोत्तमम् ॥६४॥**

हिर्काउन हतियार उठाए उत्तमसाहस दण्ड दिनू ।

**पादकेशांशुककरलुण्ठने दश पणान्दण्ड्यः ॥६५॥**

गोडा, कपाल, कपडा वा हात ताने दश पण तिराउनू ।

**शोणितेन विना दुःखमुत्पादयिता द्वात्रिंशत्पणान् ॥६६॥**

रगत ननिक्लने गरी चोट पुऱ्याए बत्तीस पण तिराउनू ।

**सह शोणितेन चतुःषष्टिम् ॥६७॥**

रगत निक्लने गरी चोट पुऱ्याए चौसठ्ठी पण तिराउनू ।

**करपाददन्तभङ्गे कर्णनासाविकर्तने मध्यमम् ॥६८॥**

हात, गोडा र दाँत भाँचे वा कान, नाक काटे मध्यमसाहस दण्ड दिनू ।

**चेष्टाभोजनवाग्रोधे प्रहारदाने च ॥६९॥**

कसैलाई हिँड्न, खान वा बोल्न नसक्ने बनाउन खोजे वा यसोगर्ने नियतले हिर्काए पनि मध्यमसाहस दण्ड दिनू ।

**नेत्रकन्धराबाहुसक्थ्यंसभङ्गे चोत्तमम् ॥७०॥**



आँखा, घाँटी, पाखुरा, हाड र काँधमा चोट पुऱ्याए वा फोरे वा भाँचे उत्तमसाहस दण्ड दिनू ।

**उभयनेत्रभेदिनं राजा यावज्जीवं बन्धनान्न विमुञ्चेत् ॥७१॥**

दुवै आँखा फोर्नेलाई आजीवन कारावासबाट राजाले मुक्त नगर्नू ।

**तादृशमेव वा कुर्यात् (तादृशं नेत्रद्वयरहितं वा कुर्यात्कारयेदित्यर्थः) ॥७२॥**

वा उसका पनि दुवै आँखा फोर्नू वा फोर्न लगाउनू ।

**एकं बहूनां निघ्नतां प्रत्येकमुक्ताद्दण्डाद्विगुणः ॥७३॥**

एउटालाई धेरै मिलेर आक्रमण गरे सबैलाई एकजनाले गरेको भन्दा दोब्बर दण्ड दिनू ।

**उत्क्रोशन्तमनभिधावतां तत्समीपवर्तिनां संसरताञ्च (अभिभूयमानसमीपवर्तिनां संसरतां चानभिधावकानामपि तन्निमित्ताद्दण्डाद्द्विगुणो दण्डो भवति) ॥७४॥**

गुहार माग्दा पनि घटनास्थलमा उपस्थित भएर जसले सहायता गर्दैन वा भाग्दछ उसलाई पनि दोब्बर दण्ड तिराउनू ।

**सर्वे च पुरुषपीडाकरास्तदुत्थानव्ययं दद्युः ॥७५॥**

ती सबै जसले कसैलाई चोट पुऱ्याएका छन् तिनले घाइतेको उपचार खर्च व्यहोर्नू ।

**ग्राम्यपशुपीडाकराश्च ॥७६॥**

घरपालुवा जनावरलाई चोट पुऱ्याउनेले पनि (उपचार खर्च व्यहोर्नू) ।

**गोऽश्वोष्ट्रगजापहार्येककरपादः कार्यः ॥७७॥**

गाई, घोडा, ऊँट र हात्ती चोरको एउटा हात वा गोडा काट्नू ।

**अजाव्यपहार्येककरश्च ॥७८॥**



खसीबाख्रा र भेडा चोर्नेको एउटा हात काट्नू ।

**धान्यापहार्येकादशगुणं दण्ड्यः (धान्यं वार्षिकं श्यामाकादि) ॥७९॥**

वर्षादमा उब्जने धान आदि अनाज चोर्ने चोरलाई मूल्यको एघार गुना तिराउनू ।

**सस्यापहारी च (सस्यानि हेमन्तवसन्तोद्भवानि ब्रीहियवादीनि) ॥८०॥**

जाडोमा उम्रने बालीनाली चोर्नेलाई पनि यही दण्ड दिनू ।

**सुवर्णरजतवस्त्राणां पञ्चाशतस्त्वभ्यधिकमपहरन्विकरः ॥८१॥**

सुन, चाँदी र कपडा जसको मूल्य पचास माषाभन्दा बढी हुन्छ त्यस्ता सामान चोर्नेको दुवै हात काट्नू ।

**तदूनमेकादशगुणं दण्ड्यः ॥८२॥**

त्यसभन्दा कम मूल्यको यी सामान चोर्नेलाई मूल्यको एघार गुना जरिवाना तिराउनू ।

**सूचकार्पासगोमयगुडदधिक्षीरतक्रतृणलवणमृद्भस्मपक्षिमत्स्यघृततैलमांसमधुबैदलवेणुमृण्मयलोहभाण्डानामपहर्ता मूल्यान्त्रिगुणं दण्ड्यः ॥८३॥**

धागो, कपास, गाईको गोबर, चिनि, दही, दूध, मोही, घाँस, नुन, माटो, खरानी, चरा, माछा, घिउ, तेल, मासु, मह, बाँसका सामान, माटाका सामान र फलामका सामान चोर्नेलाई मूल्यको तेब्बर तिराउनू ।

**पक्वान्नानां च ॥८४॥**

पक्वान्न चोरे पनि यसै गर्नू (मूल्यको तेब्बर तिराउनू) ।

**पुष्पहरितगुल्मवल्लीलतापर्णानामपहरणे पञ्च कृष्णलान् ॥८५॥**

फूल, हरिया लता, वनस्पति, लहरा, पात र विरुवा चोरे पाँच कृष्णल तिराउनू ।

**शाकमूलफलानाञ्च ॥८६॥**



सागपात, कन्दमूल र फलफूल चोरे पनि पाँच कृष्णल तिराउनू ।

**रत्नापहार्युत्तमसाहसम् ॥८७॥**

रत्न चोरलाई उत्तमसाहस दण्ड गर्नू ।

**अनुक्तद्रव्याणामपहर्ता मूल्यसमम् ॥८८॥**

माथि नबताइएका वस्तुको चोरी हुँदा त्यसको मूल्य बराबरको रकम धनीलाई चोरबाट दिलाइ दिनू ।

**स्तेनाः सर्वमपहृतं धनिकस्य दाप्याः ॥८९॥**

चोरहरुबाट चोरिएका सबै सामान पहिले चोरिनेलाई शोधभर्ना गराउनू ।

**ततस्तेषामभिहितदण्डप्रयोगः ॥९०॥**

त्यसपछि मात्र तिन (चोर)लाई तोकिएका दण्ड दिनू ।

**येषां देयः पन्थास्तेषामपथदायी कार्षापणपञ्चविंशतिं दण्डचः ॥९१॥**

बाटो छोडीदिनूपर्ने व्यक्तिलाई बाटो नछोड्नेलाई पच्चीस कार्षापण तिराउनू ।

**आसनार्हस्यासनमददच्च (अतिथादेः) ॥९२॥**

अतिथि आदि आसन दिनूपर्ने जनलाई आसन नदिनेलाई पनि (पच्चीस कार्षापण तिराउनू) ।

**पूजार्हमपूजयँश्च ॥९३॥**

पूजा गर्नूपर्नेलाई नगर्ने व्यक्तिलाई पनि (पच्चीस कार्षापण तिराउनू) ।

**प्रातिवेश्यब्राह्मणे निमन्त्रणातिक्रमे च ॥९४॥**

नजिकैका छिमेकी (ब्राह्मण) लाई (श्राद्धादिमा) निमन्त्रणा नगर्नेलाई पनि (पच्चीस कार्षापण तिराउनू) ।



**निमन्त्रयित्वा भोजनादायिनश्च ॥९५॥**

निम्ता गरेर नखुवाउनेलाई पनि (पच्चीस कार्षापण तिराउनू) ।

**निमन्त्रितस्तथेत्युक्त्वा चाभुञ्जानः सुवर्णमाषकम् ॥९६॥**

निम्ता मानेर गई नखानेलाई पनि एक माषा सुन तिराउनू ।

**निमन्त्रयितुश्च द्विगुणमन्नम् ॥९७॥**

जजमानलाई पनि दोब्बर अन्न भराइदिनू ।

**अभक्ष्येण ब्राह्मणदूषयिता षोडश सुवर्णान् ॥९८॥**

अखाद्य खुवाएर ब्राह्मणलाई दूषित पार्नेलाई सोह्र सुवर्ण तिराउनू ।

**जात्यपहारिणा शतम् ॥९९॥**

जात लिनेलाई सय सुवर्ण तिराउनू ।

**सुरया वध्यः ॥१००॥**

मदीरा पिलाए मार्नू ।

**क्षत्रियं दूषयितुस्तदर्धम् ॥१०१॥**

क्षत्रियलाई (माथि बताइए अनुसार) दूषित गरे त्यसको आधा दण्ड दिनू ।

**वैश्यं दूषयितुस्तदर्धमपि ॥१०२॥**

वैश्यलाई (माथि बताइए अनुसार) दूषित गरे त्यसको पनि आधा दण्ड दिनू ।

**शूद्रं दूषयितुः प्रथम साहसम् ॥१०३॥**



शूद्रलाई दूषित गरे प्रथमसाहस दण्ड दिनू ।

**अस्पृश्यः कामकारेण स्पृश्यं स्पृशन्वध्यम् (अस्पृश्यचाण्डालादिः, कामकारेण बुद्धिपूर्वकम्) ॥१०४॥**

जानीजानी छुन नहुनेलाई छुनेलाई मार्नू ।

**रजस्वलां शिफाभिस्ताडयेत् (रजस्वलां बुद्धिपूर्वकं त्रैवर्णिकं स्पृशन्तीम् ) ॥१०५॥**

रजस्वला स्त्रीले जानीजानी द्विजलाई छोए कोर्राले हिर्काउनू ।

**पथ्युद्यानोदकसमीपेऽप्यशुचिकारी पणशतम् ॥१०६॥**

बाटो, बगैंचा र पानीघाट नजिकै अपवित्र (मलमूत्र आदि फोहर) गर्नेलाई सय पण तिराउनू ।

**तच्चापास्यात् ॥१०७॥**

तथा उसलाई दिसा (गरेको फोहर) पनि हटाउन लगाउनू ।

**गृहभूकुटयाद्युपभेत्ता मध्यमसाहसं दण्ड्यः (भूरङ्गनादिः) ॥१०८॥**

घर, चौर र पर्खाल भत्काउनेलाई मध्यमसाहस दण्ड दिनू ।

**तच्च योजयेत् (उत्थानद्रव्यं दद्यादित्यर्थः) ॥१०९॥**

उसलाई भत्काएको बनाउन पनि लगाउनू ।

**गृहे पीडाकरं द्रव्यं प्रक्षिपन्पणशतम्**
**(कण्टक..कार्मणपुंमलिकादि द्रव्यं प्रक्षिपन्) ॥११०॥**

अरुका घरमा पीडादायक कुरा (काँडा, जादू आदि) फ्याँक्ने व्यक्तिलाई सय पण तिराउनू ।

**साधारण्यापलापी च ॥१११॥**

गलत तरिकाले सार्वजनिक सम्पत्ति कब्जा गर्नेलाई पनि सय पण तिराउनू ।



**प्रेषितस्याप्रदाता च (देवब्राह्मणाद्यर्थं प्रेषितस्यार्थस्य लोभेनाप्रदाता) ॥११२॥**

अरुले कसैलाई दिनू भनेर दिएको कुरा उसलाई नदिनेलाई पनि सय पण तिराउनू ।

**पितृपुत्राचार्ययाज्यर्त्विजामन्योन्यापतितत्यागी च ॥११३॥**

बाबुछोरा, आचार्य, ऋत्विज्, पुरोहित आदिमध्ये जसले एकले अर्कोलाई अकारण त्यागेका छन् भने त्याग्नेलाई सय पण तिराउनू ।

**न च ताञ्जह्यात् ॥११४॥**

त्यस्तालाई सम्बन्धितकोमा फर्काउनु पनि ।

**शूद्रप्रव्रजितानां दैवे पित्र्ये भोजकश्च ॥११५॥**

शूद्र र सन्यासीलाई देवपितृ कार्यमा निम्त्याएर खुवाउनेलाई पनि सय पण तिराउनू ।

**अयोग्यकर्मकारी च (यदस्य योग्यं कर्म न भवति ।**

यथानुपनीतस्याध्ययनम्) ॥११६॥

(उपनयन नगरी वेद पढ्नु आदिजस्ता) अयोग्य कर्म गर्नेलाई पनि सय पण तिराउनू ।

समुद्गगृहभेदकश्च ॥११७॥

लाहा छाप लागेको घर फोर्नेलाई पनि सय पण तिराउनू ।

अनियुक्तः शपथकारी (राज्ञा सभ्यैर्वा अनियुक्तो नादिष्टः) ॥११८॥

राजा वा अधिकारीले नभनी शपथ खानेलाई पनि सय पण तिराउनू ।

पशूनां पुंस्त्वोपघातकारी च ॥११९॥

पशुलाई खसीपार्नेलाई सय पण तिराउनू ।

पितापुत्रविरोधे तु साक्षिणं दशपणो दण्डः ॥१२०॥



बाबुछोराको विवादमा साछी हुनेलाई दश पण तिराउनू ।

यस्तयोश्चान्तरे स्यात्तस्योत्तमसाहसः ॥१२१॥

बाबुछोराको विवादमा जमानत दिनेलाई उत्तमसाहस दण्ड दिनू ।

तुलामानकूटकर्तुश्च ॥१२२॥

नापतौलमा तलमाथि गर्नेलाई पनि (उत्तमसाहसको दण्ड दिनू) ।

तदकूटे कूटवादिनश्च ॥१२३॥

शुद्ध हुँदाहुँदै अशुद्ध बोल्नेलाई पनि (उत्तमसाहसको दण्ड दिनू) ।

द्रव्याणां प्रतिरूपविक्रयिकस्य च ॥१२४॥

वस्तुमा मिसावट गरी बेच्नेलाई पनि (उत्तमसाहसको दण्ड दिनू) ।

**सम्भूयवणिजां पण्यमनर्घेणावरुन्धताम्**
**(ये देशान्तरगतं पण्यं हीनमूल्येन प्रार्थयमाना अवरुन्धन्ति) ॥१२५॥**

अरुले (वा कानुनले) बेच्न रोकेका सामान कम मूल्यमा बेच्नेलाई (उत्तमसाहसको दण्ड दिनू) ।

**प्रत्येकं विक्रीणतां च (ये चाधिकमूल्येन विक्रीणन्ति) ॥१२६॥**

बढी मूल्य लिएर बेच्नेलाई पनि (उत्तमसाहसको दण्ड दिनू) ।

**गृहीतमूल्यं पण्यं यः क्रेतुर्नैव दद्यात्तस्यासौ सोदयं दाप्यः ॥१२७॥**

किन्नेसँग मूल्य लिएर पनि जसले सामान दिँदैन उसँग ब्याज समेत असुली किनिएको सामान दिन बाध्य पार्नू ।

**राज्ञा च पणशतं दण्डयः ॥१२८॥**

उसलाई राजाले सय पण जरिवाना पनि गर्नू ।



**क्रीतमक्रीणतो या हानिः सा क्रेतुरेव स्यात् ॥१२९॥**

किनिसकेपछि सामानमा हुने नोक्सान क्रेताकै हुन्छ ।

**राजविनिषिद्धं विक्रीणस्तदपहारः ॥१३०॥**

बेच्न प्रतिबन्ध लागेका सामान बेच्नेसँगबाट जफत गर्नू ।

**तारिकः स्थलजं शुल्कं गृह्णन्दश पणान्दण्डयः**
**(नौकादिशुल्काधिकारी तारिकः) ॥१३१॥**

नौका आदि जलको शुल्क लिन नियुक्त अधिकारीले जमिनको परिवहन शुल्क लिए दश पण तिराउनू ।

**ब्रह्मचारिवानप्रस्थभिक्षुगुर्विणीतीर्थानुसारिणां**
**नाविकः शौल्किकः शुल्कमाददानश्च ॥१३२॥**

विद्यार्थी, वानप्रस्थ, भिक्षु, गर्भवती स्त्री र तीर्थयात्रीसँग शुल्क लिने शुल्काधिकारिलाई पनि दश पण तिराउनू ।

**तच्च तेषां दद्यात् ॥१३३॥**

उसले उठाएको शुल्क जोसँग उठाइएको हो तिनैलाई फिर्ता दिनू ।

**द्यूते कूटाक्षदेविनां करच्छेदः ॥१३४॥**

जूवामा कपट गर्नेको हात काट्नू ।

**उपधिदेविनां संदंशच्छेदः ॥१३५॥**

त्यो व्यक्ति जसले अरुलाई खेलमा झेल गर्न सिकाउँदछ उसका दुई औंला काट्नू ।

**ग्रन्थिभेदकानां करच्छेदः (वस्त्राञ्चलबद्धं द्रव्यमुत्कृत्य येऽपहरन्ति ते ग्रन्थिभेदकाः) ॥१३६॥**



पाकेटमारको एउटा हात काट्नू ।

**दिवा पशूनां वृकाद्युपघाते पाले त्वनायति पालदोषः ॥१३७॥**

दिउसै घरपालुवा जनावरलाई ब्वाँसो आदिले आक्रमण गर्दा पनि गोठालोले जोगाउन जाँदैन भने त्यो दोष उसैलाई लाग्दछ ।

**विनष्टपशुमूल्यञ्च स्वामिने दद्यात् ॥१३८॥**

यसरी मारिएको पशुको मूल्य गोठालाले पशुस्वामीलाई दिनू ।

**अननुज्ञातं दुहन्पञ्चविंशतिं कार्षापणान् ॥१३९॥**

यदि गोठालोले अनुमती नलिई दूध दुहुन्छ भने उसलाई पच्चीस कार्षापण तिराउनू ।

**महिषी चेत्सस्यनाशं कुर्यात्तत्पास्त्वष्टौ माषान्दण्ड्यः ॥१४०॥**

यदी भैंसीले अरुको बालीनाली नाश गर्दछ भने गोठालोलाई आठ माषा दण्ड तिराउनू ।

**अपालायाः स्वामी (अपालकायाः) ॥१४१॥**

गोठालो छैन भने भैंसी धनीले त्यो दण्ड (अर्मल) तिर्नू ।

**अश्वस्तूष्ट्रो गर्दभो वा ॥१४२॥**

घोडा, ऊँट र गधाले बाली नोक्सान गरे पनि यसै गर्नू ।

**गौश्चेत्तदर्धम् ॥१४३॥**

गाईले बाली नोक्सान गरे आधा दण्ड तिराउनू ।

**तदर्धमजाविकम् ॥१४४॥**

भेडाबाख्राले नोक्सान गरे त्यसको पनि आधा तिराउनू ।



**भक्षयित्वोपविष्टेषु द्विगुणम् ॥१४५॥**

बाली खाएर पशु त्यहीँ बसेको छ भने दण्ड दोब्बर गर्नू ।

**सर्वत्र स्वामिने विनष्टसस्यमूल्यञ्च (विनष्टस्य सस्यस्य) ॥१४६॥**

सबै मुद्दामा जग्गाधनीले अर्मल लिनू ।

**पथि ग्रामे विवीतान्ते न दोषः (ग्रामसीमान्ते, सीमान्ते) ॥१४७॥**

राजमार्गको नजिक, गाऊँ नजिक र चरिचरनको नजिकमा गाईवस्तुले
बालि नष्ट गरे अर्मल तिर्नू पर्दैन ।

**अनावृते च ॥१४८॥**

बार नबारेको ठाऊँको पनि अर्मल तिर्नू पर्दैन ।

**अल्पकालम् (अल्पकान्नं, ग्रासमाण भक्षणे न दोषः) ॥१४९॥**

थोरै समय (एक बुझोमात्र खाएको) को पनि अर्मल तिर्नू पर्दैन ।

**उत्सृष्टवृषभसूतिकानाञ्च ॥१५०॥**

छाडा साँढे र भर्खर ब्याएकी गाईले खाएको पनि अर्मल तिर्नू पर्दैन ।

**यस्तूत्तमवर्णान्दास्ये नियोजयेत्तस्योत्तमसाहसो दण्डः ॥१५१॥**

जसले उत्तम वर्णकालाई दास बनाउँदछ उसलाई उत्तमसाहस दण्ड दिनू ।

**त्यक्तप्रव्रज्यो राज्ञो दास्यं कुर्यात् ॥१५२॥**

धर्माचरण त्याग्नेहरुलाई राजाका दास बनाउनू ।

**भृतकश्चापूर्णे काले भृतिं त्यजन्सकलमेव मूल्यं दद्यात्**
**(यावदभ्युपगतं तावत्सकलमेव मूल्यं वेतनं स्वामिने दद्यात्) ॥१५३॥**



भाडामा लिइएको ज्यामीले तोकिएको समय अघि काम छोड्दछ भने उसले मालिकलाई पूरै पैसा (तोकिएको ज्याला)तिर्नुपर्दछ ।

**राज्ञे च पणशतं दद्यात् ॥१५४॥**

उसले राजालाई पनि सय पण तिर्नू ।

**तद्दोषेण यद्विनश्येत्तत्स्वामिने ॥१५५॥**

उसका कारण स्वामीको जेजति नोक्सान भएको छ त्यो दुरुस्त पारिदिनू ।

**अन्यत्र दैवोपघातात् ॥१५६॥**

त्यो नोक्सान दैवी कारणले भएको भए जरिवाना तिर्नू पर्दैन ।

**स्वामी चेद्भृतकमपूर्णे काले जह्यात्तस्य सर्वमेव मूल्यं दद्यात् ॥१५७॥**

समय अगावै कामदार निकाले स्वामीले पूरै ज्याला दिनू ।

**पणशतं च राजनि ॥१५८॥**

राजालाई पनि सय पण तिर्नू ।

**अन्यत्र भृतकदोषात् ॥१५९॥**

कामदारको दोष भए पर्दैन ।

**यः कन्यां पूर्वदत्तामन्यस्मै दद्यात्स चौरवच्छास्यः ॥१६०॥**

जसले एउटालाई दिने वचन गरेर कन्या अर्कैलाई दिन्छ उसलाई चोरसरह दण्ड दिनू ।

**वरदोषं विना ॥१६१॥**

पहिलो वरमा कुनै दोष नभएको अवस्थामा  मात्र यसो गर्नू ।



**निर्दोषां परित्यजन् ॥१६२॥**

निर्दोष कन्यालाई छाड्नेलाई पनि चोरलाई सरह दण्ड दिनू ।

**पत्नीं च (अदुष्टां पत्नीं विवाहसंस्कृतां परित्यजत इति) ॥१६३॥**

निर्दोष पत्नीलाई छाड्ने पतिलाई पनि चोरसरह दण्ड दिनू ।

**अजानानः प्रकाशं यः परद्रव्यं क्रीणीयात्तत्र तस्यादोषः ॥१६४॥**

खुला बजारमा थाहा नपाई अरु कसैले बेच्न राखेको किन्न
नमिल्ने कुरा खरिद गर्दा आरोप लाग्दैन ।

**स्वामी द्रव्यमाप्नुयात् ॥१६५॥**

तर मालिकलाई त्यो सम्पत्ति दिलाउनू ।

**यद्यप्रकाशं हीनमूल्यञ्च क्रीणीयात्तदा क्रेता विक्रेता च चौरवच्छास्यौ ॥१६६॥**

गोप्यरुपले सस्तोमा किनिएको भए किन्नेबेच्ने दुवैलाई चोरसरह दण्ड गर्नू ।

**गणद्रव्यापहर्ता विवास्यः (गणो ब्राह्मणसमूहूतदर्थं राजादिप्रेषितं द्रव्यं गणद्रव्यम्) ॥१६७॥**

ब्राह्मण समूहको सम्पत्ति हडप्नेलाई देश निकाला गर्नू ।

**तत्सम्विदं यश्च लङ्घयेत् ॥१६८॥**

ती जसले नियम कानुन मान्दैनन् तिनलाई पनि देश निकाला गर्नू ।

**निक्षेपपहार्यर्थवृद्धिसहितं धनं धनिकस्य दाप्यः ॥१६९॥**

निक्षेप (नासो) हडपेर लिनेले साँवा (सामान) र ब्याज सहित धनीलाई फिर्ता गर्नू ।

**राज्ञा चौरवच्छास्यः ॥१७०॥**



राजाले उसलाई चोरसरह दण्ड दिनू ।

**यश्चानिक्षिप्तं निक्षिप्तमिति ब्रूयात् ॥१७१॥**

निक्षेप वा नासो नराखी राखेको भन्नेलाई पनि चोरसरह दण्ड दिनू ।

**सीमाभेत्तारमुत्तमसाहसं दण्डयित्वा पुनः सीमां लिङ्गान्वितां कारयेत् ॥१७२॥**

सीमामिच्ने वा भत्काउनेलाई उत्तमसाहसको दण्ड दिनू र मिचेको वा भत्काइएको सीमा जस्तातस्तै पार्न लगाउनू ।

**जातिभ्रंशकरस्याभक्षस्य भक्षयिता विवास्यः (जातिभ्रंशं यद्भक्षितं सत्करोति तस्य कामतो भक्षयिता भोक्ता न तु भोजयिता । तद्दण्डस्य पूर्वमुक्तत्वात्) ॥१७३॥**

जातबाट च्यूत हुने खालको निषेधित भोजन गर्नेलाई देश निकाला गर्नू ।

**अभक्षस्याविक्रेयस्य विक्रयी देवप्रतिमाभेदकश्चोत्तमसाहसं दण्डनीयः (अभक्ष्याणि सुरादीनि) ॥१७४॥**

बेच्न निषेध गरिएका खानेपिउनेकुरा बेच्ने, नबेच्ने कुरा बेच्ने र देवमूर्ति फुटाउनेलाई उत्तमसाहस दण्ड दिनू ।

**भिषङ्मिथ्याचरन्नुत्तमेषु पुरुषेषु (राजसम्बन्धिमनुष्येषु दयो वैद्यशास्त्रपथमतिक्रम्य उपचरति) ॥१७५॥**

उत्तम पुरुषलाई गलत तरिकाले उपचार गर्ने वैद्यलाई पनि उत्तमसाहसको दण्ड दिनू ।

**मध्यमेषु मध्यमम् (अराजसंबन्धिषु) ॥१७६॥**

अरु व्यक्तिका हकमा मध्यमसाहसको दण्ड दिनू ।

**तिर्यक्षु प्रथमम् ॥१७७॥**

जनावरको हकमा प्रथमसाहसको दण्ड दिनू ।

**प्रतिश्रुतस्याप्रदायी तद्दापयित्वा प्रथमसाहसं दण्ड्यः ॥१७८॥**



दिने बाचा गरी कुनै कुरा नदिनेलाई उक्त कुरा दिन लगाउनू र प्रथमसाहस दण्ड दिनू ।

**कूटसाक्षिणां सर्वस्वापहारः कार्यः ॥१७९॥**

झूटो साक्षी बस्नेको सर्वस्व हरण गर्नू ।

**उत्कोचोपजीविनां सभ्यानाञ्च ॥१८०॥**

घुस खाने न्यायाधिशको पनि सर्वस्व हरण गर्नू ।

**गोचर्ममात्राधिकां भुवमन्यस्याधीकृतां तस्मादानिर्मोच्यान्यस्य यः प्रयच्छेत्स वध्यः ॥१८१॥**

गोचर्म बराबर जमिन कुनै साहुकोमा धरौटी राखी त्यो ननिखनी अरुकोमा धरौटी राख्नेलाई मृत्युदण्ड दिनू ।

**ऊनां चेत्षोडश सुवर्णान् दण्डय्यः ॥१८२॥**

परिमाण कम छ भने सोह्र सुवर्ण तिराउनू ।

**एकोऽश्नीयाद्यदुत्पन्नं नरः सम्वत्सरं फलम् ।**
**गोचर्ममात्रा सा क्षौणी स्तोका वा यदि वा बहुः ॥१८३॥**

जमिन चाहे धेर होस् वा थोर त्यसबाट हुने उत्पादनले एक जनालाई एक वर्षसम्म खान पुग्दछ भने त्यति जमिनलाई "गोचर्म" भनिन्छ ।

**ययोर्निक्षिप्त आधिस्तौ विवदेतां यदा नरौ ।**
**यस्य भुक्तिः फलं तस्य बलात्कारं विना कृता ॥१८४॥**

दुई जना साहूका बीचमा बन्धक राखिएको एउटै जग्गाका विषयमा विवाद भए नियमपूर्वक धितो लिनेले त्यस जग्गाको उत्पादन उपभोग गर्न सक्दछ ।

**सागमेन तु भोगेन भुक्तं सम्यग्यदा तु यत् ।**
**आहर्ता लभते तत्र नापहार्यं तु तत्क्वचित् ॥१८५॥**

कानुनी तरिकाले किनेको वा दानमा पाएको जग्गा उसले राख्न सक्दछ
यो जग्गा उसबाट जबरजस्ती कहिल्यै लिन सकिन्न ।

**पित्रा भुक्तं तु यद्द्रव्यं भुक्त्याचारेण धर्मतः ।**
**तस्मिन् प्रेते न वाच्योऽसौ भुक्त्या प्राप्तं हि तस्य तत् ॥१८६॥**

बाउबाजेको सम्पत्तिको बैध स्वामित्वको हकभोगको अधिकारी छोरो हो,
तिनको मृत्युमा हकभोगको सम्पत्तिको बारेमा विवाद गर्नु उचित छैन ।

**त्रिभिरेव तु या भुक्ता पुरुषैर्भूर्यथाविधि ।**
**लेख्याभावेऽपि तां तत्र चतुर्थः समवाप्नुयात् ॥१८७॥**

तीन पुस्तादेखि नै स्वामित्व हस्तान्तरण नभएको भएपनि
चौथो पुस्ताले बिना कागज उक्त सम्पत्ति राख्न पाउँदछ ।

**नखिनां श्रृङ्गिणाञ्चैव दंष्ट्रिणामाततायिनाम् ।**

**हस्त्यश्वानां तथान्येषां वधे हन्ता न दोषभाक् ॥१८८॥**
**(नखिनो व्याघ्रादयः, श्रृङ्गिणो गोव्यतिरिक्ता अजादयः, दंष्ट्रिणो वराहादयः।**
**अन्येषां मेषमहिषादीनां...तेषां मरणाभिसंधिनाधावतां वधे..) ।**

आफ्नो रक्षा गर्दा जसले नङ्ग्रा भएका, सिङ भएका र दाह्रा भएका जनावर मार्दछ वा हात्ती,
घोडा वा अरु आफूलाई आक्रमण गर्ने जनावर मार्दछ उसलाई अपराधी मानिदैन ।

**गुरुं वा बालवृद्धौ वा ब्राह्मणं वा बहुश्रुतम् ।**
**आततायिनमायान्तं हन्यादेवाविचारयन् ॥१८९॥**

आफूलाई ज्यानमार्ने उद्देश्यले आक्रमण गर्ने व्यक्तिलाई मार्दा चाहे त्यो गुरु,
बालक, वृद्ध वा धेरै शास्त्र जान्ने ब्राह्मण नै किन नहोस् अपराधी मानिदैन ।

**नाततायिवधे दोषो हन्तुर्भवति कश्चन ।**
**प्रकाशं वाप्रकाशं वा मन्युस्तं मन्युमृच्छति ॥१९०॥**

मार्न खोज्नेलाई एकान्तमा वा खुल्ला स्थानमा मार्नु अपराध होइन
हत्यारा हुनु होइन, रिसमा नै रिस थामिन्छ ।

**उद्यतासिविषाग्निश्च शापोद्यतकरं तथा ।**
**आथर्वणेन हन्तारं पिशुनं चैव राजसु ॥१९१॥ (पिशुनं परदोषनिवेदकं)**

हत्या सात किसिमका हुन्छन्-तरवारले हानेर, विषले, आगोले, श्रापले,
अथर्व वेदका मन्त्रले, नचाहिने कुरा राजालाई लगाएर,... ।

**भार्यातिक्रमणं चैव विद्यात्सप्ताततायिनः ।**
**यशोवित्तहरानन्यानाहुर्धर्मार्थहारकान् ॥१९२॥**
**(भार्या परकीयाममनुरक्तामतिक्रमितुं बलाद्भोक्तुं शीलमस्यासौ ।**
**धर्महरस्तडागादिभेदकः ।**
**अर्थो गृहक्षेत्रादिस्तत्हरश्चेत्यादीमन्यानप्याततायिनो धर्मज्ञा आहुः।)**

जारीमा परी तथा विद्याले । त्यस्तै, यश हर्ने, धन हर्ने, तालआदि फोर्ने र
घरखेत आदि हर्ने पनि आततायी हुन् ।

**उद्देशतस्ते कथितो धरे दण्डविधिर्मया ।**
**सर्वेषामपराधानां विस्तरादतिविस्तरः ॥१९३॥**

हे पृथ्वी ! मैले सबै किसिमका अपराध र दण्डविधि विस्तारपूर्वक बताएँ ।

**अपराधेषु चान्येषु ज्ञात्वा जातिं धनं वयः ।**
**दण्डं प्रकल्पयेद्राजा संमन्त्र्य ब्राह्मणैः सह ॥१९४॥**

ब्राह्मणको सल्लाहमा अन्य अपराधको प्रकृति, अपराधीको उमेर र अपराधको मात्रा (नोक्सान भएको मूल्य) हेरेर राजाले दण्डको विधान गर्नू ।

**दण्ड्यं प्रमोचयन्दण्ड्याद्द्विगुणं दण्डमावहेत् ।**
**नियुक्तश्चाप्यदण्ड्यानां दण्डकारी नराधमः ॥१९५॥**

निन्दनीय न्यायाधिश जसले सजायँ दिनयोग्यलाई सजायँ दिँदैन र नदिनूपर्नेलाई सजायँ दिन्छ उसलाई दण्डजरिवानाको दोब्बर जरिवाना गराउनू ।



**यस्य चौरः पुरे नास्ति नान्यस्त्रीगो न दुष्टवाक् ।**
**न साहसिकदण्डघ्नौ स राजा शक्रलोकभाक् ॥१९६॥**

त्यो राजा जसको राज्यमा न चोर छन्, न त व्यभिचारी (परस्त्रीगामी) न दुराचारी छन्, न डाँका छन्, न त हत्यारा नै उसले त इन्द्रलोक पाउँदछ ।

**॥ समाप्तमिदं पञ्चमोऽध्यायः ॥५॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको पाँचौं अध्याय पूर्ण भयो ।



## षष्ठोऽध्यायः
## (छैटौं अध्याय)

**अथोत्तमर्णोऽधमर्णाद्यथादत्तमर्थं गृह्णीयात् ॥१॥**

लगानीकर्ताले लगानी रकम बराबरको सावाँ ऋणीबाट असुल्नू ।

**द्विकं त्रिकं चतुष्कं पञ्चकञ्च शतं वर्णानुक्रमेण प्रतिमासम् ॥२॥**

ब्याज सयमा दुई, तीन, चार र पाँच प्रतिमहिना वर्णानुक्रमले लिनू ।

**सर्वे वर्णा वा स्वप्रतिपन्नां वृद्धिं दद्युः ॥३॥**

अथवा सबै वर्णसँग सहमति अनुसारको ब्याज लिनू।

**अकृतामपि वत्सरातिक्रमेण यथाविहिताम् ॥४॥**



आपसी सहमति नभए यस्तो ब्याज वर्ष सकिए पछि असुल गर्नू ।

**आध्युपभोगे वृद्ध्यभावः ॥५॥**

धितो राखेको भए ब्याज नलिनू ।

**दैवराजोपघातादृते विनष्टमाधिमुत्तमर्णो दद्यात् ॥६॥**

दैवी विपत्ति पर्दा वा सरकार लागेको अवस्थामा बाहेक धितो लिनेले नोक्सान भएको धितो जस्तातस्तै फिर्ता दिनू ।

**अन्तवृद्धौ प्रविष्टायामपि ॥७॥**

ब्याज र सावाँ बराबर भई तिरेको स्थितिमा पनि धितो फर्काउनू ।

**न स्थावरमाधिमृते वचनात् ॥८॥**

तर अचल सम्पत्ति धितो राखेको भए सावाँ चुक्ता नगरेसम्म धितो फिर्ता नगर्नू ।

**गृहीतधनप्रवेशार्थमेव यत्स्थावरं दत्तं तद्गृहीतधनप्रवेशे दद्यात् ॥९॥**

ऋणीले साँवाब्याज तिरेपछि धितो फिर्ता गर्नू ।

**दीयमानं प्रयुक्तमर्थमुत्तमर्णस्यागृह्णतस्ततः परं न वर्धते ॥१०॥**

धितो लिलामी भई ऋणीले सकार नगरेको अवस्थादेखि ब्याज नलगाउनू ।

**हिरण्यस्य परा वृद्धिर्द्विगुणा ॥११॥**

सुनकर्जामा ब्याज रकम कर्जा रकम भन्दा दोब्बर हुन सक्दछ ।

**धान्यस्य त्रिगुणा ॥१२॥**



अनाजमा ब्याज तेब्बर हुन सक्दछ ।

**वस्त्रस्य चतुर्गुणा ॥१३॥**

वस्त्रमा चार गुणा ।

**रसस्याष्टगुणा (तैलघृतादेः) ॥१४॥**

तेल, घिऊ आदिको आठ गुणा ।

**सन्ततिः स्त्रीपशूनाम् ॥१५॥**

स्त्री र पशुका हकमा जन्मेका सन्तान ब्याजमा लिनू ।

**किण्वकार्पाससूत्रचर्मायुधेष्टकाङ्गाराणामक्षया**
**(एषामक्षय वृद्धिः कदापि न निवर्तत इत्यर्थः) ॥१६॥**

मदीरा, कपास, धागो, छाला, हतियार, ईंटा र अँगारमा असीमित ब्याज हुन्छ ।

**अनुक्तानां द्विगुणा ॥१७॥**

माथि नबताइएका अन्य कुराको दोब्बर ब्याज हुन्छ ।

**प्रयुक्तमर्थं यथा कथञ्चित्साधयन्न राज्ञो वाच्यः स्यात् ॥१८॥**

कानुनीरुपको ऋणको लेनदेन राजाले पुनः प्रमाणित गर्नू पर्दैन ।

**साध्यमानश्चेद्राजानमभिगच्छेत्तत्समं दण्डद्यः ॥१९॥**

सावाँ तिर्न बलजफ्ती गरेको उजूरी राजाकहाँ परे उसलाई त्यती नै बराबर दण्ड तिराउनू ।

**उत्तमर्णश्चेद्राजानमियात्तद्विभावितोऽधमर्णो**
**राज्ञे धनदशभागसम्मितं दण्डं दद्यात् ॥२०॥**



यदि कुनै साहूले राजासामू निवेदन हाल्दछ र आफ्नो मागदाबी प्रमाणित गर्दछ भने ऋणीले सावाँब्याजको दशौं भाग राजालाई जरिवाना तिर्नू ।

**प्राप्तार्थश्चोत्तमर्णो विंशतितममंशम् ॥२१॥**

साहुले बाँकी सावाँब्याज पाए त्यसको बीसौं भाग राजालाई दिनू ।

**सर्वापलाप्येकदेशविभावितोऽपि सर्वं दद्यात् ॥२२॥**

पूरा दाबीमा ऋणीले विवाद गरिरहँदा उसको पक्षमा केही मात्र तिर्न बाँकी रहेको प्रमाणित हुँदा पनि उसले पूरै तिर्नू पर्दछ ।

**तस्य च भावनास्तिस्रो भवन्ति लिखितं साक्षिणः समयक्रिया च ॥२३॥**

दाबीका सम्बन्धमा विवाद भए तीन साधनबाट प्रमाणित गर्नू-लिखत, साछी र अग्निपरीक्षा ।

**ससाक्षिकमाप्तं ससाक्षिकमेव दद्यात् ॥२४॥**

साछीका सामु दिइएको ऋण साछीकै रोहबरमा तिर्नू ।

**लिखितार्थे प्रविष्टे लिखितं पाटयेत् (लिखितार्थो गृहीतमृणम् । तस्मिन्नुत्तमर्णे प्रविष्टे सति तल्लिखितमृणपत्रं छिन्द्यात्) ॥२५॥**

लेनदेन सकिए पछि लेनदेनको लिखत च्यातिदिनू ।

**असमग्रदाने लेख्यासन्निधाने चोत्तमर्णः स्वलिखितं दद्यात् ॥२६॥**

ऋण पूरा चुक्ता नगरी केही तिरेको अवस्थामा र लिखत
सामुन्ने छैन भने ऋणीलाई भर्पाई दिनू ।

**धनग्राहिणि प्रेते प्रव्रजिते द्विदश समाः प्रवसिते वा तत्पुत्रपौत्रैर्धनं देयम् ॥२७॥**

ऋणी परलोक भएमा वा सन्यास लिएमा वा विदेश गएको

बीस वर्ष नाघेमा उक्त ऋण छोरानातीले तिर्नू ।

**नातः परमनिच्छुभिः ॥२८॥**

अरु परका नातेदारले तिनको इच्छा बेगर तिर्ने होइन (तिर्न पर्दैन) ।

**सपुत्रस्य वाप्यपुत्रस्य वा रिक्थग्राही ऋणं दद्यात् ॥२९॥**

छोरा हुने वा नहुनेको सम्पत्ति जसले खान्छ उसले ऋणको सावाँब्याज तिर्नू ।

**निर्धनस्य स्त्रीग्राही (यदि धनाभावे रिक्थग्राही नास्ति तदा यो यदीयां स्त्रियं भार्यात्वेन स्वकरोति स तदीयमृणं दद्यात्) ॥३०॥**

सम्पत्ति नहुँदा विधवा जसले स्याहार्दछ उसले ऋण तिर्नू ।

**न स्त्री पतिपुत्रकृतम् ॥३१॥**

पति र पुत्रले लिएको ऋण तिर्न स्त्री बाध्य छैन ।

**न स्त्रीकृतं पतिपुत्रौ ॥३२॥**

स्त्रीले लिएको ऋण तिर्न पति र पुत्र बाध्य छैनन् ।

**न पिता पुत्रकृतम् ॥३३॥**

छोराले लिएको ऋण तिर्न पिता बाध्य छैन ।

**अविभक्तैः कृतमृणं यस्तिष्ठेत् स दद्यात् ॥३४॥**

सगोलमा लिएको ऋण जो बाँचेको छ उसले तिर्नू ।

**विभागात्प्राक्पित्रा कृतमृणमविभक्तानां भ्रातृणां चकारात्पौत्राणां सम्भूय देयं भवति (इति भावार्थ मूलप्रतिः अस्पष्ट) ॥३५॥**



बाबुले लिएको ऋण दाजुभाईले अंशबण्डा हुनु अघि तिर्नू वा छोराहरुले तिर्नू ।

**विभक्ताश्च दायानुरूपमंशम् ॥३६॥**

अंशबण्डा पछि आफ्नो अंश अनुसार दामासाहीले तिर्नू ।

**गोपशौण्डिकशैलूषरजकव्याधस्त्रीणां पतिर्दद्यात् (तदधीनवृत्तित्वात्) ॥३७॥**

गोठालो, मदीरा व्यवसायी, नर्तक, धोबी र ब्याधाका स्त्रीले लिएको ऋण तिनका पतिले तिर्नू ।

**वाक्प्रतिपन्नं कुटुम्बिना देयम् ॥३८॥**

म तिर्छु भनी वचन दिएको ऋण नातेदारले तिर्नू ।

**कस्यचित्कुटुम्बार्थे कृतञ्च ॥३९॥**

कुनै कुटुम्बका लागि खर्च भएको ऋण पनि (कुटुम्बले तिर्नू ) ।

**यो गृहीत्वा ऋणं सर्वं श्वो दास्यामिति सामकम् ।**
**न दद्याल्लोभतः पश्चात्तथा वृद्धिमवाप्नुयात् ॥४०॥**
**( यः सर्वमृणं हिरण्यं धान्यादि गृहीत्वा श्वः परश्वो वेत्यादि कृतेऽवधौ सामकं सममेव दास्यामिति प्रतिज्ञाय पश्चाल्लोभादिना कृतऽवधौ न दद्यात्) ।**

केही दिनपछि तिर्छु भनी कबुल गरी रकम लैजान्छ र लोभले भनेको बेलामा तिर्दैन भने त्यसपछि उसले ब्याज तिर्नू पर्दछ ।

**दर्शने प्रत्यये दाने प्रातिभाव्यं विधीयते ।**
**आद्यौ तु वितये दाप्यावितरस्य सुता अपि ॥४१॥**

जमानी राख्दा उपस्थिति, इमान्दारिता र तिर्नलाई तोकिएर राखिन्छ । ऋणी र जमानीले ऋण तिर्न नसके तिनका छोराले तिर्नू ।

**बहवश्चेत्प्रतिभुवो दद्युस्तेऽर्थं यथाकृतम् ।**
**अर्थेऽविशेषिते त्वेषु धनिकच्छन्दतः क्रिया ॥४२॥**
**(यथाकृतमहमेतादर्थं दास्यामीति स्वस्वाभ्युपगतमर्थं दद्युः । यदा तु समांशतया विषमांशतया वार्थो न विशेषितः संपूर्णो वा प्रत्येकमभ्युपगतस्तदा प्रतिभुषु धनिकच्छन्दतो धनिकेच्छया क्रियार्थादानं भवति । यस्मादिच्छेत्तस्माद्गृह्णीयादित्यर्थः ।)**

धेरै जमानी भए सबैले कबुल गरे अनुसारको ऋण तिर्नू । अलगअलग जमानी बसेको भए धनीको सहजता हेरी ती जमानी बस्ने मध्येबाट साहुले लिन सक्छ ।

**यमर्थं प्रतिभूर्दद्याद्धनिकेनोपपीडितः ।**
**ऋणिकस्तं प्रतिभुवे द्विगुणं दातुमर्हति ॥४३॥**

यदि साहुले जमानी बस्नेलाई हैरान पार्दछ र ऋण तिराउँदछ भने ऋणीलाई जमानीले कबुलेको रकमको दोब्बर तिराउनू ।

**॥ समाप्तमिदं षष्ठोऽध्यायः ॥६॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको छैटौं अध्याय पूर्ण भयो ।



## सप्तमोऽध्यायः
## (सातौं अध्याय)

**अथ लेख्यं त्रिविधम् ॥१॥**

लिखत तीन किसिमको हुन्छ ।

**राजसाक्षिकं ससाक्षिकमसाक्षिकं च ॥२॥**

राजाद्वारा प्रमाणित, अरु साक्षीबाट प्रमाणित र अप्रमाणित ।

**राजाधिकरणे तन्नियुक्तकायस्थकृतं तदध्यक्षकरचिह्नितं राजसाक्षिम् ॥३॥**

न्यायालयमा राजाद्वारा नियुक्त अधिकारीबाट राजाज्ञानुसार आफ्नै
हातले प्रमाणित लिखतलाई राजाद्वारा प्रमाणित लिखत भनिन्छ ।

**(तस्यां सभायां योऽध्यक्षः प्राड्विवाकस्य करचिह्नेन युक्तम् ।) ।**
**यत्र क्वचन येन केनचिल्लिखितं साक्षिभिः स्वहस्तचिह्नितं ससाक्षिकम् ॥४॥**



जहाँसुकै जोसुकैले लेखेको साक्षीहरुले आफैँले हस्ताक्षर गरेको लिखतलाई साक्षी प्रमाणित लिखत भनिन्छ ।

**(यत्र क्वचनेत्यनेन राजसभाया अनि यमः) ।**
**स्वहस्तलिखितमसाक्षिकम् ॥५॥**

आफैँले आफ्नै हातले लेखेको लिखतलाई अप्रमाणित लिखत भनिन्छ ।

**तद्बलात्कारितमप्रपाणम् ॥६॥**

बलपूर्वक लेखिएको लिखतलाई प्रमाण मानिँदैन ।

**उपधिकृताश्च सर्व एव ॥७॥**

छलकपट गरी लेखिएको लिखत पनि प्रमाण हुँदैन ।

**(उपाधिना छलेन कृताः सर्व एव लेख्य अप्रमाणम् )।**
**दूषितकर्मदुष्टसाक्ष्यङ्कितं ससाक्षिकमपि॥८॥**

प्रमाणित भए पनि नष्ट गरिएको, साक्षीलाई घुस खुवाएर सही गराइएको
र अक्षर केरमेट गरिएको लिखत प्रमाण हुँदैन ।

**(दूषिता लोभादिहेतुभिर्वादिना । कर्मदुष्टाच्चौर्यादिकर्मभिर्ये स्वयमेव दुष्टातादेशैः साक्षिभिर्यदङ्कितं तत्ससाक्षिकमप्यप्रमाणम्) ।**
**तादृग्विधेन लेखकेन लिखितं च॥९॥**

यही विधिले लेखकले लेखेको लिखत पनि प्रमाण हुँदैन ।

**स्त्रीबालास्वतन्त्रमत्तोन्मत्तभीतताडितकृतं च॥१०॥**

स्त्री, बालक, आश्रित जन, नशामा मत्त, पागल, डराएको र शारीरिक
यातना पाएर लेखिएका लिखत प्रमाण हुँदैन ।



**देशाचारविरुद्धं व्यक्ताधिविधिलक्षणमलुप्तक्रमाक्षरं प्रमाणम्॥११॥**
**(व्यक्ताधिविधिलक्षणमिति पाठे व्यक्तस्य स्पष्टमाधिविधेराधीकरणस्य लक्षणं..यस्मिन्नित्यर्थः) ।**

देशाचार विरुद्ध नलेखिएको, प्राकृतिक न्याय विरुद्ध नजाने, स्पष्टसँग क्रमैले व्यहोरा
उल्लेख गरिएको र स्पष्ट अक्षर भएको लिखत प्रमाण हुन्छ ।

**वर्णैश्च तत्कृतैश्चिह्नैः पत्त्रैरेव च युक्तिभिः ।**
**सन्दिग्धं साधयेल्लेख्यं तद्युक्तिप्रतिरूपकैः॥१२॥**

लिखतका अक्षर, दिएका चिन्ह, पत्र आदिका विषयमा शङ्का उत्पन्न भए निजलाई
अर्को नक्कली लिखत लेख्न लगाई त्योसँग भिडाउनू ।

**(तत्कृतैर्वर्णैस्तल्लिखितैः पत्राक्षरैः । तत्कृतैश्चिह्नैः श्रीकारादिभिः । तत्कृतैः पत्रैः पत्रान्तरश्चाक्षरसादृश्य- निरूपणेन । युक्तिभिः... अनयोरेवंविधो व्यवहारोऽस्मिन्देशेऽस्मिन्काले समाव्यत इत्यादिभिः । तथा तस्मिन्पत्रे या युक्तयो लिखनपरिपाषस्तासां प्रतिरूपितानि सदृशलिखनानि तैश्च साधयेत्) । यच्चर्णी धनिको वापि साक्षी वा लेखकोऽपि वा । म्रियते तच्च तल्लेख्यं तत्स्वहस्तैः प्रसाधयेत्॥१३॥**

ऋणी, साहु, साक्षी वा लेखकको मृत्यु भएको अवस्थामा विज्ञद्वारा तिनको लिखतलाई परीक्षण गराउनू ।

**समाप्तमिदं सप्तमोऽध्यायः ॥७॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको सातौं अध्याय पूर्ण भयो ।



## अष्टमोऽध्यायः
## (आठौं अध्याय)

**अथासाक्षिणः ॥१॥**

अब असाक्षी (साक्षी नमानिनेका बारेमा) बताइन्छ ।

**न राजश्रोत्रियप्रव्रजितकितवतस्करपराधीनस्त्रीबालसाहसिकातिवृद्ध-मत्तोन्मत्ताभिशस्तपतितक्षुत्तृष्णार्तव्यसनिरागान्धाः ॥२॥**

राजा, श्रोत्रिय ब्राह्मण, सन्यासी, जुवाडे, चोर, अरुको अधिनमा रहेको, स्त्री, बालक, जल्लाद् आदि जस्ता साहसिक कार्यगर्ने, अति वृद्ध, नशालु, पागल, अपयश कमाएको, पतित, भोको, प्यासो, व्यसनी, शोकमा डुबेको र खराब आचरणमा लीन साक्षी हुन सक्दैनन् ।

**रिपुमित्रार्थसम्बन्धिविकर्मदृष्टदोषसहायाश्च ॥३॥**

न त शत्रु, साथी, त्यो मुद्दामा बढी चासो लिने, खराब आचरण भएको, दोषी र सम्बन्धी (नातेदार) नै साछी बस्न सक्दछन् ।



**अनिर्दिष्टस्तु साक्षित्वे यश्चोपेत्य ब्रूयात् ॥४॥**

जसलाई तोकिएको छैन तर फुत्त उपस्थित भई साक्षी बस्दछु भन्छ त्यो पनि साक्षी हुन सक्दैन ।

**एकश्चासाक्षी ॥५॥**

एक जनमात्र साक्षी हुन सक्दैन ।

**स्तेयसाहसवाग्दण्डपारुष्यसंग्रहणेषु साक्षिणो न परीक्ष्याः ॥६॥**

चोरी, झगडा, अपशब्द प्रयोग, आक्रमण र व्यभिचारमा कडाइका साथ साक्षीको परीक्षण गर्नु पर्दैन ।

**अथ साक्षिणः ॥७॥**

अब साक्षी हुन (बस्न) सक्नेका बारेमा बताइन्छ ।

**कुलजा वृत्तवित्तसम्पन्नायज्वानस्तपस्विनः पुत्रिणो धर्मज्ञा अधीयानाः सत्यवन्तस्त्रैविद्यवृद्धाश्च ॥८॥**

कुलिन, चरित्र र धन सम्पन्न, त्यागी, तपस्वी, पुत्रवान्, धार्मिक, अध्ययनशील, सत्यनिष्ठ, तीन वेद अध्ययन गरेको र पाको (वृद्ध अस्सी वर्ष कम) व्यक्ति साक्षी हुन सक्दछ ।

**अभिहितगुणसम्पन्न उभयानुमत एकोऽपि ॥९॥ (अभिहितैः कुलजन्मादिभिर्गुणैः सम्पन्नो यद्युभाभ्यामर्थिप्रत्यर्थिभ्यामप्युगम्यते तदा एकोऽपि) ।**

उपर्युक्त गुण भएको एउटै व्यक्ति पनि साक्षी हुन सक्दछ ।

**द्वयोर्विवदमानयोर्यस्य पूर्ववादस्तस्य साक्षिणः प्रष्टव्याः ॥१०॥**

दुई बादीका बीचमा विवाद हुँदा ती पक्षका साक्षी जाँच गर्नू, जसबाट मुद्दा अगाडी बढ्दछ ।



**(तत्र यो मदीयं धारयसीति  ब्रूते स पूर्ववादी पूर्ववक्षी वादी) । आधर्यं कार्यवशाद्यत्र पूर्वपक्षास्य भवेत्तत्र प्रतिवादिनोऽपि ॥११॥**

जब आरोपको खण्डन गरिन्छ सत्यतथ्यलाई मानिन्न
तब प्रतिवादीका साक्षीलाई राम्ररी जाँच गर्नुपर्दछ ।

**उद्दिष्टसाक्षिणि मृते देशान्तरगते वा तदभिहितश्रोतारः प्रमाणम् ॥१२॥**

तोकिएका साक्षीको मृत्यु भएमा वा उ परदेश गएको अवस्थामा
यो कुरा थाहा पाउनेले प्रमाण पेश गर्न सक्दछ ।

**समक्षदर्शनत्साक्षी श्रवणाद्वा ॥१३॥**

सबै साक्षीका दुई किसिमका प्रमाण हुन्छन्-देखेको वा सुनेको ।

**साक्षिणश्च सत्येन पूयन्ते ॥१४॥**

सत्य प्रमाण दिएमा साक्षी आरोपबाट मुक्त हुन्छन् ।

**(यत्र पूर्वपक्षस्य ऋणाद्यभियोगस्य कार्यवशात्प्रतिदानादिवशात्... आधार्यमधरीभावोऽसाध्यता भवति ।) वर्णिनां यत्र वधस्तत्रानृतेन ॥१५॥**

जब चार वर्णमध्ये कसैको मृत्युमा झूटो प्रमाण दिइन्छ तब.. ।

**तत्पावनाय कूष्माण्डीभिर्द्विजोऽग्निं जुहुयात् ॥१६॥**

द्विजका हकमा आगो खन्याई कूष्माण्डी परीक्षा गर्नू ।

**शूद्र एकाह्निकं गोदशकस्य ग्रासं दद्यात् ॥१७॥**

शुद्रका हकमा उसलाई एक दिनमा दश गाईलाई (शपथ ?) खुवाउन लगाउनू ।

**स्वभावविकृतौ मुखवर्णविनाशेऽसम्बद्धप्रलापे च कूटसाक्षिणं विद्यात् ॥१८॥**



झूटो साक्षीलाई उसको बदलिएको मुखाकृतिले, बदलिएको रङले र विषयवस्तु माथिको घुमाउरो कुराकानीले चिन्न सकिन्छ ।

**साक्षिणश्चाहूयादित्योदयो कृतशपथान्पृच्छेत् ॥१९॥**

न्यायाधिशले साक्षीलाई सूर्योदयका बेलामा बोलाउनू र शपथ खुवाई तिनलाई जाँच गर्नू ।

**ब्रूहीति ब्राह्मणं पृच्छेत् ॥२०॥**

ब्राह्मणलाई “बताऊ” भन्नू ।

**सत्यं ब्रूहीति राजन्यम् ॥२१॥**

क्षत्रियलाई “सत्य बताऊ” भन्नू ।

## गोबीजकाञ्चनैर्वैश्यम् ॥२२॥

वैश्यलाई गाई, बीउविजन र सुनको शपथ दिलाउनू (भूटो बोले यी निष्फल हुन्) ।

## (गोबीजकाञ्चनानि ते निष्फलानीति शापितं वैश्यं पृच्छेत् ।)
## सर्वमहापातकैस्तु शूद्रम् ॥२३॥

शुद्रलाई भरूटो बोले सबै महापाप लागुन् भनी शपथ खुवाउनू ।

## साक्षिणश्च श्रावयेत् ॥२४॥

साक्षीहरुलाई यसरी (तल उल्लेख गरिए बमोजिम) शपथ खुवाउनू ।

## ये महापातकिनां लोका ये चोपपातकिनां ते कूटसाक्षिणामपि ॥२५॥

जेजति महापापीका लोक छन् र जेजति उपपापीका लोक छन्
ती भूटो साक्षीका लागि हुनेछन् ।



## जननमरणान्तरे कृतसुकृतहानिश्च ॥२६॥

अनि जन्मदेखि मरणसम्म जेजति शुभकर्म गरेको छ त्यो नष्ट होस् भनी शपथ लिन लगाउनू ।

## सत्येनादित्यस्तपति ॥२७॥

सत्यले नै सूर्य प्रकाशित हुन्छ ।

## सत्येन भाति चन्द्रमाः ॥२८॥

सत्यले चन्द्रमा चम्कन्छ ।

## सत्येन वाति पवनः ॥२९॥

सत्यले हावा बहन्छ ।

**सत्येन भूर्धारयति ॥३०॥**

सत्यले नै पृथ्वीले धारण गर्दछिन् ।

**सत्येनापस्तिष्ठन्ति ॥३१॥**

सत्यले नै पानी बहन्छ ।

**सत्येनाग्निः ॥३२॥**

सत्यले अग्नि बल्दछ ।

**खञ्च सत्येन ॥३३॥**

आकाश (वातावरण) पनि सत्यले अडिएको छ ।

**सत्येन देवाः ॥३४॥**



सत्यले देवता टिकेका छन् ।

**सत्येन यज्ञाः ॥३५॥**

यज्ञ सत्यमै टिकेको छ ।

**अश्वमेधसहस्रञ्च सत्यञ्चच तुलया धृतम् ।**
**अश्वमेधसहस्राद्धि सत्यमेव विशिष्यते ॥३६॥**

सहस्र अश्वमेध र सत्यलाई तुलामा जोखे सहस्र अश्वमेध भन्दा सत्यको पल्ला भारी हुन्छ ।

**जानन्तोऽपि हि ये साक्ष्ये तूर्ष्णींभूता उपासते ।**
**ते कूटसाक्षिणां पापैस्तुल्या दण्डेन चाप्यथ ।**
**एवं हि साक्षिणः पृच्छेद्वर्णानुक्रमतो नृपः ॥३७॥**

ती जो सत्यसँग परिचित छन् र प्रमाण पेश गर्न तोकिएका छन् चुपचाप उभिन्छन् भने ती पनि अपराधी सरह हुन् र गलत साक्षी सरहको सजायँका योग्य हुन् । त्यसैले राजाले वर्ण अनुसार साक्षीलाई जाँच गर्नू ।

**यस्योचुः साक्षिणः सत्यां प्रतिज्ञां स जयी भवेत् ।**
**अन्यथावादिनो यस्य ध्रुवस्तस्य पराजयः ॥३८॥**

ती अभियुक्त जसको बयान साक्षीहरूले सत्य भएको बताउँदछन् तिनका कारण उसले मुद्दा जित्न सक्दछ भने उसले दिएको बयान साक्षीहरूले असत्य भएको बताउँछन् भने उसले निश्चय नै हार्दछ ।

**बहुत्वं प्रतिगृह्णीयात्साक्षिद्वैधे नराधिपः ।**
**समेषु च गुणोत्कृष्टान्गुणिद्वैधेर्द्विजोत्तमान् ॥३९॥**

यदि प्रमाणमा पनि विवाद भयो भने राजाले बहुसंख्यक साक्षीका आधारमा मुद्दा छिन्नू । यदि साक्षीको संख्या पनि बराबर भयो भने बढी नैतिकताका आधारमा र यदि नैतिकतामा समान देखियो भने उत्तम द्विजका प्रमाणका आधारमा मुद्दा छिन्नू ।



**यस्मिन्यस्मिन्विवादे तु कूटसाक्ष्यनृतं वदेत् ।**
**तत्तत्कार्यं निवर्तेत कृतं चाप्यकृतं भवेत् ॥४०॥**

यदि झूटो साक्षीले गलत प्रमाण पेश गर्दछ भने राजाले निर्णय उल्टाउनू र जे गरिएको हो त्यसलाई नगरेको मान्नू ।

**॥ समाप्तमिदमष्टमोऽध्यायः ॥८॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको आठौं अध्याय पूर्ण भयो ।



## नवमोऽध्यायः
## (नवौं अध्याय)

**अथ समयक्रिया ॥१॥**

अब शपथ एवं छानबिनका विषयमा बताइन्छ ।

**राजद्रोहसाहसेसु यथाकामम् ॥२॥**

राजद्रोह र दङ्गामा अन्धाधुन्द (कारवाही) गर्नू ।

**निक्षेपस्तेयेष्वर्थप्रमाणम् ॥३॥**

निक्षेप चोरीमा दाबी बमोजिमको मूल्य तिराउनू ।

**सर्वेष्वेवार्थजातेषु मूल्यं कनकं कल्पयेत् ॥४॥**



यस्ता सबै किसिमका मुद्दामा मूल्य सुनमा अनुमान गर्नू ।

**तत्र कृष्णलोने शूद्रं दूर्वाकरं शापयेत् ॥५॥**

अपराध (चोरी आदि) को मूल्य एक कृष्णल भन्दा कम भए शुद्रलाई
दूबोको टुप्पो समाएर शपथ खुवाउनू ।

**द्विकृष्णलोने तिलकरम् ॥६॥**

दुई कृष्णलमा तिल समाएर शपथ खुवाउनू ।

**त्रिकृष्णलोने रजतकरम् ॥७॥**

तीन कृष्णलमा चाँदी समाएर शपथ खुवाउनू ।

**चतुःकृष्णलोने सुवर्णकरम् ॥८॥**

चार कृष्णलमा सुन समाएर शपथ खुवाउनू ।

**पञ्चकृष्णलोने सीतोद्धृतमहीकरम्॥९॥**

पाँच कृष्णलमा हलोले जोतेको डोबको माटो लिएर शपथ खुवाउनू ।

**सुवर्णार्धोने कोशो देयः शूद्रस्य॥१०॥**

आधा सुवर्णमा पवित्र जलको तर्पण गरी शपथ खुवाउनू ।

**ततः परं यथार्हं धटाग्न्युदकविषाणामन्यतमम्॥११॥**

त्यसभन्दा (आधा सुवर्ण) माथि न्यायाधिशले बिचार गरी तुला, अग्नि, पानी, विष वा अन्य कठीन परीक्षा लिनू।

**द्विगुणेऽर्थे यथाभिहितासमयक्रिया वैश्यस्य॥१२॥**



वैश्यका हकमा माथि बताइएका विधानमा दोब्बर गर्न लगाउनू ।

**त्रिगुणे राजन्यस्य॥१३॥**

क्षत्रियका हकमा तेब्बर गर्न लगाउनू ।

**कोशवर्जं चतुर्गुणे ब्राह्मणस्य॥१४॥**

ब्राह्मणका हकमा पवित्र जलको तर्पण बाहेकमा चौबर गर्न लगाउनू ।

**न ब्राह्मणस्य कोशं दद्यात्॥१५॥**

ब्राह्मणलाई पवित्र जल समाएर शपथ गर्न नलगाउनू ।

**अन्यत्रगामिकाल समयनिबन्धनक्रियातः॥१६॥**

उसले भविष्यका केही लेनदेनमा राम्रो गर्ला भन्ने प्रारम्भिक प्रमाणमा बाहेक...।

**कोशस्थाने ब्राह्मणं सीतोद्धृतमहीकरमेव शापयेत् ॥१७॥**

पवित्र जलका स्थानमा हलोको डोबको माटोले शपथ लिन लगाउनू ।

**प्रागदृष्टदोषं स्वल्पेऽप्यर्थे दिव्यानामन्यतममेव कारयेत् ॥१८॥**

पहिले नै दोषी पाएकाको हकमा थोरै मूल्यको अपराधमा पनि अरु भैँ कठीन परीक्षा लिनू ।

**सत्सु विदितं सच्चरित्रं न महत्यर्थेऽपि ॥१९॥**

चाहे विषयवस्तु धेरै महत्वको नै किन नहोस् सच्चरित्रको
भनी चिनिएको व्यक्ति भए उसको कठीन परीक्षा नलिनू ।

**अभियोक्ता वर्तयेच्छीर्षम् ॥२०॥**

दाबी तिर्न कबुल गरेको घोषणा गर्न लगाउनू ।



**अभियुक्तश्च दिव्यं कुर्यात् ॥२१॥**

प्रतिवादीले कठीन परीक्षाबाट गुज्रनै पर्दछ ।

**राजद्रोहसाहसेषु विनापि शीर्षवर्तनात् ॥२२॥**

राजद्रोह र दङ्गामा (कठीन परीक्षा गराउन सकिन्छ)
दाबी तिर्न (प्रतिबादी) नहुँदा पनि कबुल गराउनू (?) ।

**स्त्रीब्राह्मणविकलासमर्थरोगिणां तुला देया ॥२३॥**

स्त्री, ब्राह्मण एवं विकलाङ्ग, असमर्थ र रोगीलाई तुला परीक्षा गर्नू ।

**सा च न वाति वायौ ॥२४॥**

तर हावा चलेका बेलामा यो कार्य नगर्नू ।

**न कुष्ठ्यसमर्थलोहकाराणामग्निर्देयः ॥२५॥**

कुष्ठ रोगी, असमर्थ र लोहकारलाई अग्नि परीक्षा नगराउनू ।

**शरद्ग्रीष्मयोश्च ॥२६॥**

शरद र ग्रीष्म ऋतुमा पनि नगराउनू ।

**न कुष्ठिपैत्तिकब्राह्मणानां विषं देयम् ॥२७॥**

कुष्ठ रोगी, पित्त रोगी र ब्राह्मणलाई विष परीक्षा नगराउनू ।

**प्रावृषि च ॥२८॥**

वर्षाकालमा पनि विष परीक्षा नगराउनू ।



**न श्लेष्मव्याध्यर्दितानां भीरूणां श्वासकासिनामम्बुजीविनाञ्चोदकम् ॥२९॥**

कफजन्य रोगी, डरछेरुवा, दमको रोगी र पानीबाट जीविका चलाउने (माझी आदि) लाई जल परीक्षा नलिनू ।

**हेमन्तशिशिरयोश्च ॥३०॥**

हेमन्त र शिशिर ऋतुमा पनि जल परीक्षा नलिनू ।

**न नास्तिकेभ्यः कोशो देयः ॥३१॥**

नास्तिकलाई पवित्र जल खुवाएर शपथ नखुवाउनू ।

**न देशे व्याधिमरकोपसृष्टे च ॥३२॥**

देशमा रोगव्याधि र महामारी फैलिएको बेलामा पवित्र जल खुवाएर शपथ नखुवाउनू ।

**सचैलं स्नातामाहूय सूर्योदय उपोषितम् ।**
**कारयेत्सर्वदिव्यानि देवब्राह्मणसन्निधौ ॥३३॥**

अगिल्लो दिन निराहार बसेको प्रतिवादीलाई सवस्त्र नुहाउन लगाई सूर्योदय कालमा  ईश्वर र ब्राह्मणको रोहबरमा सबै दिव्य गराउनू ।

**॥ समाप्तमिदं नवमोऽध्यायः ॥९॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको नवौं अध्याय पूर्ण भयो ।



## दशमोऽध्यायः
## (दशौँ अध्याय)

**अथ घटः ॥१॥**

अब तुला परीक्षाका बारेमा बताइन्छ ।

**चतुर्हस्तोच्छ्रितो द्विहस्तायतः ॥२॥**

तेर्सा दुई वटा दुई हात लामा डण्डीलाई जमिनभन्दा चार हात माथि दुई ठाउँमा बाँध्नू ।

**तत्र सारवृक्षोद्भवा पञ्चहस्तायतोभयतः शिक्या तुला ॥३॥**

त्यो डण्डीको सन्तुलन बलियो पाँच हात लामो काठले बनाइन्छ र
यसका दुवैतिर दुई दराजु (फलामको अङ्कुशे हाली) राख्नु पर्दछ ।

**ताञ्च सुवर्णकारकाँस्यकाराणामन्यतमो बिभृयात् ॥४॥**



यसलाई सुनार र कांस्यकारले दुवैतिर बराबर बनाएको हुनुपर्दछ ।

**तत्र चैकस्मिन्शिक्ये पूरुषमारोपयेद् द्वितीये प्रतिमानं शिलादि ॥५॥**

यसको एकातिर परीक्षा दिनेलाई राख्नू अर्कोतिर ढुङ्गा आदि समान तौल राख्नू ।

**प्रतिमानपुरुषौ समधृतौ सुचिह्नितौ कृत्वा पुरुषमवतारयेत् ॥६॥**

त्यो र मानिसलाई बराबर तौल बनाई चिह्न लगाई मानिसलाई तराजूबाट तल ओराल्नू ।

**घटञ्च समयेन गृह्णीयात् ॥७॥**

त्यसपछि ( न्यायाधिश) ले तुलाको शपथ खुवाई निम्न कुरा गर्दछ ।

**तुलाधारञ्च ॥८॥**

तुलाको तौल हेर्न खटाइएको व्यक्तिलाई पनि ।

**ब्रह्मघ्नां ये स्मृता लोका ये लोकाः कूटसाक्षिणाम् ।**
**तुलाधारस्य ते लोकास्तुलां धारयतो मृषा ॥९॥**

ब्रह्महत्याराका लागि जुन लोक हो भूटो साक्षीका लागि जुन लोक हो त्यही लोक तौल हेर्नेका लागि पनि हो जसले यसमा धाँदली गर्दछ ।

**धर्मपर्यायवचनैर्घट इत्यभिधीयसे ।**
**त्वमेव घट जानीषे न विदुर्यानि मानुषाः ॥१०॥**

धर्मको अर्को शब्द तुला हो भनी जानिन्छ, हे तुला ! तिमिलाई मानिसले के जान्दछ र ! ।

**व्यवहाराभिशस्तोऽयं मानुषस्तुल्यते त्वयि ।**
**तदेनं संशयादस्माद्धर्मतस्त्रातुमर्हसि ॥११॥**



यो मानिस जो दोषारोपी छ तिमिमा जोखिएको छ । त्यसैले हजुर विनम्रतापूर्वक उसको हैरानीमा कानुनको सञ्चार गर्नू होस् ।

**ततस्त्वारोपयेच्छिक्ये भूय एवाथ तं नरम् ।**
**तुलितो यदि वर्धेत ततः स धर्मतः शुचिः ॥१२॥**

त्यसपछि न्यायाधिशले फेरी आरोपीलाई पल्लामा राख्दछ । यदि उ यसमा बढ्दछ भने उ आरोपबाट मुक्त हुन्छ ।

**शिक्यच्छेदाक्षभङ्गेषु भूयस्त्वारोपयेन्नरम् ।**
**एवं निःसंशयं ज्ञानं यतो भवति निर्णयः ॥१३॥**

बाँधेको छिनेमा, तेर्सो डण्डी भाँचिएमा उसलाई फेरी एकपटक तराजूमा राख्नू । यसरी तथ्य पत्ता लगाउनू र निर्णय लिनू ।

**॥ समाप्तमिदं दशमोऽध्यायः ॥१०॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको दशौं अध्याय पूर्ण भयो ।



## एकादशोऽध्यायः
## (एघारौं अध्याय)

**अथाग्निः ॥१॥**

अब अग्नि परीक्षा बताइन्छ ।

**षोडशाङ्गुलं तावदन्तरं मण्डलसप्तकं कुर्यात् ॥२॥**

त्यस पछि सोह्र अङ्गुल चौडाईका त्यति नै फरकमा सात वटा घेरा बनाउनू ।

**ततः प्राङ्मुखस्य प्रसारितभुजद्वयस्य सप्ताश्वत्थपत्राणि करयोर्दद्यात् ॥३॥**

त्यसपछि पूर्वतिर फर्कीएको र पसारेको उसका हातमा सात वटा पिपलका पात राखि दिनू ।

**तानि च करद्वयसहितानि सूत्रेण वेष्टयेत् ॥४॥**



ती पात र दुवै हात धागोले बाँधि दिनू ।

**ततस्तत्राग्निवर्णं लोहपिण्डं पञ्चाशत्पलिकं समं न्यसेत् ॥५॥**

त्यसपछि पचास पला तौलको मुलायम फलामको तताएर
रातो पारेको डल्लो उसका हातमा राखिदिनू ।

**तमादाय नातिद्रुतं नातिविलम्बितं मण्डलेषु पदन्यासं कुर्वन्व्रजेत् ॥६॥**

यो (लिएर उसले नत विस्तार न छिटो गरी ती सातवटा घेरा हुँदै हिँड्नू ।

**ततः सप्तमं मण्डलमतीत्य भूमौ लोहपिण्डं जह्यात् ॥७॥**

सातौं घेरा पार गरेपछि फलामको डल्लो भुईंमा राख्नू ।

**यो हस्तयोः क्वचिद्दग्धस्तमशुद्धं विनिर्दिशेत् ।**
**न दग्धः सर्वथा यस्तु स विशुद्धो भवेन्नरः ॥८॥**

जसको हात अलिकति पनि जल्दछ उ अपराधी हुन्छ र जसको जलेको छैन उ निर्दोष हुन्छ ।

**भयाद्वा पातयेद्यस्तु दग्धो वा न विभाव्यते ।**
**पुनस्तं हारेयेल्लोहं समयस्याविशोधनात् ॥९॥**

डरले डल्लो खसाएमा वा जलेनजलेकोमा शङ्का भई निर्णय गर्न नसकिने
भए उसलाई त्यो डल्लो पुनः लिएर यो कार्य गराउनू ।

**करौ विकृदितव्रीहेस्तस्यादावेव लक्षयेत् ।**
**अभिमन्त्र्यास्य करयोर्लोहपिण्डं ततो न्यसेत् ॥१०॥**

यो परीक्षा शुरु गर्नू अघि न्यायाधिशले उसका हातमा केही चामल दल्न लगाएर वा केही चिह्न लगाएर अनि फलामको डल्लो राख्न लगाउनू र निम्न मन्त्र पढी यो कार्य गराउनू ।

**त्वमग्ने सर्वभूतानामन्तश्चरसि साक्षिवत् ।**
**त्वमेवाग्ने विजानीषे न विदुर्यानि मानवाः ॥११॥**

हे अग्नि ! हजुर सबै प्राणी भित्र साक्षिभैं रहनु भएको छ, कुनै
मानवले हजुरको अस्तित्व जान्दैनन् ।



**व्यवहाराभिशस्तोऽयं मानुषः शुद्धिमिच्छति ।**
**तदेनं संशयादस्माद्धर्मतस्त्रातुमर्हसि ॥१२॥**

यो मानिसमाथि अभियोग लागेको छ र त्यसबाट सफाई चाहन्छ । त्यसैले यसमा कानूनको सञ्चार गराई उसको परीक्षामा सफल बनाउनु होस् ।

## ॥ समाप्तमिदेकादशोऽध्यायः ॥११॥



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको एघारौं अध्याय पूर्ण भयो ।



## द्वादशोऽध्यायः
## (बाह्रौँ अध्याय)

**अथोदकम् ॥१॥**

अब जल परीक्षा बताइन्छ ।

**पङ्कशैवालदुष्टग्राहमत्स्यजलौकादिवर्जितेऽम्भसि ॥२॥**

हिलो, लेउ र सौँस-गोही जस्ता जलचर आदि तथा माछा, जूका आदिले
रहित जलमा (आरोपीले छिर्नु पर्दछ) ।

**(दुष्टाः कर्कटादयः । ग्राहाः शिशुमारादयः ।) तत्रानाभिमग्नस्यारागद्वेषिणः पुरुषस्यान्यस्य जानुनी गृहीत्वाभिमन्त्रितमम्भः प्रविशेत् ॥३॥**

मन्त्र पढेपछि उसले मित्रता नभएको रागद्वेष नभएको अर्को मान्छेको घुँडा
समाएर नाईटोसम्म पानी आउने जलमा डुब्नू ।



**तत्समकालं च नातिक्रूरमृदुना धनुषा पुरुषोऽपरः शरक्षेपं कुर्यात् ॥४॥**

यसै बेला अर्को मानिसले धनुबाट एउटा बाण छोड्नु जुन न त धेरै
बलियो न धेरै कमजोर नै होस् ।

**तं चापरः पुरुषो जवेन शरमानयेत् ॥५॥**

त्यो बाणलाई अर्को मानिसले छिटो समाएर लेराउनू ।

**तन्मध्ये यो न दृश्येत स शुद्धः परिकीर्तितः ।
अन्यथा त्वविशुद्धः स्यादेकाङ्गस्यापि दर्शने ॥६॥**

यतिञ्जेलसम्म जो पानी माथि देखिँदैन उ निर्दोष हुन्छ तर यसको विपरित
अलिकति पनि कुनै अङ्ग देखिए उ दोषी हुन्छ ।

**त्वमम्भः सर्वभूतानामन्तश्चरसि साक्षिवत् ।**
**त्वमेवाम्भो विजानीषे न विदुर्यानि मानुषाः ॥७॥**

हे जल ! हजुर सबै जीवात्मा भित्र साक्षीभैं रहनु भएको छ,
हजुरको अस्तित्व मानिसले जान्दैनन् ।

**व्यवहाराभिशस्तोऽयं मानुषस्त्वयि मज्जति ।**
**तदेनं संशयादस्माद्धर्मतस्त्रातुमर्हसि ॥८॥**

यो मानिसलाई आरोप लागेको छ र उ यसबाट मुक्तहुन चाहन्छ ।
त्यसैले कानुनतः उसको परीक्षा सफल बनाइ दिनुहोस् ।

**॥ समाप्तमिदं द्वादशोऽध्यायः ॥१२॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको बाह्रौं अध्याय पूर्ण भयो ।



## त्रयोदशोऽध्यायः
## (तेह्रौं अध्याय)

**अथ विषम् ॥१॥**

अब विष परीक्षाका विषयमा बताइन्छ ।

**विषाण्यदेयानि सर्वाणि ॥२॥**

सबै खाले विष विष-परीक्षामा नदिनू ।

**ऋते हिमाचलोद्भवाच्छार्ङ्गात् ॥३॥**

हिमालयमा हुने श्रृङ्ग वृक्षको विष बाहेक ।

**तस्य च यवसप्तकं घृतप्लुतमभिशस्ताय दद्यात् ॥४॥**



आरोपीलाई सातवटा घीऊ दलेका जौ दिनू ।

**विषं वेगक्रमापेतं सुखेन यदि जीर्यते ।**
**विशुद्धं तमिति ज्ञात्वा दिवसान्ते विसर्जयेत् ॥५॥**

यदि त्यो विष उसले कुनै खराब लक्षण बिना सजिलै पचायो भने उसलाई निरापराध भनी दिन बितेपछि छोड्नू ।

**विषत्वाद्विषमत्वाच्च क्रूरं त्वं सर्वदेहिनाम् ।**
**त्वमेव विष जानीषे न विदुर्यानि मानुषाः ॥६॥**

हे सर्वदेहधारीका लागि क्रूर भएका विष ! तिम्रो अस्तित्व जानि नसक्नु छ ।

**व्यवहाराभिशस्तोऽयं मानुषः शुद्धिमिच्छति ।**
**तदेनं संशयादस्माद्धर्मतस्त्रातुमर्हसि ॥७॥**

यो मानिसलाई आरोप लागेको छ र उ यसबाट शुद्ध हुन चाहन्छ । त्यसैले कानुनतः उसको परीक्षा सफल बनाइ दिनुहोस् ।

**॥ समाप्तमिदं त्रयोदशोऽध्यायः ॥१३॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको तेह्रौं अध्याय पूर्ण भयो ।



# चतुर्दशोऽध्यायः
# (चौधौं अध्याय)

**अथ कोसः ॥१॥**

अब पवित्र जल-परीक्षाका बारेमा बताइन्छ ।

**उग्रान्देवान्समभ्यर्च्य तत्स्नानोदकात्प्रसृतित्रयं पिबेत् ॥२॥**

उग्र देवता (दुर्गा, सूर्य आदि)को अर्चना गरी तिनलाई स्नान गराइएको जल ३ अँजुली पिउनू ।

**इदं मया न कृतमिति व्याहरन्देवताभिमुखः ॥३॥**

यसबेला उसले देवतातिर फर्की मैले यो कार्य गरेको होइन भन्नू ।

**यस्य पश्येद्द्विसप्ताहात्रिसप्ताहादथापि वा ॥४॥**



यसपछिका २ वा ३ हप्तामा उसलाई कुनै आपद (बिरामी पर्ने, आगो लाग्ने, नातेदारको मृत्यु हुने आदि) पर्दछ भने ..।

**तमशुद्धं विजानीयात्तथा शुद्धं विपर्यये ।**
**दिव्ये च शुद्धं पुरुषं सत्कुर्याद्धार्मिको नृपः ॥५॥**

उ दोषी हुन्छ । केही नभए उ दोषमुक्त हुन्छ । दिव्य परीक्षाबाट निर्दोष देखिनेलाई राजाले वस्त्रालङ्कारले सम्मान गरी छोड्नू ।

**॥ समाप्तमिदं चर्तुदशोऽध्यायः ॥१४॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको चौधौं अध्याय पूर्ण भयो ।



## पञ्चदशोऽध्यायः
## (पन्ध्रौं अध्याय)

**अथ द्वादश पुत्रा भवन्ति ॥१॥**

यसपछि (पुत्रका बारेमा बताउँदछु) पुत्र बाह्र प्रकारका हुन्छन् ।

**स्वे क्षेत्रे संस्कृतायामुत्पादितः स्वयमौरसः प्रथमः ॥२॥**

पहिलो आफ्नी विधिले विवाहिता पत्नीबाट जन्मने औरस पुत्र हो ।

**नियुक्तायां सपिण्डेनौत्तमवर्णेन वोत्पादितः क्षेत्रजो द्वितीयः ॥३॥**

नियुक्त सपिण्डी वा उत्तम वर्णबाट जन्मिएको क्षेत्रज दोश्रो पुत्र हो ।

**पुत्रिकापुत्रस्तृतीयः ॥४॥**



तेश्रो पुत्रिकापुत्र हो ।

**यस्तस्याः पुत्रः स मे पुत्रो भवेदिति या पित्रा दत्ता सा पुत्रिका ॥५॥**

छोरीलाई “तिनको छोरो भए त्यो मेरो हुन्छ” भनी बाबुले कन्यादान दिएमा त्यस्तो छोरो पुत्रिका हुन्छ ।

**पुत्रिकाविधिनाप्रतिपादितापि भ्रातृविहीना पुत्रिकैव ॥६॥**

दाजुभाई नभएकी अविवाहित कन्याको यस्तो पुत्र पनि पुत्रिका पुत्र नै हुन्छ ।

**पौनर्भवश्चतुर्थः ॥७॥**

चौथो पौनर्भव हो ।

**अक्षता भूयः संस्कृता पुनर्भूः ॥८॥**

अक्षता योनीलाई पुनर्विवाह गरी त्यसबाट जन्मिएको छोरो पुनर्भु हुन्छ ।

**भूयस्त्वसंस्कृतापि परपूर्वा ॥९॥**

पुनर्भु तिनलाई पनि भनिन्छ जसले १ भन्दा बढी पटक विधिपूर्वक विवाह गरेकी छैन तर विधि अनुसार विवाह हुनुपूर्व नै अर्कै पुरुषसँग सम्पर्क गरिसकेकी छ ।

**कानीनः पञ्चमः ॥१०॥**

पाँचौं कानीन पुत्र हो ।

**पितृगृहेऽसंस्कृतयैवोत्पादितः ॥११॥**

बाबुको घरमा अविवाहित पुत्रीले जन्माएको पुत्रलाई यसो भनिन्छ ।

**स च पाणिग्राहस्य ॥१२॥**



त्यस्तो पुत्र तिनिसँग विधिपूर्वक विवाह गर्नेको हुन्छ ।

**गृहे च गूढोत्पन्नः षष्ठः ॥१३॥**

घरमा गोप्यरुपले जन्मने पुत्र गूढ नामक छैटौं पुत्र हो ।

**यस्य तल्पजस्तस्यासौ ॥१४॥**

जसको ओछ्यानमा जन्मन्छ त्यो त्यसैको हुन्छ ।

**सहोढः सप्तमः ॥१५॥**

सातौं सहोढ पुत्र हो ।

**या गर्भिणी संस्क्रियते तस्याः पुत्रः ॥१६॥**

गर्भिणी स्त्रीलाई विवाह गरी जन्मिने पुत्र सहोढ हो ।

**स च पाणिग्राहस्य ॥१७॥**

त्यो पनि गर्भिणीलाई जसले विवाह गर्दछ त्यसैको पुत्र हुन्छ ।

**दत्तकश्चाष्टमः ॥१८॥**

आठौं पुत्र दत्तक हो ।

**स च मातापितृभ्यां यस्य दत्तः ॥१९॥**

आमाबाबुले जसलाई दिइएको हो उ त्यसैको पुत्र हुन्छ ।

**क्रीतश्च नवमः ॥२०॥**

नवौं पुत्र क्रीतक पुत्र हो ।



**स च येन क्रीतः ॥२१॥**

उ जसबाट किनिन्छ त्यसैको पुत्र हुन्छ ।

**स्वयमुपगतो दशमः ॥२२॥**

आफै गएर कसैको पुत्र बनेको दशौं उपगत पुत्र हो ।

**स च यस्योपगतः ॥२३॥**

जसकोमा उ पुत्र बनेर गएको हो उ उसैको पुत्र हुन्छ ।

**अपविद्धस्त्वेकादशः ॥२४॥**
एघारौं पुत्र अपविद्ध हो ।

**पित्रा मात्रा च परित्यक्तः ॥२५॥**

बाबु, आमा वा दुवैबाट परित्यक्त पुत्रलाई अपविद्ध भनिन्छ ।

**स च येन गृहीतः ॥२६॥**

जसले उसलाई ग्रहण गर्दछ, उ त्यसैको पुत्र हुन्छ ।

**यत्र क्वचनोत्पादितश्च द्वादशः ॥२७॥**

कस्को भनी नजानी वा थाहा नपाई बनाएको पुत्र बाह्रौं पुत्र हो ।

**एतेषां पूर्वः पूर्वः श्रेयान् ॥२८॥**

यि १२ थरीका पुत्रमा अघिल्ला क्रमशः श्रेष्ठ हुन्छन् ।

**स एव दायहरः ॥२९॥**



१२ मध्ये अघिल्ला अघिल्ला पैत्रिक सम्पत्तिका भागिदार (हकदार) हुन्छन् ।

**स चान्यान्बिभृयात् ॥३०॥**

तिनैले अरु बाँकी पुत्रलाई पालनपोषण गर्दछन् ।

**अनूढानां स्ववित्तानुरूपेण संस्कारं कुर्यात् ॥३१॥**

अविवाहिता दीदिबहिनीको आफूले लिएको अंश अनुसार
(दाजुभाईले) खर्च गरेर विवाह गरि दिनू ।

**पतितक्लीबाचिकित्स्यरोगविकलास्त्वभागहारिणः ॥३२॥**

पतीत, नपुंसक, असाध्य रोगी र विकलाङ्गले अंश पाउँदैनन् ।

**रिक्थग्राहिभिस्ते भर्तव्याः ॥३३॥**

अंश लिनेबाट ती पालिनूपर्दछ ।

**तेषां चौरसाः पुत्रा भागहारिणः ॥३४॥**

तिनको भाग औरस पुत्रले लिनू।

**न तु पतितस्य ॥३५॥**

पतितको नलिनू।

**पतनीये कर्मणिकृते त्वनन्तरोत्पन्नाः ॥३६॥**

पतनीय कर्म गरी पछि जन्मेका भए ।

**प्रतिलोमासु स्त्रीषु चोत्पन्नाश्चाभागिनः ॥३७॥**



प्रतिलोम स्त्रीबाट जन्मनेले अंश पाउँदैन ।

**(न तु) तत्पुत्राः पैतामहेऽप्यर्थे ॥३८॥**

नातीले बाउहुँदै हजूरबाबूबाट अंश पाउँदैन ।

**अंशग्राहिभिस्ते भरणीयाः ॥३९॥**

अंश खानेबाट ति (अंश दिने) पालिनुपर्दछ ।

**यश्चार्थहरः स पिण्डदायी ॥४०॥**

जसले अंश खान्छ उ पिण्डदाता हुन्छ ।

**एकोढानामप्येकस्याः पुत्रः सर्वासां पुत्र एव ॥४१॥**

लोग्नेका बहु पत्नीमध्ये एउटीको पुत्र सबैको पुत्र हुन्छ ।

**भ्रातृणामेकजातानां च ॥४२॥**

दाजुभाईमध्ये एउटाको पुत्र सबैको पुत्र हुन्छ ।

**पुत्रः पितृवित्तालाभेऽपि पिण्डं दद्यात् ॥४३॥**

बाबुबाट अंशमा केही नपाए (वा नलिए) पनि छोराले पिण्डदान गर्नू ।

**पुन्नाम्नो नरकाद्यस्मात्पितरं त्रायते सुतः ।**
**तस्मात्पुत्र इति प्रोक्तः स्वयमेव स्वयंभुवा ॥४४॥**

बाबुलाई नरकबाट जोगाउने हुनाले छोरालाई पुत्र भनिएको हो भनी ब्रह्मा आफैं भन्नु हुन्छ ।

**ऋणमस्मिन्संनयत्यमृतत्वं च गच्छति पिता**
**पुत्रस्य जातस्य पश्येच्चेज्जीवतो मुखम् ॥४५॥**



जन्मेको जिवित पुत्रको मुख देखेपछि उसलाई ऋण सुम्पेर पितृऋणबाट बाबु मुक्त हुन्छ र मोक्ष प्राप्त गर्दछ ।

**पुत्रेण लोकाञ्जयति पौत्रेणानन्त्यमश्नुते ।**
**अथ पुत्रस्य पौत्रेण व्रध्नस्याप्नोति विष्टपम् ॥४६॥**

छोरो जन्मेपछि पुरुष लोकविजयी, नाती जन्मेपछि अनन्त सुख भोगी र
पनाती जन्मेपछि आदित्यलोकको दिव्य सुख भोग्ने हुन्छ ।

**पौत्रदौहित्रयोर्लोके विशेषे नोपपद्यते ।**
**दौहित्रोऽपि ह्यपुत्रं तं सन्तारयति पौत्रवत् ॥४७॥**

छोरा वा छोरीको छोरोमा कुनै विशेष फरक छैन किन कि छोरीको छोराले पनि पितृकुलका पितृको उद्धार गरेझैं मातृकुलका पितृको पनि उद्धार गर्दछ ।

**॥ समाप्तमिदं पञ्चदशोऽध्यायः ॥१५॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको पन्ध्रौं अध्याय पूर्ण भयो ।



## षोडशोऽध्यायः
## (सोह्रौं अध्याय)

**समानवर्णासु पुत्राः सवर्णा भवन्ति ॥१॥**

समान वर्णका स्त्रीबाट जन्मने पुत्रहरु समान वर्णकै हुन्छन् ।

**अनुलोमासु मातृसवर्णाः ॥२॥**

(लोग्नेभन्दा) निम्न वर्णका स्त्रीबाट जन्मने पुत्रले आमाको वर्ण लिन्छन् ।

**प्रतिलोमास्वार्यविगर्हिताः ॥३॥**

(लोग्नेभन्दा) उच्च वर्णका स्त्रीका पुत्र, द्विजबाट तिरस्कृत हुन्छन् ।

**तत्र वैश्यापुत्रः शूद्रेणायोगवः ॥४॥**



शूद्रले वैश्याबाट जन्माउने पुत्र “आयोगव” हुन्छ ।

**पुल्कस मागधौ क्षत्रियापुत्रौ वैश्यशूद्राभ्याम् ॥५॥**

क्षत्रियाबाट वैश्यको “पुल्कस” र शूद्रको “मागध” पुत्र हुन्छ ।

**चण्डालवैदेहकसूताश्च ब्राह्मणीपुत्राः शूद्रविट् क्षत्रियैः ॥६॥**

ब्राह्मणीबाट शूद्रको “चाण्डाल”, वैश्यको “वैदेहक” र क्षत्रियको “सूत” पुत्र हुन्छ ।

**संकरसंकराश्चासंख्येयाः ॥७॥**

यस बाहेक असंख्य वर्णसङ्कर हुन्छन् ।

**रङ्गावतरणमायोगवानाम् ॥८॥**

आयोगवको जीविका कलाकारिता (कुस्ती, नाच आदि) हो ।

**व्याधता पुल्कसानाम् ॥९॥**

पुल्कसको पेसा शिकार हो ।

**स्तुतिक्रिया मागधानाम् ॥१०॥**

स्तुति गर्नू मागधको पेसा हो ।

**वध्यघातित्वं चाण्डालानाम् ॥११॥**

ज्यानमारालाई मृत्युदण्ड दिनू चाण्डालको पेसा हो ।

**स्त्रीरक्षा तज्जीवनं च वैदेहकानाम् ॥१२॥**

स्त्रीको हेरचाह (नर्तकी तथा अन्य स्त्री) गर्नू वैदेहकको काम हो ।



**अश्वसारथ्यं सूतानाम् ॥१३॥**

घोडाको व्यवस्थापन (हेरचाह र सारथी) सूतको कार्य हो ।

**चण्डालानां बहिर्ग्रामनिवसनं मृतचैलधारणमिति विशेषः ॥१४॥**

चाण्डालले विशेषतः गाऊँ बाहिर बस्नु र मृतकका कपडा लगाउनू ।

**सर्वेषां समानजातिभिर्व्यवहारः ॥१५॥**

सबैले विवाहादि व्यवहार समान जातिमा गर्नू ।

**स्वपितृवित्तानुहरणञ्च ॥१६॥**

सबैले समान जातको बाबुको पैत्रिक सम्पत्ति प्राप्त गर्दछन् ।

**सङ्करे जातयस्त्वेताः पितृमातृप्रदर्शिताः ।**
**प्रच्छन्ना वा प्रकाशा वा वेदितव्याः स्वकर्मभिः ॥१७॥**

बाउआमाका कारण जन्मिएका वर्णसङ्करले आफ्नो जात चाहे भनुन् वा
लुकाउन्, तिनको व्यववहारले नै त्यो कुरा थाहा पाइन्छ ।

**ब्राह्मणार्थे गवार्थे वा देहत्यागोऽनुपस्कृतः ।**
**स्त्रीबालाभ्युपपत्तौ च बाह्यानां सिद्धिकारणम् ॥१८॥**

निस्वार्थ भावनाले ब्राह्मण, गाई, स्त्री र बालकका रक्षामा जीवन
गुमाउनेहरुले दैवी आनन्द पाउँदछन् ।

**॥ समाप्तमिदं षोडशोऽध्यायः ॥१६॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको सोह्रौं अध्याय पूर्ण भयो ।



## सप्तदशोऽध्यायः
## (सत्रौं अध्याय)

**पिता चेत्पुत्रान्विभजेत्तस्य स्वेच्छा स्वयमुपार्जितेऽर्थे ॥१॥**

कमाएको धन पुत्रलाई अंशबण्डा गर्दा बाबुले स्वेच्छाले खुलासा गर्न सक्छ ।

**पैतामहे त्वर्थे पितृपुत्रयोस्तुल्यं स्वामित्वम् ॥२॥**

तर हजुरबाबुको धनमा छोरानातीको समान स्वामित्व हुन्छ ।

**पितृविभक्ता विभागानन्तरोत्पन्नस्य भागं दद्युः ॥३॥**

बाबुबाट अंश लिइसके पछि जन्मनेहरुलाई पनि अंशभाग दिनू ।

**अपुत्रधनं पत्न्यभिगामि ॥४॥**



पुत्रहीनको धन उसकी पत्नीले पाउँदछे ।

**तदभावे दुहितृगामि ॥५॥**

पत्नी नभए छोरीले पाउँदछे ।

**तदभावे पितृगामि ॥६॥**

छोरी नभए बाबुले पाउँदछ ।

**तदभावे मातृगामि ॥७॥**

बाबु नभए आमाले पाउँदछिन् ।

**तदभावे भ्रातृगामि ॥८॥**

आमा नभए दाजुभाईले पाउँदछन् ।

**तदभावे भ्रातृपुत्रगामि ॥९॥**

दाजुभाई नभए दाजुभाईका पुत्र (भतिजा) ले पाउँदछन् ।

**तदभावे बन्धुगामि ॥१०॥**

ती नभए बन्धुबान्धवले पाउँदछन् ।

**तदभावे सकुल्यगामि ॥११॥**

ती नभए आफ्नो कुलले पाउँदछ ।

**तदभावे सहध्यायिगामि ॥१२॥**

ती नभए सँगै पढ्नेले (सहपाठी) पाउँदछ ।



**तदभावे ब्राह्मणधनवर्जं राजगामि ॥१३॥**

ती पनि नभए ब्राह्मणबाहेकको धन राजाले पाउँदछ ।

**ब्राह्मणार्थो ब्राह्मणानाम् ॥१४॥**

ब्राह्मणको धन अरु ब्राह्मणहरुलाई जान्छ ।

**वानप्रस्थधनमाचार्यो गृह्णीयात् ॥१५॥**

वानप्रस्थीको धन उसको आचार्यले लिनू ।

**शिष्यो वा ॥१६॥**

अथवा शिष्यले लिनू ।

**संसृष्टिनस्तु संसृष्टी सोदरस्य तु सादरः ।**
**दद्यादपहरेच्चांशं जातस्य च मृतस्य च ॥१७॥**

भिन्न भई दाजुभाई मिलेर गरेको साझेदारी पेसाको आर्जन कुनै दाजुभाईको मृत्युमा उसको भाग उसैको छोरालाई दिनू ।

**पितृमातृसुत्रभ्रातृदत्तमध्यग्न्युपागतमाधिवेदनिकं**
**बन्धुदत्तं शुल्कमन्वाधेयकमिति स्त्रीधनम् ॥१८॥**

स्त्रीलाई उसका बाबु-आमा-छोरा र दाजुभाईले विवाहपूर्व दिएको, उनले सम्मानले पाएको, नातेदारले दिएको, दाइजो र पछि पाएका उपहार स्त्रीका पेवा धन हुन् ।

**ब्राह्मादिषु चतुर्षु विवाहेष्वप्रजायामतीतायां तद्भर्त्तुः ॥१९॥**

यदि ब्राह्म आदि चार विधिले विवाह गरेकी स्त्री पुत्र नजन्माई बितिन् भने उनको धन पतिको हुन्छ ।



**शेषेषु च पिता हरेत् ॥२०॥**

अरु विधिले विवाह गरेकी भए बाबुले लिनू ।

**सर्वेष्वेव प्रसूतायां यद्धनं तद्दुहितृगामि ॥२१॥**

सन्तान पाएर बितेको धन उनकी पुत्रीको हुन्छ ।

**पत्यौ जीवति यः स्त्रीभिरलङ्कारो धृतो भवेत् ।**
**न तं भजेरन्दायादा भजमानाः पतन्ति ते ॥२२॥**

पति जिवित हुँदा स्त्रीले लाएका गरगहना बाँडिदैन । बाँडे (भाग लगाए) ती पतित हुन्छन् ।

**अनेकपितृकाणां तु पितृतोंऽशप्रकल्पना ।**
**यस्य यत्पैतृकं रिक्थं स तद्गृह्णीत नेतरः ॥२३॥**

धेरै बाबु भए बाबु अनुसारको अंश लिनू, उसले बाबुको जे हो त्यो पाउँदछ, अरुको होइन ।

## ॥ समाप्तमिदं सप्तदशोऽध्यायः ॥१७॥



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको सत्रौं अध्याय पूर्ण भयो ।



# अष्टादशोऽध्यायः
## (अठारौँ अध्याय)

**ब्राह्मणस्य चतुर्षु वर्णेषु चेत्पुत्रा भवेयुस्ते पैतृकं रिक्थं दशधा विभजेयुः ॥१॥**

ब्राह्मणका चार वर्णका पत्नीबाट चार पुत्र छन् भने पैत्रिक धन दश भाग लगाउनू ।

**तत्र ब्राह्मणीपुत्रश्चतुरोंऽशानादद्यात् ॥२॥**

त्यहाँ ब्राह्मणीपुत्रलाई चार भाग दिनू ।

**क्षत्रियापुत्रस्त्रीन् ॥३॥**

क्षत्रीयापुत्रलाई तीन भाग दिनू ।

**द्वावंशौ वैश्यापुत्रः ॥४॥**



वैश्यापुत्रलाई दुई भाग दिनू ।

**शुद्रापुत्रस्त्वेकम् ॥५॥**

शूद्रापुत्रलाई भने एक भाग दिनू ।

**अथ चेच्छूद्रवर्जं ब्राह्मणस्य पुत्रत्रयं भवेत्तदा तद्धनं नवधा विभजेयुः ॥६॥**

शूद्रबाहेक तीन वर्णका पुत्र छन् भने अंश नौ भाग लगाउनू ।

**वर्णानुक्रमेण चतुस्त्रिद्विभागीकृतानंशानादद्युः ॥७॥**

वर्णक्रमले क्रमशः चार, तीन र दुई भाग अंश दिनू ।

**वैश्यवर्जमष्टधाकृतं चतुरस्त्रीनेकं चादद्युः ॥८॥**

वैश्यबाहेक तीन वर्णका पुत्र छन् भने अंश आठ भाग लगाई
क्रमशः चार, तीन र एक भाग दिनू ।

**क्षत्रियवर्जं सप्तधाकृतश्चतुरो द्वावेकञ्च ॥९॥**

क्षत्रिय बाहेक तीन वर्णका पुत्र छन् भने अंश सात भाग
लगाई क्रमशः चार, दुई र एक भाग दिनू ।

**ब्राह्मणवर्जं षड्धाकृतं चीन्द्वावेकञ्च ॥१०॥**

ब्राह्मण बाहेक तीन वर्णका पुत्र छन् भने अंश छ भाग
लगाई क्रमशः तीन, दुई र एक भाग दिनू ।

**क्षत्रियस्य क्षत्रियावैश्याशुद्रापुत्रेष्वयमेव विभागः ॥११॥**

क्षत्रियका क्षत्रिया, वैश्या र शूद्रा पुत्र भए पनि यसरी नै भाग लगाउनू ।



**अथ ब्राह्मणस्य ब्राह्मणक्षत्रियौ पुत्रौ स्यातां तदा सप्तधा
कृताद्धनाद्ब्राह्मणश्चतुरोंऽशानदद्यात् ॥१२॥**

ब्राह्मणका ब्राह्मणी र क्षत्रिया पुत्र भए अंश सात भाग लगाई चार भाग ब्राह्मणी पुत्रलाई दिनू ।

**त्रिन्त्राजन्यः ॥१३॥**

तीन भाग क्षत्रिया पुत्रलाई दिनू ।

**अथ ब्राह्मणस्य ब्राह्मणवैश्यौ तदा षड्धा विभक्तस्य
चतुरोंऽशान्ब्राह्मणस्त्वादद्यात् ॥१४॥**

ब्राह्मणका ब्राह्मणी र वैश्या पुत्र भए अंश छ भाग लगाई चार भाग ब्राह्मणी पुत्रलाई दिनू ।

**द्वावंशौ वैश्यः ॥१५॥**

दुई भाग वैश्या पुत्रलाई दिनू ।

**अथ ब्राह्मणस्य ब्राह्मणशूद्रौ पुत्रौ स्यातां तदा तद्धनं पञ्चधा विभजेयाताम्॥१६॥**

ब्राह्मणका ब्राह्मणी र शूद्रा पुत्र भए अंश पाँच भाग लगाउनू ।

**चतुरोंऽशान्ब्राह्मणस्त्वादद्यात्॥१७॥**

चार भाग ब्राह्मणी पुत्रलाई दिनू ।

**एकं शुद्रः॥१८॥**

एक भाग शूद्रा पुत्रलाई दिनू ।

**अथ ब्राह्मणस्य क्षत्रियस्य वा क्षत्रियवैश्यौ
स्यातां तदा तद्धनं पञ्चधा विभजेयाताम्॥१९॥**

ब्राह्मण वा क्षत्रियका क्षत्रिया र वैश्या पुत्र भए अंश पाँच भाग लगाउनू ।



**त्रीनंशान्क्षत्रियस्त्वादद्यात्॥२०॥**

तीन भाग क्षत्रिया पुत्रलाई दिनू ।

**द्वावंशौ वैश्यः॥२१॥**

दुई भाग वैश्यापुत्रलाई दिनू ।

**अथ ब्राह्मणस्य क्षत्रियस्य वा क्षत्रियशुद्रौ पुत्रौ
स्यातां तदा तद्धनं चतुर्धा विभजेयाताम्॥२२॥**

ब्राह्मण वा क्षत्रियका क्षत्रिया र शूद्रा पुत्र भए अंश चार भाग लगाउनू ।

**त्रीनंशान्क्षत्रियस्त्वादद्यात्॥२३॥**

तीन भाग क्षत्रिया पुत्रलाई दिनू ।

**एकं शूद्रः ॥२४॥**

एक भाग शूद्रा पुत्रलाई दिनू ।

**अथ ब्राह्मणस्य क्षत्रियस्य वैश्यस्य वा वैश्यशुद्रौ पुत्रौ स्यातां तदा तद्धनं त्रिधा विभजेयाताम् ॥२५॥**

ब्राह्मण, क्षत्रिय र वैश्यका वैश्या र शूद्रा पुत्र भए अंश तीन भाग लगाउनू ।

**द्वावंशौ वैश्यस्त्वादद्यात् ॥२६॥**

दुई भाग वैश्या पुत्रलाई दिनू ।

**एकं शूद्रः ॥२७॥**

एक भाग शूद्रा पुत्रलाई दिनू ।



**अथैकपुत्रा ब्राह्मणस्य ब्राह्मणक्षत्रियवैश्याः सर्वहराः ॥२८॥**

ब्राह्मणको ब्राह्मणी, क्षत्रिया वा वैश्याबाट जन्मिएको एउटै पुत्र भए सबै अंश उसैलै पाउँदछ ।

**क्षत्रियस्य राजन्यवैश्यौ ॥२९॥**

क्षत्रियको क्षत्रिया र वैश्याबाट जन्मिएको एउटै पुत्र भए सबै अंश उसैले पाउँदछ ।

**वैश्यश्य वैश्यः ॥३०॥**

वैश्यको एउटै वैश्यापुत्र भए सबै अंश उसैले पाउँदछ ।

**शूद्रः शुद्रस्य ॥३१॥**

शूद्रको एउटै शूद्रा पुत्र भए सबै अंश उसैले पाउँदछ ।

**द्विजातीनां शूद्रस्त्वेकः पुत्रोऽर्धहरः ॥३२॥**

द्विजको एक्लो पुत्र शूद्र भए उसले आधा अंश पाउँदछ ।

**अपुत्ररिक्थस्य या गतिः सात्रार्धस्य द्वितीयस्य ॥३३॥**

बाँकी आधा अंश पुत्रहीनको अंशसमान गरी भाग लाग्दछ ।

**मातरः पुत्रभागानुसारेण भागापहारिण्यः ॥३४॥**

आमाले पुत्रले पाएको अंश अनुसार समानुपातिक भाग पाउदँछिन् ।

**अनूढाश्च दुहितरः ॥३५॥**

अविवाहिता पुत्रीले पनि पुत्रले पाएको अंश अनुसार समानुपातिक भाग पाउँछिन् ।



**समानवर्णाः पुत्राः समानंशानादद्युः ॥३६॥**

समानवर्णका पुत्रलाई समान अंश दिनू ।

**ज्येष्ठाय श्रेष्ठमुद्धारं दद्युः ॥३७॥**

जेठो पुत्रलाई जेठाक भाग थप दिनू ( बीस भागको एक भाग) ।

**यदि द्वौ ब्राह्मणीपुत्रौ स्यातामेकः शूद्रापुत्रस्तदा नवधा विभक्तस्यार्थस्य ब्राह्मणीपुत्रावष्टौ भागानादद्यातामेकं शूद्रापुत्रः ॥३८॥**

यदि दुई ब्राह्मणी पुत्र र एक शूद्रा पुत्र छन् भने अंश नौ भाग लगाउनू र आठ भाग ब्राह्मणीपुत्रलाई र एक भाग शूद्रापुत्रलाई दिनू ।

**अथ शूद्रापुत्रावुभौ स्यातामेको ब्राह्मणीपुत्रस्तदा षड्धा विभक्तस्यार्थस्य चतुरोंऽशान्ब्राह्मणस्त्वादद्याद्वावंशौ शूद्रापुत्रौ ॥३९॥**

ब्राह्मणीको एक र शूद्राका दुई पुत्र भए अंश छ भाग लगाई चार भाग ब्राह्मणी पुत्रलाई र दुई भाग शूद्रा पुत्रहरुलाई दिनू ।

**अनेन क्रमेणान्यत्राप्यंशकल्पना भवति ॥४०॥**

अरुहरुमा पनि यसरी भागबण्डा (अंश) लगाउनू ।

**विभक्ताः सह जीवन्तो विभजेरन्पुनर्यदि ।**
**समस्तत्र विभागः स्याज्ज्यैष्ठं तत्र न विद्यते ॥४१॥**

छुट्टीभिन्न पछि मिलेर गरेको आर्जन सबैमा बराबर भाग लाग्छ, जेठाले थप पाउँदैन ।

**अनुपघ्नन्पितृद्रव्यं श्रमेण यदुपार्जयेत् ।**
**स्वयमीहितलब्धं तन्नाकामो दातुमर्हति ॥४२॥**

पैतृक सम्पत्ति नलगाई गरेको आर्जन उसको स्वप्रयासको आर्जन हुनाले उसको स्वेच्छाले बाहेक कसैलाई भाग लगाउनु पर्दैन ।



**पैतृकं तु यदा द्रव्यमनवाप्तं यदाप्नुयात् ।**
**न तत्पुत्रैर्भजेत्सार्धमकामः स्वयमर्जितम् ॥४३॥**

बाबुले उठाउन नसकेको धनसम्पत्ति उठाउँदछ भने त्यो स्वसङ्कलन भएका कारण स्वेच्छाले बाहेक पुत्रहरुमा भाग लगाउन पर्दैन ।

**वस्त्रं पत्त्रमलङ्कारः कृतान्नमुदकं स्त्रियः ।**
**योगक्षेमं प्रचारश्च न विभाज्यश्च पुस्तकम् ॥४४॥**

लत्ताकपडा,  सवारी साधन (गाडा, घोडा), गहना, पकाएको खाद्यान्न, पानीपँधेरो, स्त्री (दासी, रखोटी), दानदातव्यका लागि राखिएको धन, चरिचरनको जग्गा र  पुस्तक भाग लगाइन्न ।

**॥ समाप्तमिदमष्टादशोऽध्यायः ॥१८॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको अठारौं अध्याय पूर्ण भयो ।



# एकोनविंशोऽध्यायः
# (उन्नाइसौँ अध्याय)

**मृतं द्विजं न शूद्रेण निर्हारयेत्॥१॥**

मृतक द्विजलाई शूद्रले नबोक्नू (नातेदार भए पनि) ।

**न शूद्रं द्विजेन॥२॥**

शूद्रलाई द्विजले पनि नबोक्नू ।

**पितरं मातरञ्च पुत्रा निर्हरेयुः॥३॥**

पितामातालाई छोराहरुले बोक्नू ।

**न द्विजं पितरमपि शूद्राः॥४॥**



बाबु नै भए पनि मृतक द्विजलाई शूद्रले नबोक्नू ।

**ब्राह्मणमनाथं ये ब्राह्मणा निर्हरन्ति ते स्वर्गलोकभाजः॥५॥**

अनाथ मृतक ब्राह्मणलाई बोक्ने ब्राह्मणहरुले स्वर्ग पाउँदछन् ।

**निर्हृत्य च बान्धवं प्रेतं सत्कृत्याप्रदक्षिणेन चितामभिगम्याप्सु सवाससो निमज्जनं कुर्युः॥६॥**

ती बन्धुबान्धब जसले लाशलाई देब्रेतिरबाट दाहिने पार्दै घुमेर जलाएका छन् तिनले सवस्त्र जलमा डुबुल्की लगाउनू ।

**प्रेतस्योदकनिर्वपणं कृत्वैकं पिण्डं कुशेषु दद्युः॥७॥**

प्रेतलाई जलाञ्जली दिई कुशमाथि एउटा पिण्ड दिनू ।

**परिवर्तितवाससश्च निम्बपत्राणि विदश्य द्वार्यश्मनि पदन्यासं कृत्वा गृहं प्रविशेयुः ॥८॥**

(सबै मलामीले) लुगा फेरी निमको पात दाँतले च्यापेर (चपाएर) ढुङ्गाको ठेलो टेकी घरमा छिर्नू ।

**अक्षाताँश्चाग्नौ क्षिपेयुः ॥९॥**

अग्निमा अक्षता चढाउनू ।

**चतुर्थे दिवसेऽस्थिसञ्चयनं कुर्युः ॥१०॥**

चौथो दिन अस्थिसञ्चयन गर्नू ।

**तेषां गङ्गाम्भसि प्रक्षेपः ॥११॥**

अस्थिलाई गङ्गाको पानीमा फ्याँक्नू ।



**यावत्संख्यमस्थि पुरुषस्य गङ्गाम्भसि तिष्ठति तावद्वर्षसहस्राणि स्वर्गलोकमधितिष्ठति ॥१२॥**

जति सङ्ख्यामा पुरुषको अस्थि गङ्गामा रहन्छ त्यती हजार वर्षसम्म उ स्वर्गमा रहन्छ ।

**यावदाशौचं तावत्प्रेतस्योदकं पिण्डमेकञ्च दद्युः ॥१३॥**

जबसम्म आशौच रहन्छ तबसम्म प्रेतनिमित्त जलदान र एक पिण्ड दिनू ।

**क्रीतलब्धाशनाश्च भवेयुः ॥१४॥**

नमागिकन लेराइएका खानेकुरा खानू । (विचारा लैजानुको कारण यही हो)

**अमाँसाशनाश्च ॥१५॥**

मासु नखानू ।

**स्थण्डिलशायिनः ॥१६॥**

जमिनमा सुत्नू ।

**पृथक्शायिनश्च ॥१७॥**

बेग्लै सुत्नू ।

**ग्रामान्निष्क्रम्याशौचान्ते कृतश्मश्रुकर्माणस्तिलकल्कैः सर्षपकल्कैर्वा स्नाताः परिवर्तितवाससो गृहं प्रविशेयुः ॥१८॥**

आशौच सकिएपछि गाउँबाट बाहिर गई दाह्री काटी तिल वा सर्सिउँको पिनाले नुहाई कपडा फेरी घरमा पुनः प्रवेश गर्नू ।

**तत्र शान्तिं कृत्वा ब्राह्मणनाञ्च पूजनं कुर्युः ॥१९॥**



त्यसपछि शान्तिस्वस्ति गरी ब्राह्मणको पूजा गर्नू ।

**देवाः परोक्षदेवाः प्रत्यक्षदेवा ब्राह्मणाः ॥२०॥**

देवता अप्रत्यक्ष देवता हुन् भने ब्राह्मण प्रत्यक्ष देवता ।

**ब्राह्मणैर्लोका धार्यन्ते ॥२१॥**

ब्राह्मणबाटै लोक अडिएको छ ।

**ब्राह्मणानां प्रसादेन दिवि तिष्ठन्ति देवताः ।**
**ब्राह्मणाभिहितं वाक्यं न मिथ्या जायते क्वचित् ॥२२॥**

ब्राह्मणकै प्रसादले देवता स्वर्गमा रहन्छन् । ब्राह्मणको वचन कहिल्यै झूटो जाँदैन ।

**यद्ब्राह्मणास्तुष्टतमा वदन्ति तद्देवताः प्रत्यभिनन्दयति ।**

**तुष्टेषु तुष्टाः सततं भवन्ति प्रत्यक्षदेवेषु परोक्षदेवाः ॥२३॥**

ब्राह्मण सन्तुष्ट भएर जे बोल्दछन् त्यसलाई देवताले प्रमाणित गर्दछन् ।
जब प्रत्यक्ष देवता सन्तुष्ट हुन्छन् तब अप्रत्यक्ष देवता सन्तुष्ट हुन्छन् नै ।

**दुःखान्वितानां मृतबान्धवानाम् आश्वासनं कुर्युरदीनसत्त्वाः ।**
**वाक्यैस्तु यैर्भूमि तवाभिधास्ये वाक्यान्यहं तानि मनोऽभिरामे ॥२४॥**

शोकले डुबेका मृतकका आफन्तजनलाई शान्त चित्तले सान्त्वनाका
वचन सुनाउनू ता कि तिनको मन बुझोस् ।

**॥ समाप्तमिदमेकोनविंशोऽध्यायः ॥१९॥**



मोहन प्रसाद सापकोटाद्धारा भावानुवाद गरिएको विष्णुस्मृतिको उन्नाइसौं अध्याय पूर्ण भयो ।



## विंशोऽध्यायः
## (बीसौं अध्याय)

**यदुत्तरायणं तदहर्देवानाम् ॥१॥**

उत्तरायण देवताको दिन हुन्छ ।

**दक्षिणायनं रात्रिः ॥२॥**

दक्षिणायण देवताको रात हुन्छ ।

**सम्वत्सरोऽहोरात्रः ॥३॥**

मानिसको सम्वत्सर (एक वर्ष) देवताको एक दिनरात हुन्छ ।

**तत्त्रिंशता मासः ॥४॥**



ती तीस दिनरातको एक महिना हुन्छ ।

**मासा द्वादश वर्षम् ॥५॥**

बाह्र महिनाको एक वर्ष हुन्छ ।

**द्वादश वर्षशतानि दिव्यानि कलियुगम् ॥६॥**

बाह्र सय दिव्य वर्षको कलियुग हुन्छ ।

**द्विगुणानि द्वापरम् ॥७॥**

कलियुगको दोब्बर वर्षको द्वापर युग हुन्छ ।

**त्रिगुणानि त्रेता ॥८॥**

कलियुगको तेब्बर वर्षको त्रेता युग हुन्छ ।

**चतुर्गुणानि कृतयुगम् ॥९॥**

कलियुगको चौबर वर्षको सत्ययुग हुन्छ ।

**द्वादश वर्षसहस्राणि (दिव्यानि) चतुर्युगम् ॥१०॥**

बाह्र हजार दिव्य वर्षको एक चतुर्युग हुन्छ ।

**चतुर्युगानामेकसप्ततिर्मन्वन्तरम् ॥११॥**

एकहत्तर चतुगर्युगको एक मन्वन्तर हुन्छ ।

**चतुर्युगसहस्रं च कल्पः ॥१२॥**

हजार चतुर्युगको एक कल्प हुन्छ ।

**स च पितामहस्याहः ॥१३॥**

त्यो (एक कल्प) नै ब्रह्माको (एक) दिन हो ।

**तावती चास्य रात्रिः ॥१४॥**

त्यतीनै समयको रात हुन्छ ।

**एवंविधेनाहोरात्रेण मासवर्षगणनया सर्वस्यैव ब्रह्मणो वर्षशतमायुः ॥१५॥**

यही विधिले समय गनी  ब्रह्माको सय वर्षको आयु हुन्छ ।

**ब्रह्मायुषा च परिच्छिन्नः पौरुषो दिवसः ॥१६॥**

ब्रह्माको पूरा आयु बराबर विष्णुको एक दिन हुन्छ ।

**तस्यान्ते महाकल्पः ॥१७॥**

यसको अन्तमा (ब्रह्माको आयु सकिए पछि) महाकल्प हुन्छ ।

**तावत्येवास्य निशा ॥१८॥**

यति नै समय अन्धकार हुन्छ ।

**पौरुषाणामहोरात्राणामतीतानां सङ्ख्चैव नास्ति ॥१९॥**

ब्रह्माविष्णुका बितेका रातदिन गन्न सकिन्न ।

**न च भविष्याणाम् ॥२०॥**

भविष्यमा कति दिनरात तिनका बित्ने छन् त्यो पनि गन्न (वा भन्न) सकिन्न ।



**अनाद्यन्तत्वात्कालस्य ॥२१॥**

कालको शुरु र अन्त हुँदैन ।

**एवमस्मिन्निरालम्बे काले सततयायिनि ।**
**न तद्भूतं प्रपश्यामि स्थितिर्यस्य भवेद्ध्रुवा ॥२२॥**

काल (समय) चक्र बाहिर केही छैन, यो अनन्त छ र म अलिकति पनि स्थिर-सृष्टि देख्दिन ।

**गङ्गायाः सिकताधारास्तथा वर्षति वासवे ।**
**शक्या गणयितुं लोके न व्यतीताः पितामहाः ॥२३॥**

गङ्गाको बालुवा तथा इन्द्रले गराएको वर्षा बरु गन्न सकिएला
तर बितेका ब्रह्मा कति भए गन्न सकिन्न ।

**चतुर्दश विनश्यन्ति कल्पे कल्पे सुरेश्वराः ।**

**सर्वलोकप्रधानाश्च मनवश्च चतुर्दश ॥२४॥**

प्रत्येक कल्पमा चौध इन्द्र नाशिन्छन्, धेरै राजाहरु र चौध मनुहरु पनि नाशिन्छन् ।

**बहूनीन्द्रसहस्राणि दैत्येन्द्रनियुतानि च ।**
**विनष्टानीह कालेन मनुजेष्वथ का कथा ॥२५॥**

कालको वशमा परी हजारौं देवाधिपति र दानवाधिपति नष्ट भएका
छन् भने मानिसको के कुरा गर्नू ।

**राजर्षयश्च बहवः सर्वे समुदिता गुणैः ।**
**देवा ब्रह्मर्षयश्चैव कालेन निधनङ्गताः ॥२६॥**

सर्वगुण सम्पन्न धेरै राजर्षिहरु, देवताहरु र ब्रह्मर्षिहरु काललले नष्ट भएका छन् ।

**ये समर्था जगत्यस्मिन्सृष्टिसंहारकारणे ।**
**तेऽपि कालेन लीयन्ते कालो हि दुरतिक्रमः ॥२७॥**

जसको संसार सृष्टि र संहार गर्ने सामर्थ छ ती पनि कालबाट दण्डित हुन्छन् ।
काललाई अतिक्रमण कसैले गर्न सक्दैन ।

**आक्रम्य सर्वः कालेन परलोकञ्च नीयते ।**
**कर्मपाशवशो जन्तुस्तत्र का परिवेदना ॥२८॥**

संसारका सबै जीव कालको वशमा परी अर्को लोकमा लगिन्छन् ।
कर्मपाशको वशमा पर्ने जीवका लागि किन शोक गर्नू ।

**जातस्य हि ध्रुवो मृत्युर्ध्रुवं जन्म मृतस्य च ।**
**अर्थे दुष्परिहार्येऽस्मिन्नास्ति लोके सहायता ॥२९॥**

जन्मेकाको मृत्यु अवश्यम्भावी छ तथा जो मरे तिनको पुनर्जन्म पनि निश्चित छ ।
यो पनि निश्चित छ कि यस प्रक्रियामा लोकमा कसैले गर्ने कुनै सहायता छैन ।

**शोचन्ते नोपकुर्वन्ति मृतस्येह जना यतः ।**
**अतो न रोदितव्यं हि क्रियाः कार्या स्वशक्तितः ॥३०॥**

जब मृतकलाई शोकाकुलले यस लोकमा केही सहायता गर्न सक्दैनन् भने आफन्तले किन रुनु ?  गर्नुपर्ने क्रियाकर्म गच्छे अनुसार गर्नू ।

**सुकृतं दुष्कृतञ्चोभौ सहायौ यस्य गच्छतः ।**
**बान्धवैस्तस्य किं कार्यं शोचद्भिरथवा न वा ॥३१॥**

मृतकसँगै उसले गरेको सत्कर्म र दुष्कर्म जाने हुँदा उसका आफन्तले मृत्युमा शोक गर्नुको के औचित्य हुन्छ र ? ।

**बान्धवानामशौचे तु स्थितिं प्रेतो न विन्दति ।**
**अतस्त्वभ्येति तानेव पिण्डतोयप्रदायिनः ॥३२॥**

बान्धवको आशौचको अवस्थामा प्रेतात्मालाई शान्ति हुँदैन र आफन्तकोमा वरिपरि फर्केर चक्कर लगाउन थाल्दछ र त्योबेला पिण्ड र जलदान गर्नु तिनको कर्तव्य हुन्छ ।



**अर्वाक्सपिण्डीकरणात्प्रेतो भवति यो मृतः ।**
**प्रेतलोकगतस्यान्नं सोदकुम्भं प्रयच्छत ॥३३॥**

मृत व्यक्तिको आत्मा सपिण्डीकरण नगर्दासम्म प्रेतात्मा हुन्छ । यो प्रेतलोकको अदृश्य आत्मालाई पिण्डदान र जलघडा दिनु पर्दछ ।

**पितृलोकगतश्चान्नं श्राद्धे भुङ्क्ते स्वधासमम् ।**
**पितृलोकगतस्यास्य तस्माच्छ्राद्धं प्रयच्छत ॥३४॥**

सपिण्डीकरण पछि मृतात्मा पितृलोकमा जान्छ र उ श्राद्ध भोजनले तृप्त हुन्छ । त्यसैले पितृलोकमा पुगेका तिनलाई श्राद्ध दिनू ।

**देवत्वे यातनास्थाने तिर्यग्योनौ तथैव च ।**
**मानुष्ये च तथाप्नोति श्राद्धं दत्तं स्वबान्धवैः ॥३५॥**

चाहे उ देवता बनोस् वा नरकमा परोस् वा जनावरको शरीरमा छिरोस्
वा मानवको, उसका नातेदारले दिएको श्राद्ध उसले प्राप्त गर्दछ ।

**प्रेतस्य श्राद्धकर्तुश्च पुष्टिः श्राद्धे कृते ध्रुवम् ।
तस्माच्छ्राद्धं सदा कार्यं शोकं त्यक्त्वा निरर्थकम् ॥३६॥**

श्राद्धकर्मले कर्ता र भोक्ता दुवै निश्चय नै लाभान्वित हुन्छन्, त्यसैले अर्थहीन शोक
त्यागी सधैं श्राद्ध गर्नू ।

**एतावदेव कर्तव्यं सदा प्रेतस्य बन्धुभिः ।
नोपकुर्यान्नरः शोचन् प्रेतस्यात्मन एव वा ॥३७॥**

यस प्रकार मृतकका आफन्तले शोक गर्नाले न त मृतकलाई न
आफूलाई नै लाभ हुन्छ भनी जान्नू ।

**दृष्ट्वा लोकमनाक्रन्दं म्रियमाणाँश्च बान्धवान् ।
धर्ममेकं सहायार्थं वरयध्वं सदा नराः ॥३८॥**



संसारका कुनै पनि कुराले मृतकको सहायता हुन सक्दैन, उसलाई धर्मले मात्र
सहायता गर्न सक्छ भनी जानी मानवले आचरण गर्नू ।

**मृतोऽपि बान्धवः शक्तो नानुगन्तं नरं मृतम् ।
जायावर्जं हि सर्वस्य याम्यः पन्था विरुध्यते ॥३९॥**

सँगै मर्दा पनि मृतकलाई पछ्याउन बान्धबले सक्दैन, धर्मपत्नी बाहेक
सबैलाई यममार्गमा मृतकलाई पछ्याउन रोकिन्छ ।

**धर्म एकोऽनुयात्येनं यत्र क्वचनगामिनम् ।
नन्वसारे नृलोकेऽस्मिन्धर्मं कुरुत माचिरम् ॥४०॥**

धर्ममात्र एउटा यस्तो कुरो हो जसले उ जहाँ गएपनि पछ्याउँदछ । त्यसैले
यो दयनीय नरलोकमा आफ्नो धर्म दृढतापूर्वक पालना गर्नू ।

**श्वः कार्यमद्य कुर्वीत पूर्वाह्णे चापराह्णिकम् ।**
**न हि प्रतीक्षते मृत्युः कृतं वास्य न वा कृतम् ॥४१॥**

भोली गर्नुपर्ने कार्य आजै गर्नू, बेलुका गर्नुपर्ने बिहानै गर्नू
किनकी कालले कार्य गरेको नगरेको भनी कुरेर बस्दैन ।

**क्षेत्रापणगृहासक्तमन्यत्रगतमानसम् ।**
**वृकीवोरणमासाद्य मृत्युरादाय गच्छति ॥४२॥**

जब मन खेतमा, वाहनमा र घरमा आशक्त हुन्छ र बिचार अरु मनपर्ने कुरामा लीन हुन्छ तब उ पोथी ब्वाँसोले भेडाको बच्चाको शिकार गरेझैं तुरुन्त मृत्युको शिकार हुन्छ ।

**न कालस्य प्रियः कश्चिद्द्वेष्यश्चास्य न विद्यते ।**
**आयुष्ये कर्मणि क्षीणे प्रसह्य हरते जनम् ॥४३॥**

काल कसैको मित्र वा शत्रु हुँदैन, पूर्वजन्मका कर्मका आधारमा वर्तमानको भोग
सकिएपछि (आयु सकिएपछि) उसले मानिसलाई बलपूर्वक आफ्नो पञ्जामा लिन्छ ।



**नाप्राप्तकालो म्रियते विद्धः शरशतैरपि ।**
**कुशाग्रेणापि संस्पृष्टः प्राप्तकालो न जीवति ॥४४॥**

मानव समय नआई सयौं बाणले घोचिँदा पनि मर्दैन तर समय आएपछि
कुशको टुप्पोले घोच्दा पनि बाँच्दैन ।

**नौषधानि न मन्त्राश्च न होमा न पुनर्जपाः ।**
**त्रायन्ते मृत्युनोपेतं जरया वापि मानवम् ॥४५॥**

औषधि, मन्त्र, होम र जप केहीले पनि मानिसलाई वृद्धत्व र मरणको बन्धनबाट जोगाउँदैन ।

**आगामिनमनर्थं हि प्रविधानशतैरपि ।**
**न निवारयितुं शक्तस्तत्र का परिदेवना ॥४६॥**

आसन्न विपदलाई सैयौं सावधानीले पनि पन्छाउन सकिँदैन भने किन तिमिले शोक गर्नू ? ।

**यथा धेनुसहस्रेषु वत्सो विदन्ति मातरम् ।**
**तथा पूर्वकृतं कर्म कर्तारं विन्दते ध्रुवम् ॥४७॥**

जसरी हजारौं गाईको बथानमा पनि बाच्छाले माउ पत्ता लगाउँदछ
त्यसरी नै पहिले गरेका कर्मले कर्ता पत्ता लगाई पछ्याउँदछ ।

**अव्यक्तादीनि भूतानि व्यक्तमध्यानि चाप्यथ ।**
**अव्यक्तनिधनान्येव तत्र का परिदेवना ॥४८॥**

जे छ त्यो कहिले देखि छ थाहा छैन, जे अहिले छ त्यो थाहा छ तर कहिलेसम्म
हुन्छ त्यो पनि थाहा छैन भने के को शोक गर्नू ? ।

**देहिनोऽस्मिन्यथा देहे कौमारं यौवनं जरा ।**
**तथा देहान्तरप्राप्तिर्धीरस्तत्र न मुह्यति ॥४९॥**

जिवात्माको शरीर बालक, कुमार र वृद्ध हुँदै अर्को शरीरमा प्रवेश गर्दछ
भन्ने कुराबाट विद्वानले मुख फेर्न हुँदैन ।

**गृह्णातीह यथा वस्त्रं त्यक्त्वा पूर्वधृतं नरः ।**
**गृह्णात्येवं नवं देही देहं कर्मनिबन्धनम् ॥५०॥**

जसरी पुराना वस्त्र फेरी नयाँ लगाइन्छ त्यरी नै आत्माले पनि पूर्वजन्मका कर्म
अनुसार नयाँ शरीर बदल्दछ ।

**नैनं छिन्दन्ति शस्त्राणि नैनं दहति पावकः ।**
**न चैनं क्लेदयन्त्यापो न शोषयति मारुतः ॥५१॥**

आत्मालाई न शस्त्रले चोट पुऱ्याउँदछ, न आगोले डढाउँदछ, न
पानीले भिजाउँदछ न हावाले सुकाउँदछ ।

**अच्छेद्योऽयमदाह्योऽयमक्लेद्योऽशोष्य एव च ।**

नित्यः सततगः स्थाणुरचलोऽयं सनातनः ॥५२॥
अव्यक्तोऽयमचिन्त्योऽयमविकार्योऽयमुच्यते ।
तस्मादेवं विदित्वैनं नानुशोचितुमर्हथ ॥५३॥

यो चोट पुऱ्याउन नसकिने, डढाउन नसकिने, भिजाउन नसकिने र सुकाउन नसकिने अविनाशी, निरन्तर, अपरिवर्तनीय, चलाउन नसकिने र सनातन हुन्छ । यो अभौतिक, सबै शोचभन्दा परको र अपरिवर्तनीय छ । आत्माका बारेमा यस्तो जानेर तिमिले (मृतकका लागि) शोक नगर ।

## ॥ समाप्तमिदं विंशोऽध्यायः ॥२०॥



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको बीसौं अध्याय पूर्ण भयो ।



## एकविंशोऽध्यायः
## (एक्काइसौं अध्याय)

**अथाशौचव्यगमे सुस्नातः सुप्रक्षालितपाणिपादः स्वाचान्तस्त्वेवंविधान् ब्राह्मणान् यथाशक्त्युदङ्मुखान् गन्धमाल्यवस्त्रालङ्कारादिभिः पूजिता जयेत्॥१॥**

आशौच सकिए पछि समन्त्र नुहाई, गोडाहात धोई र आचमन गरी यथाशक्ति त्यस्तै प्रकारले शुद्ध ब्राह्मणहरु बोलाई उत्तर फर्काएर राखी चन्दन, माला, वस्त्र, अलङ्कार आदिले पूजा गरी भोजन गराउनू ।

**एकवन्मन्त्रानूहेदेकोद्दिष्टे॥२॥**

एकोद्दिष्टमा एउटै मन्त्रले श्राद्ध दिनू ।

**उच्छिष्टसन्निधावेकमेव तन्नामगोत्राभ्यां पिण्डं निर्वपेत्॥३॥**

बाँकी अन्नको नगिचै उसको नाम र गोत्र पढी एक मात्र पिण्ड दिनू ।



**भुक्तवत्सु ब्राह्मणेषु दक्षिणयाभिपूजितेषु प्रेतनामगोत्राभ्यां दत्ताक्षय्योदकश्चतुरङ्गुल-पृथ्वीस्तावदन्तरास्तावदधःखाता वितस्त्यापतास्तिस्रः कर्षूः कुर्यात्॥४॥**

भोजनरत ब्राह्मणहरुलाई दक्षिणा दिई मृतकको नाम र गोत्र पढी तर्पण गरिसकेर कर्षू बनाउनू । ती कर्षू चार अमल चौडा, चार अमल गहिरा र चार अमल फरकमा बनाइएका हुन् र बाह्र अमल लामा हुन् ।

**कर्षूसमीपे चाग्नित्रयमुपसमाधाय परिस्तीर्य तत्रैकैकस्मिन्नाहुतित्रयं जुहुयात्॥५॥**

कर्षूका नगिचै तीन वटा आगो बाल्नू, त्यसमा इन्धन हाली तीन आहुती हाल्नू ।

**सोमाय पितृमते स्वधा नमः॥६॥**

पहिलो 'सोमाय पितृमते स्वधा नमः' मन्त्रले सोमलाई ।

**अग्नये कव्यवाहनाय स्वधा नमः ॥७॥**

दोश्रो 'अग्नये कव्यवाहनाय स्वधा नमः' भनी अग्निलाई ।

**यमायाङ्गिरसे स्वधा नमः ॥८॥**

तेश्रो 'यमायाङ्गिरसे स्वधा नमः' भनी यम अङ्गिरसलाई आहुती हाल्नू ।

**स्थानत्रये च प्राग्वत्पिण्डनिर्वपणं कुर्यात् ॥९॥**

त्यो कर्षूमा सूत्र तीनमा बताए झैं पिण्ड राख्नू ।

**अन्नदधिघृतमधुमांसै कुर्षूत्रयं पूरयित्वैतत्त इति जपेत् ॥१०॥**

ती तीन कर्षूलाई अन्न, दही, घिउ, मह र मांसले भरी "यो हजुरका लागि भन्नू" ।

**एवं मृताहे प्रतिमासं कुर्यात् ॥११॥**

यो प्रतिमहिना मृत तिथिमा गर्नू ।

**सम्वत्सरान्ते प्रेताय तत्पित्रे तत्पितामहाय तत्प्रपितामहाय च ब्राह्मणान्देवपूर्वान्भोजयेत् ॥१२॥**

वर्षान्तमा मृतक, तिनका बाबु, तिनका हजूरबाबु र कुप्राबाबुका निमित्त भनी पहिला देवतालाई खुवाएर ब्राह्मणलाई खुवाउनू ।

**अत्राग्नौकरणमावाहनं पाद्यं च कुर्यात् ॥१३॥**

यस बखत (एकोद्दिष्ट गर्दा) अग्निकरण, आवाहन र पाद्य अर्पण पनि गर्नू ।

**संसृजतु त्वा पृथिवी समानी व इति च प्रेतपाद्यपात्रे पितृपाद्यपात्रत्रये योजयेत् ॥१४॥**

"संसृजतु त्वा पृथिवी समानी.." मन्त्रले प्रेतपाद्यपात्रमा पितृपाद्यपात्र मिसाउनू ।

**उच्छिष्टसंनिधौ पिण्डचतुष्टयं कुर्यात्॥१५॥**

बाँकी बचेको अन्नको नगिचै चार पिण्ड दिनू ।

**ब्राह्मणांश्च स्वाचान्तान्दत्तदक्षिणांश्चानुव्रज्य विसर्जयेत्॥१६॥**

ब्राह्मणहरुलाई आचमन गराई, दक्षिणा दिई परसम्म पुऱ्याई पितृकार्यको विसर्जन गर्नू ।

**ततः प्रेतपिण्डं पाद्यपात्रोदकवत्पिण्डत्रये निदध्यात्॥१७॥**

त्यसपछि प्रेतपिण्डलाई पाद्यपात्रको जल मिसाए झैं बाँकी तीन पिण्डमा मिसाउनू ।

**कर्षूत्रयसंनिकर्षेऽप्येवमेव॥१८॥**

त्यो पिण्डलाई कर्षू नगिचै नै राख्नू ।



**पिण्डीकरणं मासिकार्थद्वादशाहं श्राद्धं कृत्वा त्रयोदशेऽह्नि वा कुर्यात्॥१९॥**

सपिण्डीकरण बाह्रौं दिनको मासिक श्राद्ध सकेर वा तेह्रौं दिनमा गर्नू ।

**मन्त्रवर्जं हि शूद्राणां द्वादशेऽह्नि॥२०॥**

शूद्रको बाह्र का दिन मन्त्रबिना गर्नू ।

**संवत्सराभ्यन्तरे यद्यधिमासो भवेत्तदा मासिकार्थे दिनमेकं वर्धयेत्॥२१॥**

त्यो वर्ष अधिमास परे मासिक श्राद्ध एक दिन थप गर्नू ।

**सपिण्डीकरणं स्त्रीणां कार्यमेवं तथा भवेत् ।**
**यावज्जीवं तथा कुर्याच्छ्राद्धं तु प्रतिवत्सरम्॥२२॥**

यसैगरी स्त्रीको सपिण्डीकरण हुन्छ । बाँचुञ्जेल प्रत्येक वर्ष श्राद्ध गर्नू ।

**अर्वाक्सपिण्डीकरणं यस्य सम्वत्सरात्कृतम् ।**
**तस्याप्यन्नं सोदकुम्भं दद्याद्वर्षं द्विजन्मने ॥२३॥**

सपिण्डीकरण भन्दा पछि छुटेको (श्राद्ध गर्न) वर्षभरी ब्राह्मणलाई
अन्न र जलपूर्ण घडा दान दिनू ।

**॥ समाप्तमिदमेकविंशोऽध्यायः ॥२१॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको एक्काइसौं अध्याय पूर्ण भयो ।



## द्वाविंशोऽध्यायः
## (बाइसौं अध्याय)

**ब्राह्मणस्य सपिण्डानां जननमरणयोर्दशाहमाशौचम् ॥१॥**

ब्राह्मणका सपिण्डीको जन्ममरणमा दश दिनको आशौच हुन्छ ।

**द्वादशाहं राजन्यस्य ॥२॥**

क्षत्रियको बाह्र दिनको आशौच हुन्छ ।

**पञ्चदशाहं वैश्यस्य ॥३॥**

वैश्यको पन्ध्र दिनको आशौच हुन्छ ।

**मासं शूद्रस्य ॥४॥**



शूद्रको एक महिनाको आशौच हुन्छ ।

**सपिण्डता च पुरुषे सप्तमे विनिवर्तते ॥५॥**

सातौं पुस्ताबाट सपिण्डता छुट्‌द्छ ।

**आशौचे होमदानप्रतिग्रहस्वाध्याया निवर्तन्ते ॥६॥**

आशौचमा होम गर्न, दान दिन, दान लिन र स्वाध्याय गर्न छोड्नु पर्दछ ।

**नाशौचे कस्यचिदन्नमश्नीयात् ॥७॥**

आशौचमा कसैको अन्न नखानू (सपिण्डीको बाहेक) ।

**ब्राह्मणादीनामशौचे यः सकृदेवान्नमश्नाति तय तावदशौचं यावत्तेषाम् ॥८॥**

जसले ब्राह्मणादिको आशौचमा गएर एक पटक भोजन गर्दछ
उसलाई आशौची सरह नै आशौच रहन्छ ।

**आशौचापगमे प्रायश्चित्तं कुर्यात्॥९॥**

(उसले) आशौच सकिएपछि प्रायश्चित गर्नू ।

**सवर्णस्याशौचे द्विजो भुक्त्वा स्रवन्तीमासाद्य तन्निमग्नस्त्रिरघमर्षणं जप्त्वोत्तीर्य गायत्र्यष्टसहस्रं जपेत्॥१०॥**

समान वर्णको आशौचमा गएर खानेहरुले आशौच सकिएपछि नदीमा गई डुबुल्की लगाई तीन पटक अघमर्षण मन्त्र जप गर्नू र पानी बाहिर आई एक हजार आठ पटक गायत्री जप गर्नू ।

**क्षत्रियाशौचे ब्राह्मणस्त्वेतदेवोपोषितः कृत्वा शुध्यति॥११॥**

क्षत्रियको आशौचमा खाने ब्राह्मण पनि यही तरिकाले थप एक दिन उपवास बसेर शुद्ध हुन्छ ।



**वैश्याशौचे राजन्यश्च॥१२॥**

वैश्यको आशौचमा खाने क्षत्रियले पनि यसरी नै शुद्ध हुनू ।

**वैश्याशौचे ब्राह्मणस्त्रिरात्रोपोषितश्च॥१३॥**

वैश्यको आशौचमा खाने ब्राह्मणले थप तीन रात उपवास बस्नू ।

**ब्राह्मणाशौचे राजन्यः क्षत्रियाशौचे वैश्यश्च स्रवन्तीमासाद्य गायत्रीशतपञ्चकं जपेत्॥१४॥**

ब्राह्मणको आशौचमा क्षत्रियले र क्षत्रियको आशौचमा खाने
वैश्यले नदीमा गई पाँच सय पटक गायत्री जप गर्नू ।

**वैश्यश्च ब्राह्मणाशौचे गायत्र्यष्ठशतं जपेत्॥१५॥**

ब्राह्मणको आशौचमा खाने वैश्यले नदीमा गई एक सय आठ पटक गायत्री जप गर्नू ।

**शूद्राशौचे द्विजो भुक्त्वा प्राजापत्यं चरेत् ॥१६॥**

शूद्रको आशौचमा खाने द्विजले प्राजापत्य व्रत गर्नू ।

**शूद्रश्च द्विजाशौचे स्नानमाचरेत् ॥१७॥**

द्विजको आशौचमा खाने शूद्रले नुहाउनू ।

**शूद्रः शूद्राशौचे स्नातः पञ्चगव्यं पिबेत् ॥१८॥**

शूद्रले शूद्रका आशौचमा खाए पञ्चगव्य पिउनू ।

**पत्नीनां दासानामानुलोम्येन स्वामिनस्तुल्यमाशौचम् ॥१९॥**

आफूभन्दा तलका वर्णका पत्नी र दासको स्वामीलाई मालिकको वर्ण अनुसार आशौच हुन्छ ।

**मृते स्वामिन्यात्मीयम् ॥२०॥**

आफूभन्दा पर बस्ने स्वामीको मरणमा आफ्नो समान आशौच रहन्छ ।

**हीनवर्णानामधिकवर्णेषु सपिण्डेषु तदाशौचव्यपगमे शुद्धिः ॥२१॥**

उच्च वर्णका सपिण्डीको मृत्युमा हीन वर्णलाई उच्च वर्ण समान आशौच हुन्छ ।

**ब्राह्मणस्य क्षत्रविट्शूद्रेषु सपिण्डेषु षड्रात्रत्रिरात्रैकरात्रैः ॥२२॥**

क्षत्रिय, वैश्य र शूद्र सपिण्डीको जन्ममरणमा ब्राह्मणलाई
क्रमशः छ, तीन र एक रात आशौच हुन्छ ।

**क्षत्रियस्य विट्शूद्रयोः षड्रात्रत्रिरात्राभ्याम् ॥२३॥**

वैश्य शुद्र सपिण्डीको जन्ममरणमा क्षत्रियलाई क्रमशः छ र तीन रात आशौच रहन्छ ।

**वैश्यस्य शूद्रेषु षड्रात्रेण ॥२४॥**

वैश्यलाई शूद्र सपिण्डीको जन्ममरणमा छ रात आशौच रहन्छ ।

**मासतुल्यैरहोरात्रैर्गर्भस्रावे ॥२५॥**

गर्भस्रावमा गर्भमहिना तुल्य आशौच हुन्छ ।

**जातमृते मृतजाते वा कुलस्य सद्यः शौचम् ॥२६॥**

मृतक जन्मेमा वा जन्मनासाथ मरेमा (नाल नकाटी) स्नानले नै शुद्ध हुन्छ ।

**अदन्तजाते बाले प्रेते सद्य एव ॥२७॥**

दाँत नआई मरेका बच्चाको पनि स्नानले नै शुद्ध हुन्छ ।

**नास्याग्निसंस्कारो नोदकक्रिया ॥२८॥**

यस्ता बच्चाको अग्निसंस्कार र जलदान कर्म हुँदैन ।

**दन्तजाते त्वकृतचूडे त्वहोरात्रेण ॥२९॥**

दाँत उम्रेर चूडाकर्म नगर्दाको मृत्युमा एक दिनरातमा शुद्ध हुन्छ ।

**कृतचूडे त्वसंस्कृते त्रिरात्रेण ॥३०॥**

चूडा गरी व्रतबन्ध नगर्दाको तीन रातमा शुद्ध हुन्छ ।

**ततः परं यथोक्तकालेन ॥३१॥**

यसभन्दा माथिकाको माथि बताएको समयमा शुद्धि हुन्छ ।

**स्त्रीणां विवाहः संस्कारः ॥३२॥**

स्त्रीको संस्कार विवाह हो ।

**संस्कृतासु स्त्रीषु नाशौचं पितृपक्षे ॥३३॥**

विवाहित स्त्रीको बाबुपक्षलाई आशौच लाग्दैन ।

**तत्प्रसवमरणे चेत्पितृगृहे स्यातां तदैकरात्रं त्रिरात्रञ्च ॥३४॥**

बाबुको घरमा सुत्केरी हुँदा मृत्यु भए परिवारका अन्य सदस्य र आफन्त एक रातमा तथा बाबुआमा तीन रातमा शुद्ध हुन्छन् ।

**जननाशौचमध्ये यद्यपरं जननाशौचं स्यात्तदा पूर्वाशौचव्यपगमे शुद्धिः ॥३५॥**

सूतकमा सूतक परे पहिलो चोखिँदा दोश्रो चोखिन्छ ।

**रात्रिशेषे दिनद्वयेन ॥३६॥**

अन्तिम रात बाँकी हुँदा खप्टे दुई दिनपछि चोखिन्छ ।

**प्रभाते दिनत्रयेण ॥३७॥**

एक बिहान बाँकीमा भए तीन दिनमा चोखिन्छ ।

**मरणाशौचमध्ये ज्ञातिमरणेऽप्येवम् ॥३८॥**

जूठोमा नातेदारको जूठो पर्दा पनि यही विधि जान्नू ।

**श्रुत्वा देशान्तरस्थो जननमरणे आशौचशेषेण शुध्येत् ॥३९॥**

विदेशको मरण सुनेपछि बाँकी दिनमा आशौच शुद्ध हुन्छ ।

**व्यतीतेऽशौचे संवत्सरान्तस्त्वेकरात्रेण ॥४०॥**

एक वर्षपछि सुने एक रातमा शुद्ध हुन्छ ।

**ततः परं स्नानेन ॥४१॥**

यसबखत उसले स्नान गरी शुद्ध हुन्छ ।

**आचार्ये मातामहे च व्यतीते त्रिरात्रेण ॥४२॥**

आचार्य र मावली हजूरबाबुको मरणमा तीन रात आशौच हुन्छ ।

**अनौरसेषु पुत्रेषु जातेषु च मृतेषु च ।**
**परपूर्वासु भार्यासु प्रसूतासु मृतासु च ॥४३॥**

आफूबाट उत्पन्न नभएको पुत्रको जन्ममरणमा तथा पोईल आएकी
पत्नीको बच्चा नजन्माई हुने मरणमा पनि तीन रातको आशौच रहन्छ ।

**आचार्यपत्नीपुत्रोपाध्यायमातुलश्वशुरश्वशुर्यसहाध्यायिशिष्येष्वतीतेष्वेकरात्रेण ॥४४॥**

आचार्यका पत्नी र पुत्र, उपाध्याय, मामा, ससुरा, सालो, सहपाठी र
शिष्यको मरणमा पनि एक रातमा शुद्धि हुन्छ ।

**स्वदेशराजनि च ॥४५॥**

स्वदेशका राजाको मरणमा पनि ।

**असपिण्डे स्ववेश्मनि मृते च ॥४६॥**

घरमा असपिण्डीको मरणमा पनि ।

**भृग्वग्न्यनाशकाम्बुसङ्ग्रामविद्युन्नृपहतानां नाशौचम् (भृगुर्गिरिकुटकः) ॥४७॥**

पर्वतको टाकुराबाट लडेर, अग्निले, भोकले, पानीका कारणले,
युद्धमा, चट्याङले र राजाले मारिनेको आशौच लाग्दैन ।

**न राज्ञां राजकर्मणि ॥४८॥**

राज्य सञ्चालन गर्दा राजालाई पनि आशौच लाग्दैन ।

**न व्रतिनां व्रते ॥४९॥**

व्रत बसेका व्रतीलाई पनि आशौच लाग्दैन ।

**न सत्त्रिणां सत्त्रे (यजमानानां गवामयनान्नसत्त्रादौ ) ॥५०॥**

बलिकार्यमा संलग्न हुनेलाई पनि आशौच लाग्दैन ।

**न कारूणां कारूकर्मणि ॥५१॥**



शिल्पकार (सिकर्मी आदि) लाई काममा व्यस्त हुँदा आशौच लाग्दैन ।

**न राजाज्ञाकारिणां तदिच्छया ॥५२॥**

राजाको आज्ञामा रहनेलाई राजाको इच्छा नहुँदा पनि आशौच लाग्दैन ।

**न देवप्रतिष्ठाविवाहयोः पूर्वसम्भृतयोः ॥५३॥**

देवप्रतिष्ठामा र विवाहको पूर्वाङ्ग कर्म (नान्दीमुखी) गरेपछि पनि
उक्त कार्य नसकिएसम्म आशौच लाग्दैन ।

**न देशविभ्रमे (उपप्लवे) ॥५४॥**

पूरा देश आपदमा पर्दा पनि आशौच लाग्दैन ।

**आपद्यपि च कष्टायाम् (कष्टापद्दुर्भिक्षरोगादि) ॥५५॥**

अकाल, महामारी जस्ता कष्टकारी समयमा पनि आशौच लाग्दैन ।

**आत्मत्यागिनः पतिताश्च नाशौचोदकभाजः ॥५६॥**

आत्महत्या गर्ने र पतितको न आशौच लाग्दछ न जल दान नै दिइन्छ ।

**पतितस्य दासी मृताहे पदापां घटमपवर्जयेत् ॥५७॥**

पतितकी दासीले मृतदिनमा हिँडेर गाग्रोमा जल लेराउनू र पिउनका लागि सोध्नू ।

**उद्बन्धनमृतस्य यः पाशं छिन्द्यात्स तप्तकृच्छ्रेण शुध्यति ॥५८॥**

झुन्डिएर मर्नेको पासो काट्ने व्यक्ति तप्तकृच्छ्रले शुद्ध हुन्छ ।

**आत्मत्यागिनां संस्कर्ता च ॥५९॥**



आत्महत्या गर्नेको संस्कार गर्ने पनि तप्तकृच्छ्रले शुद्ध हुन्छ ।

**तदश्रुपातकारी च ॥६०॥**

आत्महत्या गर्नेकालागि आँशु बगाउने पनि तप्तकृच्छ्रले शुद्धहुन्छ ।

**सर्वस्यैव प्रेतस्य बान्धवैः सहाश्रुपातं कृत्वा स्नानेन ॥६१॥**

सबै खाले मृत्युमा नातेदारले आँशु बहाए नुहाएर शुद्ध हुन्छन् ।

**अकृतेऽस्थिसञ्चये सचैलस्नानेन ॥६२॥**

अस्थिसञ्चयन नभई रोए सवस्त्र नुहाएर शुद्ध हुन्छन् ।

**द्विजः शूद्रप्रेतानुगमनं कृत्वा स्रवन्तीमासाद्य तन्निमग्नस्त्रिरघमर्षणं जप्त्वोत्तीर्य गायत्र्यष्टसहस्रं जपेत् ॥६३॥**

द्विजले शूद्रको मलाम गए नदीमा डुबुल्की मारी अघमर्षण तीन पटक
जप्नू अनि बाहिर निक्ली एक हजार आठ पटक गायत्री जप्नू ।

**द्विजप्रेतस्याष्टशतम् ॥६४॥**

द्विजले द्विजको मलामी गए नदीमा नुहाई अघमर्षण तीन पटक
जपी गायत्री एक सय आठ पटक जप्नू ।

**शुद्रः प्रेतानुगमनं कृत्वा स्नानमाचरेत् ॥६५॥**

शूद्रले मलाम गए पछि नुहाउनू ।

**चिताधूमसेवने सर्वे वर्णाः स्नानमाचरेयुः ॥६६॥**

चिताको धुवाँ सेवन गरेपछि सबै वर्णले नुहाउनू ।

**मैथुने दुःस्वप्ने रुधिरोपगतकण्ठे वमनविरेकयोश्च ॥६७॥**



मैथुन पछि, (गधा आदि चढेको) खराब सपना देखेर, घाँटीबाट रगत आउँदा,
वमन गरेपछि र दिसा गरेपछि पनि नुहाउनू ।

**श्मश्रुकर्मणि कृते च ॥६८॥**

कपाल खौरेपछि पनि नुहाउनू ।

**शवस्पृशं च स्पृष्ट्वा रजस्वलाचाण्डालयूपांश्च ॥६९॥**

लाश छुनेलाई, रजस्वला, चाण्डाल र मौलो छोएपछि पनि नुहाउनू ।

**भक्ष्यवर्जं पञ्चनखशवं तदस्थि सस्नेहं च ॥७०॥**

मासु खान नहुने पाँचनङ्ग्रे जनावरको लाश र तिनको आलो हाड छोए पनि नुहाउनू ।

**सर्वेष्वेतेषु स्नानेषु वस्त्रं नाप्रक्षालितं बिभृयात् ॥७१॥**

यी सबै स्नानमा वस्त्र नधोई नलगाउनू ।

**रजस्वला चतुर्थेऽह्नि स्नानाच्छुध्यति ॥७२॥**

रजस्वला-स्त्री चौथो दिनमा नुहाएर शुद्ध हुन्छे ।

**रजस्वला हीनवर्णां रजस्वलां स्पृष्ट्वा न तावदश्नीयाद्यावन्न शुद्धा ॥७३॥**

रजस्वलाले हीनवर्णका अन्य रजस्वला छोए शुद्ध नभई नखानू ।

**सवर्णामधिकवर्णां वा स्पृष्ट्वा सद्यः स्नात्वा शुध्यति ॥७४॥**

रजस्वलाले समान वा माथ्लो वर्णकी रजस्वला छोए नुहाएर खानू ।

**क्षुत्वा सुप्त्वा भुक्त्वा भोजनाध्ययनेप्सुः पीत्वा स्नात्वा निष्ठीव्य वासः परिधाय रथ्यामाक्रम्य मूत्रपुरीषे कृत्वा पञ्चनखास्थ्यस्नेहं स्पृष्ट्वा चाचामेत् ॥७५॥**

हाच्छिउँ गरेर, सुतेर, खाएर, खान खानु अघि, पढ्नु अघि, पानी पिएर, नुहाएर, थुकेर, लुगा लगाएर, राजमार्गमा हिँडेर, मलमूत्र त्याग गरेर, पाँच नङ्ग्रे पशुको आलो हाड छोएर आचमन गर्नू ।

**चाण्डालम्लेच्छसम्भाषणे च ॥७६॥**

चाण्डाल र म्लेच्छसँग कुराकानी गरेपछि पनि आचमन गर्नू ।

**नाभेरधस्तात्प्रबाहुषु च कायिकैर्मलैः सुराभिर्मद्यैश्चोपहतो मृत्तोयैस्तदङ्गं प्रक्षाल्य शुध्येत् ॥७७॥**

नाइटो मुनिको भाग र हत्केला अपवित्र हुन्छ वा मदिरा आदि पर्दछ भने त्यो अङ्गमा माटोपानी दलेर शुद्ध पार्नू ।

**अन्यत्रोपहतो मृत्तोयैस्तदङ्गं प्रक्षाल्य स्नानेन ॥७८॥**

शरीरका अरु भाग अपवित्र भए माटोपानी दली नुहाउनाले शुद्ध हुन्छ ।

**वक्त्रोपहतस्तूपोष्य स्नात्वा पञ्चगव्येन ॥७९॥**

मुख अपवित्र भए उपवास बसेर, नुहाएर र पञ्चगव्य खाएर शुद्ध हुन्छ ।

**दशनच्छदोपहतश्च ॥८०॥**

ओठ अपवित्र भएपनि यसै गर्नू ।

**वसा शुक्रमसृङ्मज्जा मूत्रं विट्कर्णविण्नखाः ।**
**श्लेष्माश्रु दूषिका स्वेदो द्वादशैते नृणां मलाः ॥८१॥**

बोसो, वीर्य, रगत, चायाँ, मूत्र, दिसा, कानेगुजी, नङको मैलो, कफ, आँशु,
चिप्रा र पसिना : यी मानिसका बाह्र मल हुन् ।८१।



**गौडी माध्वी च पैष्टी च विज्ञेया त्रिविधा सुरा ।**
**यथैवैका तथा सर्वा न पातव्या द्विजातिभिः ॥८२॥**

गौडी, माध्वी र पैष्टी गरी तीन प्रकारका सुरा हुन्छन् र ती सबै
समान हुन् । द्विजातिले यो नखानू ।

**माधूकमैक्षवं टाङ्कं कौलं खार्जूरपानसे ।**
**मृद्विकारसमाध्वीके मैरेयं नारिकेलजम् ॥८३॥**
**(माधूकं मधूकपुष्पोद्भवम्, टङ्क कपित्थविशेषः, माध्वीकं मधूद्भवं माध्वीव्यतिरिक्तम्, मैरेयं धातृपुष्पजं, गुडधान्याम्बुसहितमिति शब्दार्णवे वाचस्पति ।)**

मधुक वृक्षको, ऊखुको, एक थरी खयरको, बयर (अं.जुजुबे), खयरको, रुख कटहरको,
अङ्गूरको, मधुकाको फूलको, धातृफूलको र नरिवलको पनि मद्य हुन्छ ।

**अमेध्यानि दशैतानि मद्यानि ब्राह्मणस्य च ।**

**राजन्यश्चैव वैश्यश्च स्पृष्ट्वैतानि न दुष्यतः ॥८४॥**
**(स्पर्शः पानोपलक्षणः ।)**

यी दश० पेय ब्राह्मणका लागि अस्पर्शनीय (अपेय) हुन् भने क्षत्रिय र वैश्यले छुन दोष छैन (पिउन सक्छ) ।

**गुरोः प्रेतस्य शिष्यस्तु पितृमेधं समाचरन् ।**
**प्रेताहारैः समं तत्र दशरात्रेण शुध्यति ॥८५॥**

गुरुको मलाम जाने शिष्य शव बोक्ने (आफन्त) सरह दश दिनमा शुद्ध हुन्छ ।

**आचार्यं स्वमुपाध्यायं पितरं मातरं गुरुम् ।**
**निर्हृत्य तु व्रती प्रेतान्न व्रतेन वियुज्यते ॥८६॥**
**(व्रती ब्रह्मचारी, व्रतेन ब्रह्मचर्येण न वियुज्यते न भ्रश्यति ।)**

आचार्य, आफ्नो उपाध्याय, पिता, माता र गुरुको लाश बोक्दा व्रतिको व्रत खण्डन हुँदैन ।



**आदिष्टी नोदकं कुर्यादाव्रतस्य समापनात् ।**
**समाप्ते तूदकं कृत्वा त्रिरात्रेणैव शुध्यति ॥८७॥**

ब्रह्मचर्य समाप्त नभइकन (मातापिता बाहेक अरुलाई) जलाञ्जली नदिनू, सकिएपछि जलाञ्जली दिई तीन रातमा शुद्ध हुन्छ ।

**ज्ञानं तपोऽग्निराहारो मृन्मनो वार्युपाञ्जनम् ।**
**वायुः कर्मार्ककालौ च शुधिकर्तृणि देहिनाम् ॥८८॥**

ज्ञान, तप, अग्नि, आहार, जमिन, विचार, जल, गोमूत्र र गोबर, वायु, पवित्र कर्म, सूर्य तथा समय शुद्धिका कारक हुन् ।

**सर्वेषामेव शौचानामन्नशौचं परं स्मृतम् ।**
**योऽन्ने शुचिः स हि शुचिर्न मृद्वारिशुचिः शुचिः ॥८९॥**

सबै शौचमा अन्नको (आहार) शौच प्रमुख हो । जो शुद्ध आहार गर्दछ उही

शुद्ध हो माटोपानीको शुद्धता के शुद्धता ? ।

**क्षान्त्या शुध्यन्ति विद्वांसो दानेनाकार्यकारिणः ।**
**प्रच्छन्नपापा जप्येन तपसा वेदवित्तमाः ॥९०॥**

विद्वान क्षमाले शुद्ध हुन्छन् । गर्न नहुने कार्य गर्ने दानले, गुप्तपापी जपले र वेदज्ञ तपले शुद्ध हुन्छन् ।

**मृत्तोयैः शोध्यते शोध्यं नदी वेगेन शुध्यति ।**
**रजसा स्त्री मनोदुष्टा सन्न्यासेन द्विजोत्तमाः ॥९१॥**

शुद्ध पार्ने कुरा माटोपानीले शुद्ध हुन्छ, नदी बहावले शुद्ध हुन्छ, मनदुष्टा स्त्री परसर्नाले र उत्तम द्विज सन्यासले शुद्ध हुन्छन् ।

**अद्भिर्गात्राणि शुध्यन्ति मनः सत्येन शुध्यति ।**
**विद्यातपोभ्यां भूतात्मा बुद्धिर्ज्ञानेन शुध्यति ॥९२॥**



शरीर जलले, मन सत्यले, आत्मा विद्या र तपले तथा बुद्धि ज्ञानले शुद्ध हुन्छ ।

**एष शौचस्य ते प्रोक्तः शारीरस्य विनिर्णयः ।**
**नानाविधानां द्रव्याणां शुद्धेः श्रृणु विनिर्णयम् ॥९३॥**

शरीर शुद्धिका यी नियमहरु तिमीलाई बताएँ, अब विभिन्न वस्तुको शुद्धिका विषयमा बताउँदछु, सुन ।

**॥ समाप्तमिदं द्वाविंशोऽध्यायः ॥२२॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको बाइसौं अध्याय पूर्ण भयो ।



# त्रयोविंशोऽध्यायः
(तेइसौं अध्याय)

**शारीरैर्मलैः सुराभिर्मद्यैर्वा यदुपहतं तदत्यन्तोपहतम् ॥१॥**

शरीरको अशुद्धिमा सुरा आदिले भएको अशुद्धि ठूलो हुन्छ ।

**अत्यन्तोपहतं सर्वं लोहभाण्डमग्नौ प्रक्षिप्तं शुध्येत् ॥२॥**

फलामका धेरै प्रदूषित भाँडाहरु आगामा  तताएर शुद्ध हुन्छन् ।

**मणिमयमश्ममयमब्जं च सप्तरात्रं महीनिखनेन ॥३॥**

मणि वा अन्य समुद्री  जीवबाट बनेका सामान सात दिन जमिनमा गाड्नाले शुद्ध हुन्छन् ।

**श्रृङ्गदन्तास्थिमयं तक्षणेन ॥४॥**



सिङ, दाँत र हाडका सामान खुर्केर शुद्ध हुन्छन् ।

**दारवं मृन्मयं च जह्यात् ॥५॥**

अशुद्ध काठ वा माटाका भाँडा फ्याँक्नू ।

**अत्यन्तोपहतस्य वस्त्रस्य यत्प्रक्षालितं सद्भिरज्यते तच्छिन्द्यात् ॥६॥**

धेरै प्रदूषित कपडा धुँदा रङ वा अशुद्धि नगए कपडाको त्यो भाग काटेर फ्याँक्नू ।

**सौवर्णराजताब्जमणिमयानां निर्लेपनामद्भिः शुद्धिः ॥७॥**

सुन, चाँदी, मणि आदि फोहोर लागेका वस्तु पखालेर नै शुद्ध हुन्छ ।

**अश्ममयानां चमसानां ग्रहाणाञ्च ॥८॥**

ढुङ्गाका चम्चा आदि पनि पखालेरै शुद्ध हुन्छ ।

**चरुस्रुकस्रुवाणामुष्णेनाम्भसा ॥९॥**

सुरो, स्रुव आदि तातो पानीले शुद्ध हुन्छ ।

**यज्ञकर्मणि यज्ञपात्राणां पाणिना सम्मार्जनेन ॥१०॥**

यज्ञकार्यमा प्रयोग हुने यज्ञपात्रहरु माझेर शुद्ध हुन्छन् ।

**स्फाशूर्पशकटमुसलोलूखलानां प्रोक्षणेन ॥११॥**

यज्ञमा प्रयोग गरिने काठको दाबिलो, नाङ्लो, गाडा, मुसल, लोरोसिलौटो आदि जल छर्केर शुद्ध हुन्छ ।

**शयनयानासनानाञ्च ॥१२॥**



ओछ्यान, यान र आसन पनि जल छर्केर शुद्ध हुन्छ ।

**बहुनाञ्च ॥१३॥**

धेरै परिमाणका अरु वस्तु पनि जल छर्केर शुद्ध हुन्छ ।

**धान्याजिनरज्जुतान्तववैदलसूत्रकार्पासवाससाञ्च ॥१४॥**

अनाज, छाला, डोरी, बुनेका वस्त्र, बाँसका सामान र कपासका नयाँ वस्त्र पनि (धेरै हुँदा) जल छर्केर शुद्ध हुन्छ ।

**शाकमूलफलपुष्पाणाञ्च ॥१५॥**

सागपात, कन्दमूल, फल र फूल पनि जल छर्केर शुद्ध हुन्छ ।

**तृणकाष्ठशुष्कपलाशानाञ्च ॥१६॥**

त्यस्तै घाँस, दाउरा, गुईंठा र पात पनि जल छर्केर शुद्ध हुन्छ ।

**एतेषां प्रक्षालनेन ॥१७॥**

यी शयनादि देखि गुइँठासम्मका वस्तु पखालेर पनि शुद्ध हुन्छ ।

**अल्पानाञ्च ॥१८॥**

यी थोरै हुँदा पखालेर पनि शुद्ध हुन्छ ।

**ऊषैः कौशेयाविकयोः ॥१९॥**

रेशम र उन नुनपानीले शुद्ध हुन्छ ।

**अरिष्टकैः  कुतपानाम् ॥२०॥**

कम्बल आदि रिठ्ठोले धोएर शुद्ध हुन्छ ।

**श्रीफलैरंशुपट्टानाम् ॥२१॥**

रुखका बोक्राका वस्त्र बेलफलले शुद्ध हुन्छ ।

**गौर सर्षपैः क्षौमाणाम् ॥२२॥**

सेतो सर्सिउँले रेशमी कपडा शुद्ध हुन्छ ।

**श्रृङ्गास्थिदन्तमयानाञ्च ॥२३॥**

हस्तिहाडले बनेका सामान पनि सर्सिउँले शुद्ध हुन्छ ।

**पद्माक्षैर्मृगलोमिकानाम् ॥२४॥**

मृगको रौंले बनेका रग,कम्बल कमलको बिजले शुद्ध हुन्छ ।

**ताम्ररीतित्रपुसीसमयानामम्लोदकेन ॥२५॥**

तामा, कीट, जस्ता र सिसाका सामान अमिलो पानीले (एसिडजन्य) शुद्ध हुन्छ ।

**भस्मना कांस्यलोहयोः ॥२६॥**

काँस र फलामका भाँडा खरानीले शुद्ध हुन्छ ।

**तक्षणेन दारवाणाम् ॥२७॥**

काठका सामान खुर्केर शुद्ध हुन्छ ।

**गोबालैः फलसम्भवानाम् ॥२८॥**

फलफूलका गट्टाका सामान गाईको रौँले माझेर शुद्ध हुन्छ ।



**प्रोक्षणेन संहतानाम् ॥२९॥**

धेरै सामान हुँदा जल छर्केर शुद्ध हुन्छ ।

**उत्पवनेन द्रवाणाम् ॥३०॥**

तरल पदार्थ छानेर शुद्ध हुन्छ ।

**गुडादीनामिक्षुविकाराणां प्रभूतानां गृहनिहितानां वार्यग्निदानेन ॥३१॥**

धेरै मात्राको (एक द्रोण भन्दा बढी) सखर आदि उखुजन्य वस्तु पानी र आगोले शुद्ध हुन्छ ।

**सर्वलवणानाञ्च ॥३२॥**

सबै खाले नुन पनि यसरी नै शुद्ध हुन्छ ।

**पुनःपाकेन मृन्मयानाम् ॥३३॥**

फेरी (आगोमा) पकाउनाले माटाका भाँडा शुद्ध हुन्छ ।

**द्रव्यवत्कृतशौचानां देवतार्चानां भूयःप्रतिष्ठापनेन ॥३४॥**

देवप्रतिमा जुन धातुले बनेको हो सोही अनुसारका वस्तुले
सफा गरी पुनः प्राणप्रतिष्ठा गर्नाले शुद्ध हुन्छ ।

**असिद्धस्यान्नस्य यन्मात्रमुपहतं तन्मात्रं परित्यज्य**
**शेषस्य कण्डनप्रक्षालने कुर्यात् ॥३५॥**

बोक्रासहितको अनाज अशुद्ध भएजति छाड्नाले र बाँकी ओखलमा
हालेर पखाल्नाले शुद्ध हुन्छ ।

**द्रोणाभ्यधिकं सिद्धमन्नमुपहतं न दुष्यति ॥३६॥**



बोक्रा नभएको अनाज एक द्रोण भन्दा बढी भए (कुकुर, काग आदिबाट) दूषित हुन्न ।

**तस्योपहतमात्रमपास्य गायत्र्याभिमन्त्रितं सुवर्णाम्भः प्रक्षिपेत् ।**
**बस्तस्य प्रदर्शयेदग्नेश्च ॥३७॥**

अशुद्ध जति निकाली बाँकीमा सुनपानी छर्कनू । बोका वा
घोडा वा अग्निलाई देखाउनु शुद्ध हुन्छ ।

**पक्षिजग्धं गवा घ्रातमवधूतमवक्षुतम् ।**
**दूषितं केशकीटैश्च मृत्प्रक्षेपेण शुध्यति ॥३८॥**

चराले (कागजस्ता चरा बाहेक) ठुँगेको, गाईले सुँघेको वा हाच्छिउँ गरेको र
कपाल वा कीरा परेको खानेकुरा माटो छर्कनाले शुद्ध हुन्छ ।

**यावन्नापैत्यमेध्याक्तादूगन्धो लेपश्च तत्कृतः ।**
**तावन्मृद्वारि देयं स्यात्सर्वासु द्रव्यशुद्धिषु ॥३९॥**

कपाल र कीरा परी प्रदुषित भए (गाईले सुँघे, मासु खान नहुने चराले जुठा हाले पनि) त्यसमा माटो छर्नू । दुर्गन्ध र चिसोपन नहटेसम्म माटोपानी हाल्दै जानू ।

**अजाश्वं मुखतो मेध्यं न गौर्न नरजा मलाः ।**
**पन्थानश्च विशुध्यन्ति सोमसूर्यांशुमारुतैः ॥४०॥**

मुखको हकमा बोका र घोडा शुद्ध हुन्छन् तर गाई हुन्न । मानिसका शरीरकम मल पनि शुद्ध हुन्न । मार्ग सूर्यचन्द्र किरण र हावाले शुद्ध हुन्छ ।

**रथ्याकर्दमतोयानि स्पृष्टान्यन्त्यश्ववायसैः ।**
**मारुतेनैव शुध्यन्ति पक्वेष्टकचितानि च ॥४१॥**

राजमार्गको हिलो र पानी अन्त्यज, कुकुर र कागको स्पर्शले दूषित हुन्न ।
त्यस्तै, पाको ईँटाका संरचना हावाले नै शुद्ध हुन्छ ।

**प्राणिनामथ सर्वेषां मृद्भिरद्भिश्च कारयेत् ।**
**अत्यन्तोपहतानाञ्च शौचं नित्यमतन्द्रितः ॥४२॥**



धेरै दूषित हुँदा सावधानीपूर्वक माटो र पानीले सबैले शुद्धी गर्न लगाउनू ।

**भूमिष्ठमुदकं पुण्यं वैतृष्ण्यं यत्र गोर्भवेत् ।**
**अव्याप्तञ्चेदमेध्येन तद्वदेव शिलागतम् ॥४३॥**

जमिनमा रहेको नवग्ने पानी यदी कपाल आदिले प्रदूषित छैन भने एउटा गाई अघाउने भए शुद्ध हुन्छ । यस्तै तरिकाको शुद्धी पर्वतको टाकुरामा वा ढुङ्गामा भएको पानीको पनि हुन्छ ।

**मृतपञ्चनखात्कूपादत्यन्तोपहतात्तथा ।**
**अपः समुद्धरेत्सर्वाः शेषं वस्त्रेण शोधयेत् ॥४४॥**

पाँच नङ्ग्रा हुने (मासु खान नहुने) मानिस लगायतका जीव खसेको इनारकुवाको पानी
पूरै निकाली कपडाले निथारेर सोस्नू ।

**वह्निप्रज्वालनं कुर्यात्कूपे पक्वेष्टकाचिते ।**

**पञ्चगव्यं न्यसेत्पश्चान्नवतोयसमुद्भवे ॥४५॥**

यदि उक्त इनार वा कुवा पाको ईँटले बनेको भए पानी निथारी आगो बाल्नू र त्यसपछि पानीको मूल भरिएपछि पञ्चगव्य हाल्नू ।

**जलाशयेष्वथाल्पेषु स्थावरेषु वसुन्धरे ।**
**कूपवत्कथिता शुद्धिर्महत्सु च न दूषणम् ॥४६॥**

साना जलाशय वा पोखरीमा पनि कुवाकै विधिले शुद्ध हुन्छ तर हे पृथ्वी ! जलाशय (तीर्थ बाहेक) ठूला भए दूषित हुन्न ।

**त्रीणि देवाः पवित्राणि ब्राह्मणानामकल्पयन् ।**
**अदृष्टमद्भिर्निर्णिक्तं यच्च वाचा प्रशस्यते ॥४७॥**

भगवानले ब्राह्मणका लागि तीन कुरा पवित्र बताएका छन्-नदेखेको कुरा, जल छर्केर पवित्र बनाएको कुरा र तिनले शुद्ध हुनुपर्दछ भनी भनेको कुरा ।



**नित्यं शुद्धः कारुहस्तः पण्यं यच्च प्रसारितम् ।**
**ब्राह्मणान्तरितं भैक्षमाकराः सर्व एव च ॥४८॥**

कालिगढको हात, पसलमा फिँजाइएका कुरा, ब्राह्मणलाई दिएको खाना (शुद्रले बाहेक) र खनिज वा कारखानामा भएका वस्तु (मदिरा आदि अभक्ष्य बाहेक) सधैँ शुद्ध हुन्छ ।

**नित्यमास्यं शुचि स्त्रीणां शकुनिः फलपातने ।**
**प्रस्रवे च शुचिर्वत्सः श्वा मृगग्रहणे शुचिः ॥४९॥**

स्त्रीको मुख (चुम्बनार्थ), फल खसाल्दा चराको मुख, माउको दूध चुस्ने बाछाबाछीको मुख र शिकार (मृगआदि) गर्दा कुकुरको मुख शुद्ध हुन्छ ।

**श्वभिर्हतस्य यन्मांसं शुचि तत्परिकीर्तितम् ।**
**क्रव्याद्भिश्च हतस्यान्यैश्चण्डालाद्यैश्च दस्युभिः ॥५०॥**

कुकुरले शिकार गरेको जनावरको मासु, मांसाहारी (बाघ आदि) ले र चाण्डाल आदि शिकारीले

मारेको जनावरको मासु ( चोट लागेको स्थान बाहेक) शुद्ध हुने बताइएको छ ।

**ऊर्ध्वं नाभेर्यानि खानि तानि मेध्यानि निर्दिशेत् ।**
**यान्यधस्तान्यमेध्यानि देहाच्चैव मलमश्च्युताः ॥५१॥**

नाइटो माथिका छिद्र शुद्ध मानिन्छ । त्यसभन्दा मुनि र शरीरका मललाई अशुद्ध मानिन्छ ।

**मक्षिका विप्रुषश्छाया गौर्गजाश्वमरीचयः ।**
**रजो भूर्वायुरग्निश्च मार्जारश्च सदा शुचिः ॥५२॥**

झिँगा, थुकका छिटा, छायाँ, गाई, हाती, घोडा, सूर्य किरण, धूलो,
माटो, हावा, आगो र बिरालो सधैँ शुद्ध हुन्छ ।

**नोच्छिष्टं कुर्वते मुख्या विप्रुषोऽङ्गे पतन्ति याः ।**
**न श्मश्रूणि गतान्यास्यं न दन्तान्तरवेष्टितम् ॥५३॥**

पुरुषका आफ्नो मुखबाट शरीरका कुनै पनि अङ्गमा परेका थुकका छिटा अशुद्ध हुन्न न त
मुखभित्र पसेको दाऱ्हीजुँगा अशुद्ध हुन्छ न दाँतमा अड्किएका अन्नकण नै ।

**स्पृशन्ति विन्दवः पादौ य आचामयतः परान् ।**
**भौमिकेस्ते समा ज्ञेया न तैरप्रयतो भवेत् ॥५४॥**

अरुलाई आचमन गराउन पानी समाइरहँदा गोडामा पर्ने पानी प्राकृतिक झरनाको झैँ शुद्ध
हुन्छ, यसले उ अशुद्ध हुन्न ।

**उच्छिष्टेन तु संस्पृष्टो द्रव्यहस्तः कथञ्चन ।**
**अनिधायैव तद्द्रव्यमाचान्तः शुचितामियात् ॥५५॥**

केही कुरा समाइरहेका बेलामा अशुद्ध भए जमिनमा ति कुरा नराखी आचमनले शुद्ध हुन्छ ।

**मार्जनोपार्ज्जनैर्वेश्म प्रोक्षणेन च पुस्तकम् ।**
**सम्मार्जनेनाञ्जनेन सेकेनोल्लेखनेन च ॥५६॥**

घर रगडेर वा बढारेर वा गोबरले पोतेर तथा पुस्तक जल छर्केर एवं जमिन खुर्केर
बढारेर वा गोबरले पोतेर वा वा खोस्रेर वा... ।

**दाहेन च भुवः शुद्धिर्वासेनाप्यथवा गवाम् ।**
**गावः पवित्रं मङ्गल्यं गोषु लोकाः प्रतिष्ठिताः ॥५७॥**

वा जल छर्केर वा बालेर वा गाई (बाखा) हिँडाएर शुद्ध हुन्छ । गाई शुभ र मङ्गलकारी हुन्छ, गाईमै संसार भर परेको हुन्छ ।

**गावो वितन्वते यज्ञं गावः सर्वाघसूदनाः ।**
**गोमूत्रं गोमयं सर्पिः क्षीरं दधि च रोचना ॥५८॥**

एउटै गाईले यज्ञ अनुष्ठान गर्न सक्षम हुन्छ । गाईले सबै पाप हटाउँदछे । गहुँत, गोबर, घिउ, दूध, दही र गोरोचन ..।

**षडङ्गमेतत्परमं मङ्गल्यं सर्वदा गवाम् ।**
**श्रृङ्गोदकं गवां पुण्यं सर्वाघविनिषूदनम् ॥५९॥**

गाईका यी षडङ्ग (छ थोक) सधैं मङ्गलदायक हुन्छन् । गाईको सिङबाट खसेको जल अत्यन्त पवित्र हुन्छ र सबैखाले दूषित र पापलाई हटाउँदछ ।



**गवां कण्डूयनं चैव सर्वकल्मषनाशनम् ।**
**गवां ग्रासप्रदानेन स्वर्गलोके महीयते ॥६०॥**

गाईको आङ कन्याउनाले सबै प्रदुषण नष्ट हुन्छ । गाईलाई खुवाउँदा स्वर्गमा सम्मानित हुइन्छ ।

**गवां हि तीर्थे वसतीह गङ्गा पुष्टिस्तथासां रजसि प्रवृत्ता ।**
**लक्ष्मीः करीषे प्रणतौ च धर्मस्तासां प्रणामं सततञ्च कुर्यात् ॥६१॥**

गहुँतमा तीर्थ र गङ्गा बसेको हुन्छ । तिनको चरणधूलीमा समृद्धि रहेको हुन्छ । गोबरमा असल भाग्य रहेको हुन्छ । तिनलाई प्रणाम गर्दा लक्ष्मी खुसी हुन्छिन् । त्यसैले गाईलाई सधैं प्रणाम गर्नू ।

**॥ समाप्तमिदं त्रयोविंशोऽध्यायः ॥२३॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको तेइसौं अध्याय पूर्ण भयो ।



# चतुर्विंशोऽध्यायः
## (चौबीसौं अध्याय)

**अथ ब्राह्मणस्य वर्णानुक्रमेण चतस्रो भार्या भवन्ति ॥१॥**

ब्राह्मणका वर्णक्रमले चार पत्नी हुन्छन् ।

**तिस्रः क्षत्रियस्य ॥२॥**

क्षत्रियका वर्णक्रमले तीन पत्नी हुन्छन् ।

**द्वे वैश्यस्य ॥३॥**

वैश्यका वर्णक्रमले दुई पत्नी हुन्छन् ।

**एका शूद्रस्य ॥४॥**



शुद्रको वर्णक्रमले एक पत्नी हुन्छ ।

**तासां सवर्णाविदने पाणिग्राह्यः ॥५॥**

सवर्ण विवाहमा पाणिग्रहण (हात समाएर) गर्न हुन्छ ।

**असवर्णाविदने शरः क्षत्रियकन्यया ॥६॥**

असवर्ण विवाहमा क्षत्रिया कन्याले बाण समाउनू ।

**प्रतोदो वैश्यकन्यया ॥७॥**

वैश्याले कोर्रा समाउनू ।

**वसनदशान्तः शूद्रकन्यया ॥८॥**

शूद्राले आँचलको छेउ समाउनू ।

**न सगोत्रां न समानार्षप्रवरां भार्यां विन्देत॥९॥ (गोत्रमगस्त्याष्टमसप्तर्क्ष्यपत्यं तत्समानमेकवंशप्रवर्तकं स्वस्य यस्याश्च सा सगोत्रा । न समानार्षेति भृगोरङ्गिरसश्च यद्वंशकरमपत्यं जमदग्निगौतमभारद्वाजव्यतिरिक्तमार्ष्टिषेणमुद्गलादि तदार्षं समानमार्षमुक्तरीत्या यस्याः सा समानार्षा । न त्वेवं गोत्रार्षभेदेऽपि प्रवरैक्ये विवाहः स्यादित्यत आह । प्रवरास्तत्तद्वंशेषु मन्त्रकृतो मन्त्रदृशो वा ऋषयः ।)**

सगोत्रीया तथा समान आर्ष र प्रवरकी कन्या विवाह नगर्नू ।

**मातृतस्त्वा पञ्चमात्पुरुषात्पितृतश्चा सप्तमात्॥१०॥**

आमापट्टी पाँच र बाबुपट्टी सात पुस्तासम्ममा विहेबारी नगर्नू ।

**नाकुलीनाम्॥११॥**



अकुलीन विवाह नगर्नू ।

**(कर्षकराजसेवकादीनां कुलमकुलम्) ।**

(कृषक, कर्मचारी आदिको कुललाई अकुल भनिन्छ) ।

**न च व्याधिताम्॥१२॥**

रोगी कन्या विवाह नगर्नू ।

**नाधिकाङ्गीम्॥१३॥**

हुनुपर्ने भन्दा धेरै अङ्ग भएकी कन्या विवाह नगर्नू (औंला आदि) ।

**न हीनाङ्गीम्॥१४॥**

हुनुपर्ने भन्दा थोरै अङ्ग भएकी कन्या विवाह नगर्नू ।

**नातिकपिलाम् ॥१५॥**

कैली विवाह नगर्नू ।

**न वाचाटाम् ॥१६॥**

गफाडी केटी विवाह नगर्नू ।

**अथाष्टौ विवाहा भवन्ति ॥१७॥**

विवाहका विधि आठ प्रकारका हुन्छन् ।

**ब्राह्मो दैव आर्षः प्राजापत्यो गान्धर्व आसुरो राक्षसः पैशाचश्चेति ॥१८॥**

यी हुन्-ब्राह्म, दैव, आर्ष, प्राजापत्य, गान्धर्व, आसुर, राक्षस र पैशाच ।

**आहूय गुणवते कन्यादानं ब्राह्मः ॥१९॥**

गुणवानलाई ससम्मान बोलाएर कन्यादान दिनू ब्राह्म विवाह हो ।

**यज्ञस्थऋत्विजे दैवः ॥२०॥**

यज्ञ गराउन बोलाइएका ऋत्विजलाई कन्या दिनू दैव विवाह हो ।

**गोमिथुनग्रहणेनार्षः ॥२१॥**

एक जोडी साँढे लिई कन्या दिनू आर्ष विवाह हो ।

**प्रार्थितप्रदानेन प्राजापत्यः ॥२२॥**

अनुरोधमा दिनू प्राजापत्य हो ।

**द्वयोः सकामयोर्मातापितृरहितो योगो गान्धर्वः ॥२३॥ (द्वयोः कन्यावरयोः सकामयोरन्योन्यानु-रक्तयोर्मातापितृभ्यां रहितोऽननुज्ञातो योगः)**

मातापिताको अनुपस्थितिमा गरिने प्रेम विवाह गान्धर्व विवाह हो ।

**क्रयेणासुरः ॥२४॥**

कन्यालाई किनबेच गरेर बिहे गर्नु आसुर विवाह हो ।

**युद्धहरणेन राक्षसः ॥२५॥**

बलपूर्वक जितेर वा हरण गरेर बिहे गर्नू राक्षस विवाह हो ।

**सुप्तप्रमत्ताभिगमनात्पैशाचः ॥२६॥ (प्रमत्ता मदातिशयेन नष्टचेतना तस्या अभिगमनं मैथुनं तस्मात्पैशाचः)**



सुतेको बेलामा वा अचेतावस्थामा गमन गरी विवाह गर्नू पैशाच विवाह हो ।

**एतेष्वाद्याश्चत्वारो धर्म्याः ॥२७॥**

यिमध्ये शुरुका चार विधि धर्मसम्मत हुन् ।

**गान्धर्वोऽपि राजन्यानाम् ॥२८॥**

क्षत्रियलाई गान्धर्व विवाह पनि धर्मसम्मत हुन्छ ।

**ब्राह्मीपुत्रः पुरुषानेकविंशतिं पुनीते (ब्राह्मोढापुत्रो दशावरान्दश रान्दातारं चैकविंशं पुनाति वक्ष्यमाणलोकहरान्करोति) ॥२९॥**

ब्राह्म विवाहले जन्मने पुत्रले अघिल्ला दश आफू र पछिल्ला दश गरी एक्काईस कुल तार्दछ ।

**दैवीपुत्रश्चतुर्दश ॥३०॥**

दैव विवाहले जन्मने पुत्रले चौध कुल तार्दछ ।

**आर्षीपुत्रश्च सप्त ॥३१॥**

आर्ष विवाहले जन्मने पुत्रले सात कुल तार्दछ ।

**प्राज्यापत्यश्चतुरः ॥३२॥ (प्राजापत्ये भवः प्राजापत्यः) ।**

प्राजापत्यले चार कुल तार्दछ ।

**ब्राह्मेण विवाहेन कन्यां दददब्रह्मलोकं गमयति ॥३३॥**

ब्राह्म विधिले कन्यादान गरे ब्रह्मलोक पाउँदछ ।

**(ब्रह्मलोकं गमयति स्वयञ्च गच्छति) दैवेन स्वर्गम् ॥३४॥**



दैव विधिले स्वर्ग पाउदँछ ।

**आर्षेण वैष्णवम् ॥३५॥**

आर्ष विधिले विष्णुलोक पाउँदछ ।

**प्राजापत्येन देवलोकम् ॥३६॥**

प्राजापत्यले देवलोक पाउँदछ ।

**गान्धर्वेण गान्धर्वलोकं गच्छति ॥३७॥ (गान्धर्वेण कन्यां दददूगन्धर्वलोकं स्वयमेव गच्छति)**

गान्धर्व विधिले विवाह गर्नेले गन्धर्वलोक पाउँदछ ।

**पिता पितामहो भ्राता सकुल्यो मातामहो माता चेति कन्याप्रदाः ॥३८॥**

बाबु, हजुरबाबु, दाजुभाई, सकुलका पुरुष, मावली हजूरबाबु र आमाले कन्यादान गर्न सक्दछन् ।

**पूर्वाभावे प्रकृतिस्थः परः पर इति ॥३९॥**

अघिल्ला नहुँदा प्राकृतिकरुपमा सक्षम क्रमशः पछिल्लाले कन्यादान गर्नू ।

**ऋतुत्रयमुपास्यैव कन्या कुर्यात्स्वयं वरम् ।**
**ऋतुत्रये व्यतीते तु प्रभवत्यात्मनः सदा ॥४०॥**

तीन चोटी परसरेपछि कन्याले आफैं वर छान्नू । तीन चोटी परसरेपछि उनी आफ्नो रोजाई रोज्न सबै प्रकारले सक्षम हुन्छिन् ।

**पितृवेश्मनि या कन्या रजः पश्यत्यसंस्कृता ।**
**सा कन्या वृषली ज्ञेया हरँस्तान्न विदुष्यति ॥४१॥**



बाबुको घरमा विवाहपूर्व रजस्वला हुने कन्या वृषला हुन् र तिनलाई हरण गर्नू कुनै दोष होइन ।

**॥ समाप्तमिदं चतुर्विंशोऽध्यायः ॥२४॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको चौबीसौं अध्याय पूर्ण भयो ।



## पञ्चविंशोऽध्यायः
## (पच्चिसौं अध्याय)

**अथ स्त्रीणां धर्माः ॥१॥**

अब स्त्रीधर्म बताइन्छ ।

**भर्तुः समानव्रतचारित्वम् ॥२॥**

पतिसमान व्रत लिने हुनू ।

**श्वश्रुश्वशुरगुरुदेवतातिथिपूजनम् ॥३॥**

सासु, ससुरा, गुरु, देवता र अतिथिको सेवागर्ने हुनू ।

**सुसंस्कृततोपस्करता ॥४॥**



नाङ्लो आदि वस्तु सफासुग्घर राख्नू ।

**अमुक्तहस्तता ॥५॥**

बचत गर्ने बानी बसाल्नू ।

**सुगुप्तभाण्डता ॥६॥**

मुसल, ओखल आदि घरायसी भाँडाकुँडा एवं गुप्त राख्नुपर्ने गहना, रत्न, देवमूर्ति आदि सफा गरी समालेर राख्नू ।

**मूलक्रियास्वनभिरतिः ॥७॥**

जादूमन्त्रमा मन नलगाउनू ।

**मङ्गलाचारतत्परता ॥८॥**

संस्कारसँग सम्बन्धित मङ्गलाचार र शुभाचार जान्न र गर्न तत्पर रहनू ।

**भर्तरि प्रवसितेऽप्रतिकर्मक्रिया ॥९॥**

पति परदेश हुँदा आफूलाई (गहना आदिले) अधिक सजाउने आदि जस्ता कार्य नगर्नू ।

**परगृहेष्वनभिगमनम् ॥१०॥**

पति परदेश हुँदा पराया घरमा गएर (अत्यावश्यक काम नपरी लामो समय) नबस्नू ।

**द्वारदेशगवाक्षेष्वनवस्थानम् ॥११॥**

ढोकाझ्यालको नजिकै (ठेलामा) नबस्नू ।

**सर्वकर्मस्वस्वतन्त्रता ॥१२॥**

आफूखुसी केही नगर्नू ।



**बाल्ययौवनवार्धक्येष्वपि पितृभर्तृपुत्राधीनता ॥१३॥**

बालक हुँदा बाबुको, युवावस्थामा पतिको र वृद्धावस्थामा पुत्रको अधिनमा रहनू ।

**मृते भर्तरि ब्रह्मचर्यं तदन्वारोहणं वा ॥१४॥**

पतिको मृत्यु पछि ब्रह्मचर्यमा बसी उनको उत्थान वा उद्धार गर्नू ।

**नास्ति स्त्रीणां पृथग्यज्ञो न व्रतं नाप्युपोषितम् ।**
**पतिं शुश्रूषते यत्तु तेन स्वर्गे महीयते ॥१५॥**

स्त्रीका लागि कुनै बेग्लै यज्ञ, व्रत र तपस्या छैन । पतिको सेवाले नै उनले स्वर्ग पाउँदछिन् ।

**पत्यौ जीवति या योषिदुपवासव्रतञ्चरेत् ।**
**आयुः सा हरते भर्तुर्नरकञ्चैव गच्छति ॥१६॥**

पति जीवित हुँदा जुन पत्नीले (पतीको भन्दा फरक ढङ्गले वा उनको अनुमती नलिइकन) उपवास, व्रत, धर्मकर्म आदि गर्दछे त्यो कर्मले उसले उल्टै पतिको उमेर घटाउँछे र नरक पनि जान्छे ।

**मृते भर्तरि साध्वी स्त्री ब्रह्मचर्ये व्यवस्थिता ।**
**स्वर्गं गच्छत्यपुत्रापि यथा ते ब्रह्मचारिणः ॥१७॥**

पतिको मृत्युपछि पनि ब्रह्मचर्यमा रहने पतिव्रता स्त्री पुत्रविहीन भएपनि स्वर्ग जान्छे ।

**॥ समाप्तमिदं पञ्चविंशोऽध्यायः ॥२५॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको पच्चिसौं अध्याय पूर्ण भयो ।



## षड्विंशोऽध्यायः
## (छब्बीसौं अध्याय)

**सवर्णासु बहुभार्यासु विद्यमानासु ज्येष्ठया सह धर्म कार्यं कुर्यात्॥१॥**

समानवर्णका धेरै पत्नी भए जेठीका साथ धर्मकार्य गर्नू ।

**मिश्रासु च कनिष्ठयापि समानवर्णया॥२॥**

असमान वर्णका धेरै पत्नी भए कान्छी भएपनि आफ्नै वर्णका साथ धर्मकार्य गर्नू ।

**समानवर्णाया अभावे त्वनन्तरयैवापदि च॥३॥**

समान वर्णकी पत्नी नहुँदा वा आपद्मा क्रमशः तल्ला वर्णका साथ धर्मकार्य गर्नू ।

**न त्वेव द्विजः शूद्रया॥४॥**



तर द्विजले कहिल्यै शूद्रा पत्नीसँग धर्मकार्य नगर्नू ।

**द्विजस्य भार्या शूद्रा तु धर्मार्थं न भवेत्क्वचित् ।**
**रत्यर्थमेव सा तस्य रागान्धस्य प्रकीर्तिता॥५॥**

द्विजकी शूद्रा पत्नी धर्मका लागि किमार्थ हुन सक्दिन ।
उनलाई रतिशुखका लागि विषयान्धताको उपज भनी जान्नू ।

**हीनजातिस्त्रियं मोहादुद्वहन्तो द्विजातयः ।**
**कुलान्येव नयन्त्याशु ससन्तानानि शूद्रताम्॥६॥**

द्विजले मोहले हीनजातिका स्त्री विवाह गर्दछन् भने सन्तानसहित
सारा कूललाई शूद्रत्वमा पुऱ्याउँदछ ।

**दैवपित्र्यातिथेयानि तत्प्रधानानि यस्य तु ।**
**नाश्नन्ति पितृदेवास्तु न च स्वर्गं स गच्छति॥७॥**

तिनको हातबाट अर्पित वस्तु देव-पितृ-अतिथिले खाँदैनन् र उ पनि स्वर्ग जाँदैन ।

## ॥ समाप्तमिदं षड्विंशोऽध्यायः ॥२६॥



मोहन प्रसाद सापकोटाद्धारा भावानुवाद गरिएको विष्णुस्मृतिको छब्बीसौं अध्याय पूर्ण भयो ।



## सप्तविंशोऽध्यायः
## (सत्ताइसौँ अध्याय)

**गर्भस्य स्पष्टताज्ञाने निषेककर्म ॥१॥**

गर्भ रहेको स्पष्ट थाहा भएपछि निषेककर्म गर्नू ।

**स्पन्दनात्पुरा पुंसवनम् ॥२॥**

गर्भ हलचल गर्नू भन्दा पहिले पुंसवन गर्नू ।

**षष्ठेऽष्टमे सीमन्तोन्नयनम् ॥३॥**

गर्भ रहेको छैटौँ वा आठौँ महिनामा सीमन्तोन्नयन गर्नू ।

**जाते च दारके जातकर्म ॥४॥**



बालक जन्मेपछि जातकर्म गर्नू ।

**आशौचव्यपगमे नामधेयम् ॥५॥**

सूतक चोखिएपछि न्वारान (नामकर्म) गर्नू ।

**माङ्गल्यं ब्राह्मणस्य ॥६॥**

ब्राह्मणका माङ्गलिक नाम राख्नू ।

**बलवत्क्षत्रियस्य ॥७॥**

क्षत्रियको बलसंज्ञक नाम राख्नू ।

**धनोपेतं वैश्यस्य ॥८॥**

वैश्यको धनसंज्ञक नाम राख्नू ।

**जुगुप्सितं शूद्रस्य ॥९॥**

शूद्रको भयङ्कर नाम राख्नू ।

**चतुर्थे मास्यादित्यदर्शनम् ॥१०॥**

चौथो महिनामा सूर्य दर्शन गराउनू ।

**षष्ठेऽन्नप्राशनम् ॥११॥**

छैटौं महिनामा अन्नप्राशन गराउनू ।

**तृतीयेऽब्दे चूडाकरणम् ॥१२॥**


तेश्रो वर्षमा चुडाकर्म गर्नू ।

**एता एव क्रियाः स्त्रीणाममन्त्रकाः ॥१३॥**

यी कुरा (चूडाकर्मसम्म) स्त्रीका लागि पनि मन्त्रबिना गर्नू ।

**तासां समन्त्रको विवाहः ॥१४॥**

तिनको मन्त्रसहित विवाह कर्म हुन्छ ।

**गर्भाष्टमेऽब्दे ब्राह्मणस्योपनयनम् ॥१५॥**

गर्भ रहेको वर्षबाट आठौं वर्षमा ब्राह्मणको उपनयन गर्नू ।

**गर्भैकादशे राज्ञः ॥१६॥**

गर्भ रहेको वर्षबाट एघारौं वर्षमा क्षत्रियको र... ।

**गर्भद्वादशे विशः ॥१७॥**

गर्भ रहेको वर्षबाट बाऱ्हौं वर्षमा वैश्यको उपनयन गर्नू ।

**तेषां मुञ्जज्याबल्बजमयो मौञ्ज्यः ॥१८॥**

तिनको कन्धनी क्रमशः मुँज, ताँदो र बाबियो (?) को हुन्छ ।

**कार्पासशणाविकान्युपवीतानि वासाँसि च ॥१९॥**

तिनको जनै र वस्त्र क्रमशः कपास, सन र ऊनको हुन्छ ।

**मार्गवैयाघ्रबास्तानि चर्माणि ॥२०॥**

तिनले बेर्ने छाला क्रमशः कृष्णसार, बाघ र बोकाको हुन्छ ।



**पालाशखादिरौडुम्बरा दण्डाः ॥२१॥**

दण्ड क्रमशः पलाश, खयर र डुम्रीको हुन्छ ।

**केशान्तललाटनासादेशतुल्याः ॥२२॥**

दण्डको लम्बाइ क्रमशः टुपी, निधार र नाकसम्म पुग्ने हुन्छ ।

**सर्व एव वा ॥२३॥**

अथवा सबैलाई सबैथरी हुन्छ ।

**अकुटिलाः सत्वचश्च ॥२४॥**

दण्ड सुरिलो, नचिरिएको र बोक्रा सहितको हुनु पर्दछ ।

**भवदाद्यं भवन्मध्यं भवदन्तञ्च भैक्षाचरणम्॥२५॥**

तिनले क्रमशः भवत् शब्द शुरु, मध्य र अन्तमा प्रयोग गरी भिक्षा माग्नू ।

**आ षोडशाद्ब्राह्मणस्य सावित्री नातिवर्तते ।**
**आ द्वाविंशात्क्षत्रबन्धोराचतुर्विंशतेर्विशः॥२६॥**

ब्राह्मणको मन्त्र सुनाउने उमेर सोह्र वर्ष भन्दा बढी नबढाउनू । क्षत्रियको बाईस वर्ष र वैश्यको चौबीस वर्ष नबढाउनू ।

**अत ऊर्ध्वं त्रयोऽप्येते यथाकालमसंस्कृताः ।**
**सावित्रीपतिता व्रात्या भवन्त्यार्यविगर्हिताः॥२७॥**

यसभन्दा पछि गएर ति तिनै थरी संस्कार नगरिएका सावित्री पतित हुन्छन् र व्रात्य हुन जान्छन् ।

**यद्यस्य विहितं चर्म यत्सूत्रं या च मेखला ।**
**यो दण्डो यच्च वसनं तत्तदस्य व्रतेष्वपि॥२८॥**

उपनयनको छाला, जनै र कन्धनी, लँगौटी, दण्ड तथा वस्त्र कुनैपनि धर्मकर्ममा लगाउनू ।

**मेखलामजिनं दण्डमुपवीतं कमण्डलुम् ।**
**अप्सु प्रास्य विनष्टानि गृह्णीतान्यानि मन्त्रवत्॥२९॥**

लँगौटी, छाला, दण्ड, जनै, कमण्डलु पुराना भए जलमा विसर्जन गर्नू र मन्त्र पढी अर्को ग्रहण गर्नू ।

**समाप्तमिदं सप्तविंशोऽध्यायः॥२७॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको सत्ताइसौं अध्याय पूर्ण भयो ।



# अष्टाविंशोऽध्यायः
# (अट्ठाईसौं अध्याय)

**अथ ब्रह्मचारिणां गुरुकुलवासः ॥१॥**

यसपछि ब्रह्मचारीले गुरुकुलमा बस्नू ।

**सन्ध्याद्वयोपासनम् ॥२॥**

दुबै सन्ध्यामा सन्ध्योपासना गर्नू ।

**पूर्वां सन्ध्यां जपेत्तिष्ठन्पश्चिमामासीनः ॥३॥**

बिहान उठेर र बेलुकी बसेर जप गर्नू ।

**कालद्वयमभिषेकाग्निकर्मकरणम् ॥४॥**



दुवै समय अभिषेक गरी अग्निकर्म गर्नू ।

**अप्सु दण्डवन्मज्जनम् ॥५॥**

पानीमा लौरोभैं सिधा डुबुल्की मार्नू ।

**आहूताध्ययनम् ॥६॥**

आज्ञा पाएपछि अध्ययन गर्नू ।

**गुरोः प्रियहिताचरणम् ॥७॥**

गुरुलाई मनपर्ने र हित हुने आचरण गर्नू ।

**मेखलादण्डाजिनोपवीतधारणम् ॥८॥**

लँगौटी, दण्ड, छाला र जनै सधैँ साथमा राख्नू वा लगाउने गर्नू ।

**गुरुकुलवर्जं गुणवत्सु भैक्षाचरणम्॥९॥**

गुरुकुललाई छोडी अन्यत्र भिक्षा माग्न जानू ।

**गुर्वनुज्ञातं भैक्षाभ्यवहरणम्॥१०॥**

गुरुको आज्ञाले लेराएको केही भिक्षा खानू ।

**श्राद्धकृतलवणशुक्तपर्युषितनृत्यगीतस्त्रीमधुमांसा-
ञ्जनोच्छिष्टप्राणिहिंसाश्लीलपरिवर्जनम्॥११॥**

श्राद्ध, परिष्कृत नुन, अमिला कुरा, बासी कुरा, नाच, गान, स्त्री, मह, मासु, गाजल, जुठो, जीव हिँसा र अश्लील वचन परित्याग गर्नू ।



**अधःशय्या॥१२॥**

भुइँमा वा होचो ओछ्यानमा सुत्नू ।

**गुरोः पूर्वोत्थानं चरमं सम्वेशनम् ॥१३॥**

गुरुभन्दा पहिले उठी उनीभन्दा पछि शौच गर्नू ।

**कृतसन्ध्योपासनश्च गुर्वभिवादनं कुर्यात्॥१४॥**

सन्ध्योपासना सकी गुरुलाई अभिवादन गर्नू ।

**तस्य च व्यत्यस्तकरः पादावुपस्पृशेत्॥१५॥**

तिनलाई दाहिने हातले देब्रे र देब्रे हातले दाहिने पाउ छोएर नमस्कार गर्नू ।

**दक्षिणं दक्षिणेनेतरमितरेण ॥१६॥**

कसैले देब्रेले देब्रे दाहिनेले दाहिने छुने भनेका छन् ।

**स्वञ्च नामास्याभिवादनान्ते भोःशब्दान्तं निवेदयेत् ॥१७॥**

अभिवादन पछि आफ्नो नाम अघिल्तिर भो शब्द जोडी परिचय दिनू ।

**तिष्ठन्नासीनः शयानो भुञ्जानः पराङ्मुखश्च नास्याभिभाषणं कुर्यात् ॥१८॥**

गुरु उभिएको, आराम गरिरहेको, सुतिरहेको, खाइरहेको र अन्यत्र
फर्किरहेको अवस्थामा उनिसँग कुराकानी नगर्नू ।

**आसीनस्य स्थितः कुर्यादभिगच्छँस्तु गच्छतः ।**
**आगच्छतः प्रत्युद्गम्य पश्चाद्धावँस्तु धावतः ॥१९॥**

गुरु बसेपछि बस्नू, हिँडे पछि लाग्नू, आफूतिर आए दौडेर नगिचै जानू, दौडे दौडनू ।



**पराङ्मुखस्याभिमुखः ॥२०॥**

पछाडी फर्केका भए अघिल्तिर जानू ।

**दूरस्थस्यान्तिकमुपेत्य ॥२१॥**

टाढा भए नजिकै जानू ।

**शयानस्य प्रणस्य ॥२२॥**

सुतेका भए ? झुक्नू ।

**तस्य च चक्षुर्विषये न यथेष्टासनः स्यात् ॥२३॥**

तिनको आँखाका सामु कहिल्यै असावधान नहुनू ।

**न चास्य केवलं नाम ब्रूयात् ॥२४॥**

उनको नाममात्रै कहिल्यै नलिनू (नलिई नहुने अवस्थामा अगाडि श्री जोड्नू) ।

**गतिचेष्टाभाषिताद्यं नास्यानुकुर्यात् ॥२५॥**

उनको हिँडाई, भावभङ्गी र बोलीको नक्कल नगर्नू ।

**यत्रास्य निन्दापरीवादौ स्यातां न तत्र तिष्ठेत् ॥२६॥**

जहाँ उनको निन्दा र हैँला हुन्छ त्यहाँ नबस्नू ।

**नास्यैकासनो भवेत् ॥२७॥**

उनका समकक्षाको आसनमा नबस्नू ।

**ऋते शिलाफलकनौयानेभ्यः ॥२८॥**



पत्थर वा काठको आसनी, डुङ्गा र गाडामा बाहेक (यो नियम लाग्दैन) ।

**गुरोर्गुरौ सन्निहिते गुरुवद्वर्तेत ॥२९॥**

गुरुका गुरु नजिकै भए आफ्नै गुरुलाई झैं व्यवहार गर्नू ।

**अनिर्दिष्टश्च गुरुणा स्वान्गुरून्नाभिवादयेत् ॥३०॥**

गुरुका गुरु नगएसम्म आफ्ना गुरुलाई अभिवादन नगर्नू ।

**बाले समानवयसि वाध्यापके गुरुपुत्रे गुरुवद्वर्तेत ॥३१॥**

समान उमेरका वेद पढाउने गुरुका पुत्रलाई गुरुलाईझैं व्यवहार गर्नू ।

**नास्य पादौ प्रक्षालयेत् ॥३२॥**

तर तिनको गोडा नधुनू ।

**नोच्छिष्टमश्नीयात् ॥३३॥**

उनको जुठो नखानू ।

**एवं वेदं वेदौ वेदान्वा स्वीकुर्यात् ॥३४॥**

यसरी एक, दुई वा सबै वेद पढ्नू ।

**ततो वेदाङ्गानि ॥३५॥**

त्यसपछि वेदाङ्ग पढ्नू ।

**यस्त्वनधीतवेदोऽन्यत्र श्रमं कुर्यादसौ ससन्तानः शूद्रत्वमेति ॥३६॥**

वेद नपढी अरु पढ्ने व्यक्ति सन्तानसहित शूद्रत्वमा पुग्दछ ।

**मातुरग्रे विजननं द्वितीयं मौञ्जिबन्धनम् ॥३७॥**

पहिलो जन्म माताबाट हुन्छ दोश्रो (उपनयनमा) कन्धनी-लँगौटी लगाएर हुन्छ ।

**तत्रास्य माता सावित्री भवति पिता त्वाचार्यः ॥३८॥**

यसमा माता सावित्री र पिता आचार्य हुन्छन् ।

**एतेनैव तेषां द्विजत्वम् ॥३९॥**

यसले गर्दा नै तिनको द्विजत्व हुन्छ ।

**प्राङ्मौञ्जीबन्धनाद्द्विजः शूद्रसमो भवति ॥४०॥**

कन्धनी बाँध्नु अघिसम्म द्विज शूद्रसमान हुन्छ ।

**ब्रह्मचारिणा मुण्डेन जटिलेन वा भाव्यम्॥४१॥**

ब्रह्मचारीले कपाल खौरनू वा जटा पाल्नू ।

**वेदस्वीकरणादूर्ध्वं गुर्वनुज्ञातस्तस्मै वरं दत्त्वा स्नायात्॥४२॥**

वेद् पढिसकेपछि गुरुलाई दक्षिणा दिई उनको आज्ञाले स्नान गर्नू ।

**ततो गुरुकुल एव वा जन्मनः शेषं नयेत्॥४३॥**

अथवा पूरै जीवन गुरुकुलमा बिताउनू ।

**तत्राचार्ये प्रेते गुरुवद्गुरुपुत्रे वर्तेत॥४४॥**

(पूरै जीवन गुरुकुलमा बिताउने ब्रह्मचारीले) आचार्य बिते आचार्य पुत्रलाई गुरुलाई झैं व्यवहार गर्नू ।



**गुरुदारेषु सवर्णेषु वा॥४५॥**

समान वर्णका गुरुपत्नीलाई पनि गुरुलाई झैं व्यवहार गर्नू ।

**तदभावेऽग्निशुश्रूषुर्नैष्ठिको ब्रह्मचारी स्यात्॥४६॥**

ती नहुँदा अग्निको सेवा गर्दै जीवनभर ब्रह्मचारी हुनू ।

**एवं चरति यो विप्रो ब्रह्मचर्यमतन्द्रितः ।**
**स गच्छत्युत्तमं स्थानं न चेहाजायते पुनः॥४७॥**

अनवरत जो ब्राह्मण ब्रह्मचर्यमा बिताउँदछ उ पुनर्जन्म नहुने
उत्तम स्थानमा जान्छ (मोक्ष हुन्छ) ।

**कामतो रेतसः सेकं व्रतस्थस्य द्विजन्मनः ।**

**अतिक्रमं व्रतस्याहुर्धर्मज्ञा ब्रह्मवादिनः ॥४८॥**

द्विजले ब्रह्मचर्यमा रहँदा कामवासनाले वीर्य खसाले उसको ब्रह्मचर्य व्रत भङ्ग हुन्छ र उसले प्रायश्चित गर्नु पर्दछ भनेर धर्मज्ञले बताएका छन् ।

**एतस्मिन्नेनसि प्राप्ते वसित्वा गर्दभाजिनम् ।**
**सप्तागारं चरेद्भैक्षं स्वकर्म परिकीर्तयन् ॥४९॥**

यस्तो भए गधामा चढी, गधाकै छाला ओढी आफूले गरेको दुष्कर्म बताउँदै सात घरमा भिक्षा माग्नू ।

**तेभ्यो लब्धेन भैक्षेण वर्तयन्नेककालिकम् ।**
**उपस्पृशंस्त्रिषवणमब्देन स विशुध्यति ॥५०॥**

त्यो पाएको भिक्षाले दिनको एक पटक खाँदै त्रिकाल नुहाउने गर्दा वर्ष बितेपछि उ शुद्ध हुन्छ ।

**स्वप्ने सिक्त्वा ब्रह्मचारी द्विजः शुक्रमकामतः ।**
**स्नात्वार्कमर्चयित्वा त्रिः पुनर्मामित्यृचञ्जपेत् ॥५१॥**

ब्रह्मचारीको सपनामा वीर्य स्खलन भए भोलिपल्ट बिहान नुहाउनू, सूर्यपूजा गर्नू र तीन पटक "पुनर्माम्.." ऋचा जप्नू ।

**अकृत्वा भैक्षचरणमसमिध्य च पावकम् ।**
**अनातुरः सप्तरात्रमवकीर्णिव्रतञ्चरेत् ॥५२॥**

भिक्षा नमागी, अग्निको उपासना पनि नगरी बस्ने अशक्त ब्रह्मचारीले सात दिनको अवकीर्णि व्रत गर्नू ।

**तं चेदभ्युदियात्सूर्यः शयानं कामकारतः ।**
**निम्लोचेद्वाप्यविज्ञानाज्जपन्नुपसेद्दिनम् ॥५३॥**

ब्रह्मचारी अल्छि गरी सुतेको अवस्थामा सूर्य उदाए वा अस्ताए एक दिन उपवास बस्नू र एक हजार आठ पटक गायत्री जप गर्नू ।

**॥ समाप्तमिदमष्टाविंशोऽध्यायः ॥२८॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको अट्ठाइसौं अध्याय पूर्ण भयो ।



## एकोनत्रिंशोऽध्यायः
## (उनन्तीसौं अध्याय)

**यस्तूपनीय व्रतादेशं कृत्वा वेदमध्यापयेत्तमाचार्यं विद्यात्॥१॥**

शिष्यलाई व्रतबन्ध गराई सङ्कल्पका साथ वेदको रहस्यको ज्ञान जसले प्रदान गर्दछ त्यसलाई आचार्य भनिन्छ ।

**यस्त्वेनं मूल्येनाध्यापयेत्तमुपाध्यायमेकदेशं वा ॥२॥**

जसले एउटा वा सबै वेद शुल्क लिएर पढाउँछ उसलाई उपाध्याय भनिन्छ ।

**यो यस्य यज्ञे कर्माणि कुर्यात्तमृत्विजं विद्यात्॥३॥**

जो जसको यज्ञमा कर्म गराउँछ उसलाई ऋत्विज भनिन्छ ।

**नापरीक्षितं याजयेत्॥४॥**

नियुक्त नभई यज्ञकर्म नगर्नू । (कसले, कसरी र किन गर्ने भन्ने कुरा सङ्कल्पमा खोल्नु पर्दछ र यसैलाई नियुक्त गर्ने भनिन्छ) ।

**नाध्यापयेत्॥५॥**

नियुक्त नभई नपढाउनू ।

**नोपनयेत्॥६॥**

नियुक्त नभई उपनयन नगराउनू ।

**अधर्मेण च यः प्राह यश्चाधर्मेण पृच्छति ।**
**तयोरन्यतरः प्रैति विद्वेषं वाधिगच्छति॥७॥**

अधर्मपूर्वक सोधे वा जवाफ दिए त्यो एक वा ती दुवै सिद्धिन्छन् वा द्वेष पैदा हुन्छ ।

**धर्मार्थौ यत्र न स्यातां शुश्रूषा वापि तद्विधा ।**
**तत्र विद्या न वक्तव्या शुभं बीजमिवोषरे ॥८॥**

जोसँग धर्म, अर्थ र लगाव छैन त्यस्तालाई विद्या नदिनू त्यो बाँझो
जग्गामा बीऊ रोप्नु जस्तै हुन्छ ।

**विद्या हवै ब्राह्मणमाजगाम गोपाय मा शेवधिस्तेऽहमस्मि ।**
**असूयकायानृजवेऽयताय न मां ब्रूया वीर्यवती तथा स्याम् ॥९॥**

विद्याले ब्राह्मणका नजिकै आएर भने कि मेरो रक्षा गर, म तिम्रो गुप्त धन हुँ तथा निन्दक,
कठोर र व्रतहीन मानिसका सामु मलाई प्रकट नगर्नू । किनकि
म यसैले गर्दा बीर्यशाली भएकी छु ।

**यमेव विद्याः शुचिमप्रमत्तं मेधाविनं ब्रह्मचर्योपपन्नम् ।**
**यस्ते न द्रुह्येत्कतमच्च नाह तस्मै मां ब्रूया निधिपाय ब्रह्मन् ॥१०॥**



त्यो ब्राह्मण जसलाई शुद्ध, अप्रमत्त, वुद्धिमान् र ब्रह्मचारी मानिन्छ र जो मानिस "मैले उपदेश पाइन" भनी गुरुसँग विद्रोह गर्दैन (हे ब्रह्मन् !) त्यस्ता निधि रक्षकका सामु मलाई बताउनू ।

**॥ समाप्तमिदमेकोनत्रिंशोऽध्यायः ॥२९॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको उनन्तीसौं अध्याय पूर्ण भयो ।



# त्रिंशोऽध्यायः
# (तिसौं अध्याय)

**श्रावण्यां प्रौष्ठपद्यां वा छन्दांस्युपाकृत्यार्धपञ्चमान्मासानधीयीत ॥१॥**

साउन वा भदौ पूर्णिमामा उपाकर्म गरी साढे पाँच महिना वेद पढ्नू ।

**ततस्तेषामुत्सर्गं बहिः कुर्यान्नानुपाकृतानाम् ॥२॥**

त्यसपछि तिनको उत्सर्ग गाऊँशहर बाहिर गराउनू । उपाकर्म नगरेकाको होइन ।

**उत्सर्जनोपाकर्मणोर्मध्ये वेदाङ्गाध्ययनं कुर्यात् ॥३॥**

उत्सर्ग र उपाकर्मको बीचको अवधिमा वेदाङ्गको अध्ययन गर्नू ।

**नाधीयीताहोरात्रञ्चतुर्दश्यष्टमीषु च ॥४॥**



चतुर्दशी र अष्टमीमा दिन वा रातमा अध्ययन नगर्नू ।

**नर्त्वन्तरग्रहसूतके ॥५॥**

ऋतुको अन्तरसमयमा (बिचमा) र ग्रहणका दिन अध्ययन नगर्नू ।

**नेन्द्रप्रयाणे ॥६॥**

इन्द्रको ध्वजा झिक्ने दिन ? पनि नपढ्नू ।

**न वाति चण्डपवने ॥७॥**

हावाहुरी चलेको दिन नपढ्नू ।

**नाकालवर्षविद्युत्स्तनितेषु ॥८॥**

कुसमयमा वर्षा हुँदा, बिजुली चम्कँदा र चट्याङ पर्दा त्यो दिन नपढ्नू ।

**न भूकम्पोल्कापातदिग्दाहेषु ॥९॥**

भूकम्प जाँदा, उल्का खस्दा र आकाश डढेका दिन नपढ्नू ।

**नान्तःशवे ग्रामे ॥१०॥**

गाऊँभित्र लाश रहेको दिन नपढ्नू ।

**न शस्त्रसम्पाते ॥११॥**

युद्ध भइरहँदासम्म नपढ्नू ।

**न सृगालगर्दभनिर्ह्रादेषु ॥१२॥**

स्याल कराउँदा र गधा कराउँदासम्म नपढ्नू ।

**न वादित्रशब्दे ॥१३॥**

बाजा बजेसम्म नपढ्नू ।

**न शूद्रपतितयोः समीपे ॥१४॥**

शूद्र र पतितका सामु नपढ्नू ।

**न देवतायतनश्मशानचतुष्पथरथ्यासु ॥१५॥**

मन्दिर परिसर, मसान, चौबाटो र राजमार्गमा नपढ्नू ।

**नोदकान्तः ॥१६॥**

जलभित्र हुँदासम्म नपढ्नू ।

## न पीठोपहितपादः ॥१७॥

कुनै बस्ने आसन वा देवमूर्ति स्थापना गरिने स्थलमाथि गोडा हुँदासम्म नपढ्नू ।

## न हस्त्यश्वोष्ट्रनौगोयानेषु ॥१८॥

हात्ती, घोडा, ऊँटमाथि हुँदा (वा यिनका सवारीमा हुँदा), डुङ्गामा हुँदा वा गोरुगाडामा हुँदा नपढ्नू ।

## न वान्तः ॥१९॥

वमन भएपछि (त्यो दिन) नपढ्नू ।

## न विरिक्तः ॥२०॥

कुनै दिसा लगाउने औषधी खाएपछि पनि नपढ्नू ।

## नाजीर्णी ॥२१॥

अजीर्ण हुँदा नपढ्नू ।

## न पञ्चनखान्तरागमने ॥२२॥

पढिरहेको स्थानमा बीचबाट पाँच नङ्गे जनावर जाँदा नपढ्नू ।

## न राजश्रोत्रियगोब्राह्मणव्यसने ॥२३॥

राजा, श्रोत्रिय ब्राह्मण (एक वेदज्ञ), गाई र साधारण ब्राह्मण अपर्झट भेट हुँदा वेद नपढ्नू ।

## नोपाकर्मणि ॥२४॥

उपाकर्म पछि (तीन दिन) वेद नपढ्नू ।

**नोत्सर्गे ॥२५॥**

उत्सर्ग पछि नपढ्नू ।

**न सामध्वनावृग्यजुषी ॥२६॥**

सामध्वनिमा ऋग् र यजुर्वेद नपढ्नू ।

**नापररात्रमधीत्य शयीत ॥२७॥**

रातका पछिल्ला प्रहरमा वेद पढेर फेरी नसुत्नू ।

**अभियुक्तोऽप्यनध्यायेष्वध्ययनं परिहरेत् ॥२८॥**

अभियुक्त (शिक्षकबाट) ले पनि अनध्यायमा अध्ययन छोड्नू ।



**यस्मादनध्यायाधीतं नेहामुत्र फलदम् ॥२९॥**

अनध्यायको अध्ययनले न यस जुनीमा न परलोकमा कुनै लाभ हुन्छ ।

**तदध्ययनेनायुषः क्षयो गुरुशिष्ययोश्च ॥३०॥**

अनध्यायको अध्यापन र अध्ययनले गुरुशिष्यको आयु घटाउँदछ ।

**तस्मादनध्यायवर्जं गुरुणा ब्रह्मलोककामेन विद्या सच्छिष्यक्षेत्रेषु वप्तव्या ॥३१॥**

अतः अनध्यायलाई छोडी गुरुले ब्रह्मलोकको कामना गरी
असल शिष्य र स्थानमा वेद पढाउनू ।

**शिष्येण ब्रह्मारम्भावसानयोर्गुरोः पादोपसङ्ग्रहणं कार्यम् ॥३२॥**

शिष्यले वेदारम्भ र समापनमा गुरुका चरण वन्दना (छाँद हाल्नु) गर्नू ।

**प्रणवश्च व्याहृर्तव्यः ॥३३॥**

प्रणव र व्याहृति पनि पढ्नू ।

**तत्र च यदृचोऽधीते तेनास्याज्येन पितृणां तृप्तिर्भवति ॥३४॥**

ऋग्वेद जसले पढ्दछ त्यसबाट पितृहरु घिउले तृप्त हुन्छन् ।

**यद्यजूँषि तेन मधुना ॥३५॥**

यजुर्वेद पढ्दा महले तृप्त हुन्छन् ।

**यत्सामानि तेन पयसा ॥३६॥**

सामवेद पढ्दा दूधले तृप्त हुन्छन् ।



**यदाथर्वणं तेन मांसेन ॥३७॥**

अथर्ववेद पढ्दा मासुले तृप्त हुन्छन् ।

**यत्पुराणेतिहासवेदाङ्गधर्मशास्त्रण्यधीते तेनास्यान्नेन ॥३८॥**

जुन पुराण, इतिहास, वेदाङ्ग र धर्मशास्त्र पढिन्छ त्यसबाट अन्नले तृप्त हुन्छन् ।

**यश्च विद्यामासाद्यास्मिँल्लोके तया जीवेन्न सा तस्य परलोके फलप्रदा भवेत् ॥३९॥**

यसलोकमा बाँच्नका लागि पवित्र विद्यालाई उपभोग गर्नेले परलोकमा केही पनि पाउँदैन ।

**यश्च विद्यया यशः परेषां हन्ति ॥४०॥**

जसको विद्याले अरुको यश नाश गर्दछ तिनले पनि परलोकमा केही पनि पाउँदैनन् ।

**अननुज्ञातश्चान्यस्मादधीयानान्न विद्यामादद्यात् ॥४१॥**

गुरुको अनुमति बिना अन्यबाट पवित्र विद्या नलिनू।

**तदादानमस्य ब्रह्मस्तेयं नरकाय भवति ॥४२॥**

यसो गर्नु वेदको चोरी हुन्छ र नरक परिन्छ ।

**लौकिकं वैदिकं वापि तथाध्यात्मिकमेव वा ।**
**आददीत यतो ज्ञानं न तं द्रुह्येत्कदाचन ॥४३॥**

लौकिक, वैदिक वा आध्यात्मिक विद्याका गुरुहरुलाई कहिल्यै दुःख नदिनू ।

**उत्पादकब्रह्मदात्रोर्गरीयान्ब्रह्मदः पिता ।**
**ब्रह्मजन्म हि विप्रस्य प्रेत्य चेह च शाश्वतम् ॥४४॥**

जन्माउने र ब्रह्मविद्या दिनेमा विद्या दिने नै महान हुन्छन्
किनकि विद्याले नै यो जीवन र परलोक सुधार्छ ।

**कामान्माता पिता चैनं यदुत्पादयतो मिथः ।**
**सम्भूतिं तस्य तां विद्याद्यद्योनाविह जायते ॥४५॥**

मातापिताको कामवासनाको संयोगले माताको कोखबाट मानव
उत्पन्न हुन्छ भनी उसले महशुस गर्नू ।

**आचार्यस्त्वस्य यां जातिं विधिवद्वेदपारगः ।**
**उत्पादयति सावित्रया सा जत्या साजरामरा ॥४६॥**

आचार्य जसले विधिपूर्वक सावित्रि (माता) बाट जन्माई वेदपारङ्गत बनाउँदछ
नै वास्तविक जन्म (अस्तित्व) हो र त्यो नै अजरअमर छ ।

**य आवृणोत्यवितथेन कर्णावदुःखं कुर्वन्नमृतं सम्प्रयच्छन् ।**
**तं वै मन्येत्पितरं मातरञ्च  तस्मै न द्रुह्येत्कृतमस्य जानम् ॥४७॥**

ती जसले आफ्ना कान पवित्र सत्यले भरि दिन्छन्, जसले सबै दुखबाट छुटाउँछन्, अमरत्व प्रदान गर्दछन् ती आचार्य र सावित्रीलाई नै वास्तविक मातापिता मान्नू । जुन ऋणभार तिनले उसलाई लगाएका हुन्छन् त्यसको बदलामा उसले कहिल्यै तिनलाई दुःख नदिनू ।

## ॥ समाप्तमिदं त्रिंशोऽध्यायः ॥३०॥



मोहन प्रसाद सापकोटाद्धारा भावानुवाद गरिएको विष्णुस्मृतिको तिसौं अध्याय पूर्ण भयो ।



# एकत्रिंशोऽध्यायः
## (एकतीसौँ अध्याय)

**त्रयः पुरुषस्यातिगुरवो भवन्ति ॥१॥**

पुरुषका तीन महागुरु हुन्छन् ।

**पिता माता आचार्यश्च ॥२॥**

पिता, माता र आचार्य ।

**तेषां नित्यमेव शुश्रूषुणा भवितव्यम् ॥३॥**

तिनीहरुको सदा नै सेवासुश्रूषा गरिनु पर्दछ ।

**यत्ते ब्रूयुस्तत्कुर्यात् ॥४॥**



तिनको आज्ञा पालना गर्नू ।

**तेषां प्रियहितमाचरेत् ॥५॥**

तिनको चाहना र हीत अनुसारका आचरण गर्नू ।

**न तैरननुज्ञातः किंचिदपि कुर्यात् ॥६॥**

तिनको अवज्ञा गरी कुनै पनि कार्य नगर्नू ।

**एत एव त्रयो वेदा एत एव त्रयः सुराः ।**
**एत एव त्रयो लोका एत एव त्रयोऽग्नयः ॥७॥**

यी नै तीन वेद हुन्, यिनै तीन देवता हुन्, यिनै तीन लोक हुन् र यिनै तीन अग्नि पनि हुन् ।

**पिता गार्हपत्योऽग्निर्दक्षिणाग्निर्माता गुरुराहवनीयः ॥८॥**

पिता गार्हपत्य अग्नि, माता दक्षिणाग्नि र गुरु आवहनीय अग्नि हुन् ।

**सर्वे तस्यादृता धर्मा यस्यैते त्रय आदृताः ।**
**अनादृतास्तु यस्यैते सर्वास्तस्याफलाः क्रियाः ॥९॥**

जसले यि तीनमा श्रद्धा राख्दछ उसले सबै आफ्ना कर्तव्य पूरा गर्दछ र जसले राख्दैन उसले कुनै पनि धार्मिक कर्मको फल प्राप्त गर्दैन ।

**इमं लोकं मातृभक्त्या पितृभक्त्या तु मध्यमम् ।**
**गुरुशुश्रूषा त्वेव ब्रह्मलोकं समश्नुते ॥१०॥**

मातृभक्तिले यो लोक, पितृभक्तिले देवलोक र गुरुभक्तिले ब्रह्मलोक प्राप्त गर्दछ ।

**॥ समाप्तमिदमेकत्रिंशोऽध्यायः ॥३१॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको एकतीसौं अध्याय पूर्ण भयो ।



## द्वात्रिंशोऽध्यायः
## (बत्तीसौं अध्याय)

**राजर्त्विक्श्रोत्रियाधर्मप्रतिषेध्युपाध्यायपितृव्यमातामहमातुल-श्वशुरज्येष्ठभ्रातृसम्बन्धिनश्चाचार्यवत् ॥१॥**

राजा, ऋत्विक्, श्रोत्रिय, अधर्मलाई रोक्ने, उपाध्याय, पिताका दाजुभाइ, आमाका पिता, मामा, ससुरा, जेठो दाजु र सम्धीसम्धिनी आचार्य समान हुन् ।

**पत्न्य एतेषां सवर्णाः ॥२॥**

यिनका सवर्णा पत्नी हरु पनि आचार्य समान हुन् ।

**मातृष्वसा पितृष्वसा ज्येष्ठा स्वसा च ॥३॥**

माताका दीदिबहिनी, पिताका दीदिबहिनी र तिनकी जेठी दीदि पनि आचार्य समान हुन् ।



**श्वसुरपितृव्यमातुलर्त्विजां कनीयसां प्रत्युत्थानमेवाभिवादनम् ॥४॥**

ससुरा, पिताका दाजुभाई, मामा र ऋत्विज् कान्छा उमेरका भएपनि उठेर अभिवादन गर्नू ।

**हीनवर्णानां गुरुपत्नीनां दूरादभिवादनं न पादोपसंस्पर्शनम् ॥५॥**

तल्लो वर्णका गुरुपत्नीलाई टाढैबाट अभिवादन गर्नू, गोडा नछुनू ।

**गुरुपत्नीनां गात्रोत्सादनाञ्जनकेशसंयमनपादप्रक्षालनादीनि न कुर्यात् ॥६॥**

गुरुपत्नीको शरीरमा तेल मालिश गर्ने, गाजल लगाइ दिने,
कपाल कोरिदिने, गोडा धोइदिने आदि काम नगर्नू ।

**असंस्तुतापि परपत्नी भगिनीति वाच्या पुत्रीति मातेति वा ॥७॥**

नचिनेको भए पनि पराया स्त्रीलाई बहिनी, छोरी वा आमा भन्नू ।

**न च गुरूणां त्वमिति ब्रूयात् ॥८॥**

गुरुलाई तिमि (वा तँ) नभन्नू ।

**तदतिक्रमे निराहारो दिवसान्ते तं प्रसाद्याश्नीयात् ॥९॥**

यसको अतिक्रमण भए दिनभर निराहार बस्नू र तिनलाई खुशी पारेर खानू ।

**न च गुरुणा सह विगृह्य कथाः कुर्यात् ॥१०॥**

गुरुसँग विवाद, झगडा नगर्नू ।

**न चैवास्य परीवादनम् ॥११॥**

उनको निन्दा पनि नगर्नू ।



**न चानभिप्रेतम् ॥१२॥**

उनलाई चिढ्याउने कुनै काम नगर्नू ।

**गुरुपत्नी तु युवतिर्नाभिवाद्येह पादयोः ।**
**पूर्णे विंशतिवर्षे च गुणदोषौ विजानता ॥१३॥**

बीस वर्ष पुगि सकेका शिष्यले जवान गुरुपत्नीलाई गोडामा
अभिवादन नगर्नू किनकि उ गुणदोष जान्ने भइसक्दछ ।

**कामन्तु गुरुपत्नीनां युवतीनां युवा भुवि ।**
**विधिवद्वन्दनं कुर्यादसावहमिति ब्रुवन् ॥१४॥**

युवक शिष्यले जवान गुरुपत्नीलाई उभिएर विधिपूर्वक अभिवादन गर्नू र
म फलानो हजुरलाई नमस्कार गर्दछु भन्नू ।

**विप्रोष्य पादग्रहणमन्वहञ्चाभिवादनम् ।**
**गुरुदारेषु कुर्वीत सतां धर्ममनुस्मरन् ॥१५॥**

यात्राबाट फर्केको शिष्यले एक पटक गुरुपत्नीको चरण छुनू ।
गुरुपत्नीलाई सधैं धर्म सम्झँदै नमस्कार गर्नू ।

**वित्तं बन्धुर्वयः कर्म विद्या भवति पञ्चमी ।**
**एतानि मानस्थानानि गरीयो यद्यदुत्तमम् ॥१६॥**

धन, नाता, उमेर, कर्म र पाँचौं विद्या यी सम्मानका आधार हुन् । यिनमा
बढी हुने क्रमशः उत्तम हुन्छन् ।

**ब्राह्मणं दशवर्षञ्च शतवर्षञ्च भूमिपम् ।**
**पितापुत्रौ विजानीयाद्ब्राह्मणस्तु तयोः पिता ॥१७॥**

दश वर्षको ब्राह्मण र सय वर्षको राजा हुँदा पनि ती बाबुछोरा जान्नू, तिनमा
ब्राह्मण तिनको बाबु हुन्छ ।



**विप्राणां ज्ञानतो ज्यैष्ठ्यं क्षत्रियाणान्तु वीर्यतः ।**
**वैश्यानां धान्यधनतः शूद्राणामेव जन्मतः ॥१८॥**

ब्राह्मण ज्ञानको आधारमा, क्षत्रिय बाहुबलको आधारमा, वैश्य धनधान्यको
आधारमा र शूद्र जन्मका आधारमा श्रेष्ठ हुन्छ ।

**॥ समाप्तमिदं द्वात्रिंशोऽध्यायः ॥३२॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको बत्तीसौं अध्याय पूर्ण भयो ।



## त्रयस्त्रिंशोऽध्यायः
## (तेत्तीसौं अध्याय)

**अथ पुरुषस्य कामक्रोधलोभाख्यां रिपुत्रयं सुघोरं भवति ॥१॥**

पुरुषका काम, क्रोध र लोभ नामका तीन वटा भयानक शत्रु हुन्छन् ।

**परिग्रहप्रसङ्गाद्विशेषेण गृहाश्रमिणः ॥२॥**

पुरुषमा पनि विशेषतः गृहस्थीका लागि यी तीन कुरा शत्रु हुन्छन् । किनकि तिनले विवाह र सङ्ग्रह गरेका हुन्छन् ।

**तेनायमाक्रान्तोऽतिपातकमहापातकानुपातकोपपातकेषु, प्रवर्तते ॥३॥**

यी तीनबाट आक्रान्त हुँदा अतिपाप, महापाप, पाप र उपपापको उत्पत्ति हुन्छ ।

**जातिभ्रंशकरेषु सङ्करीकरणेष्वपात्रीकरणेषु च ॥४॥**



जातिच्युतता, शंकरीकरण (जातपातको अन्त) अपात्रीकरण (वर्णकर्मको अन्त) पाप पनि हुन्छ ।

**मलावहेषु प्रकीर्णकेषु च ॥५॥**

अपवित्रता र विविध दुराचारजन्य पाप पनि हुन्छ ।

**त्रिविधं नरकस्येदं द्वारं नाशनमात्मनः ।**
**कामः क्रोधस्तथा लोभस्तस्मादेतत्त्रयं त्यजेत् ॥६॥**

यी तीन नरकमार्ग हुन्, आत्मनाशक हुन् अतः काम, क्रोध र लोभ : यी तीनलाई परित्याग गर्नू ।

**॥ समाप्तमिदं त्रयस्त्रिंशोऽध्यायः ॥३३॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको तेत्तिसौं अध्याय पूर्ण भयो ।



# चतुस्त्रिंशोऽध्यायः
# (चौंतीसौं अध्याय)

**मातृगमनं दुहितृगमनं स्नुषागमनमित्यतिपातकानि ॥१॥**

माता गमन, पुत्री गमन र पुत्रवधु गमन अतिपाप हुन् ।

**अतिपातकिनस्त्वेते प्रविशेयुर्हुताशनम् ।**
**न ह्यन्या निष्कृतिस्तेषां विद्यते हि कथञ्चन ॥२॥**

यस्ता अतिपापीले अग्निमा प्रवेश गर्नू । तिनको पाप छुट्ने अरु कुनै उपाय छैन ।

**॥ समाप्तमिदं चतुस्त्रिंशोऽध्यायः ॥३४॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको चौंतीसौं अध्याय पूर्ण भयो ।



# पञ्चत्रिंशोऽध्यायः
# (पैँतीसौँ अध्याय)

**ब्रह्महत्या सुरापानं ब्राह्मणसुवर्णहरणं गुरुदारगमनमिति महापातकानि ॥१॥**

ब्राह्मणको हत्या गर्नू, मदिरा पिउनु, ब्राह्मणको सुन चोर्नु र गुरुपत्नी गमन गर्नू महापाप हुन् ।

**तत्संयोगश्च ॥२॥**

त्यस्ताको सङ्गत गर्नू पनि महापाप हो ।

**सम्वत्सरेण पतति सहाचरन् ॥३॥**

महापापीको एक वर्षसम्म सङ्गत गर्नाले सङ्गत गर्ने पनि पतित (महापापी) हुन्छ ।

**एकयानभोजनासनशयनैः ॥४॥**



महापापीसँग एउटै सवारीमा चढ्दा, सँगै खाँदा र सँगै सुत्दा पनि महापापी हुन्छ ।

**यौनस्त्रौवमौखैः सम्बन्धैस्तु सद्य एव ॥५॥**

महापापीसँग गमन गर्नाले, कर्म सँगै गर्नाले र मुखको सम्बन्धले उ तुरुन्त पतित हुन्छ ।

**अश्वमेधेन शुद्धेयुर्महापातकिनस्त्विमे ।**
**पृथिव्यां सर्वतीर्थानां तथानुसरणेन च ॥६॥**

त्यस्ता महापापीहरु अश्वमेध यज्ञले वा पृथ्वीका सबै तीर्थाटनले शुद्ध हुन्छन् ।

**॥ समाप्तमिदं पञ्चत्रिंशोऽध्यायः ॥३५॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको पैँतीसौँ अध्याय पूर्ण भयो ।



# षट्त्रिंशोऽध्यायः
## (छत्तीसौं अध्याय)

**यागस्थस्य क्षत्रियस्य वैश्यस्य च रजस्वलायाश्चान्तर्वत्न्याश्चात्रिगोत्रायाश्चाविज्ञातस्य गर्भस्य शरणागतस्य च घातनं ब्रह्महत्यासमानि ॥१॥**

यज्ञ गरिरहेका क्षत्रिय र वैश्य, रजसवला स्त्री, गर्भिणी स्त्री, अपिवत्रताको स्नान गरेकी ब्राह्मणी, अज्ञातजन्मा, शरणागत लाई मार्नु ब्रह्महत्या समान हो ।

**कौटसाक्ष्यं सुहृद्वध एतौ सुरापानसमौ ॥२॥**

भूटो साछी दिनू र मित्रवध गर्नू : यी दुई सुरापान समानका पाप हुन् ।

**ब्राह्मणस्य भूम्यपहरणं निक्षेपापहरणं सुवर्णस्तेयसमम् ॥३॥**

ब्राह्मणको जमिन र निक्षेप हरण गर्नू सुनचोरी गर्नू समानको पाप हो ।

**पितृव्यमातामहमातुलश्वशुरनृपपत्न्यभिगमनं गुरुदारगमनसमम् ॥४॥**

बाबुका दाजुभाई, मावली हजूरबा, मामा, ससुरा र राजाका पत्नी गमन गुरुपत्नी गमन समानको पाप हो ।

**पितृष्वसृमातृष्वसृस्वसृगमनञ्च ॥५॥**

पितामाताका र आफ्नै दीदिबहिनी गमन गर्नू पनि गुरुपत्नी गमन समानको पाप हो ।

**श्रोत्रियर्त्विगुपाध्यायमित्रपत्न्यभिगमनञ्च ॥६॥**

श्रोत्रिय, पुरेत, उपाध्याय र मित्रका पत्नी गमन पनि गुरुपत्नी गमन समानको पाप हो ।

**स्वसुः सख्याः सगोत्राया उत्तमवर्णायाः कुमार्या अन्त्यजाया रजस्वलायाः शरणागतायाः प्रव्रजिताया निक्षिप्तायाश्च ॥७॥**

पत्नी (वा आफ्ना) स्त्रीसाथी, सगोत्रीया, उत्तम वर्णिया, कुमारी, अन्त्यजा, रजस्वला, शरणमा आएकी, सन्यासिनी र हेरचाहका लागि जिम्मा लगाइएकी स्त्री गमन गर्नू पनि गुरुपत्नी गमन समानको पाप हो ।

**अनुपातकिनस्त्वेते महापातकिनो यथा ।**
**अश्वमेधेन शुध्यन्ति तीर्थानुसरणेन च ॥८॥**

यी पापीहरु पनि महापापी शुद्ध भएजस्तै गरेर अश्वमेध र तीर्थाटनले शुद्ध हुन्छन् ।

**॥ समाप्तमिदं षट्त्रिंशोऽध्यायः ॥३६॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको छत्तीसौँ अध्याय पूर्ण भयो ।



# सप्तत्रिंशोऽध्यायः
# (सैँतिसौँ अध्याय)

**अनृतवचनमुत्कर्षे ॥१॥**

मैले नै गरेको हो-भन्ने जस्ता परम झूट बोल्नु, ।

**राजागामि पैशुन्यम् ॥२॥**

राजा (वा दरबार) सम्म पुग्नेगरी परस्पर वैमनस्यता गराउनु, ।

**गुरोश्चालीकनिर्बन्धः ॥३॥**

गुरुलाई नचाहिने आरोप लगाउनु, ।

**वेदनिन्दा ॥४॥**



वेदको निन्दा गर्नु, ।

**अधीतस्य च त्यागः ॥५॥**

पढेको वेद त्याग्नु (बिर्सनु), ।

**अग्निपितृमातृसुतदाराणाञ्च ॥६॥**

अग्नि, पिता, माता, पुत्र र पत्नीलाई (बिनाकारण) परित्याग गर्नु ।

**अभोज्यान्नाभक्ष्यभक्षणम् ॥७॥**

अभोज्य अन्न र अभक्ष्य खाना खानू,  ।

**परस्वापहरणम् ॥८॥**

अरुको धनसम्पत्ति चोर्नु, ।

**परदाराभिगमनम् ॥९॥**

पराया स्त्रीलाई गमन गर्नु, ।

**अयाज्ययाजनम् ॥१०॥**

गराउन नहुनेको यज्ञ गराउनु, ।

**विकर्मजीवनम् ॥११॥**

निषेधित कर्मले जीवन चलाउनु, ।

**असत्प्रतिग्रहश्च ॥१२॥**


निषेधित दान लिनु, ।

**क्षत्रविट् शूद्रगोवधः ॥१३॥**

क्षत्रिय, वैश्य, शुद्र वा गाई मार्नु, ।

**अविक्रेयविक्रयः ॥१४॥**

निषेधित कुरा बेच्नु, ।

**परिवित्तितानुजेन ज्येष्ठस्य ॥१५॥**

(दाजुले) आफ्नो नगर्दै गर्न लागिएको वा गरिएको भाईको विवाहलाई मान्नु, ।

**परिवेदनम् ॥१६॥**

(भाइले) दाजुको नभई हुन लागेको वा भएको आफ्नो विवाह मान्नु, ।

**तस्य च कन्यादानम् ॥१७॥**

त्यस्तो विवाहमा कन्यादान दिनु, ।

**याजनञ्च ॥१८॥**

त्यस्तो विवाहको विधि गर्नू पनि, ।

**व्रातत्या ॥१९॥**

व्रात्य हुनु, ।

**भृतकाध्यापनम् ॥२०॥**

शुल्क लिएर वेद पढाउनु, ।



**ताच्चाध्यायनादानम् ॥२१॥**

शुल्क तिरेर वेद पढ्नु, ।

**सर्वाकरेष्वधिकारः ॥२२॥**

राजाज्ञाले खानीमा काम गर्नु, ।

**महायन्त्रप्रवर्तनम् ॥२३॥**

ठूला यन्त्रहरु बनाउनु, ।

**द्रुमगुल्मवल्लीलतौषधीनां हिंसा ॥२४॥**

वृक्ष, वनस्पति, लता, लहरा काट्नु वा चुँडाल्नु, ।

**स्त्रिया जीवनम् ॥२५॥**

पत्नीको कमाइमा बाँच्नु, ।

**अभिचारबलकर्मसु च प्रवृत्तिः ॥२६॥**

दुराचार  र बलमिच्याइँ गर्नु, ।

**आत्मार्थे क्रियारम्भः ॥२७॥**

स्वस्वार्थका लागि (खानपान) कर्म गर्नु ।

**अनाहिताग्निता ॥२८॥**

होम नगर्नु ।

**देवर्षिपितृऋणानामनपक्रिया ॥२९॥**

देवता, ऋषि र पितृ ऋण प्रति उदासिन हुनु, ।

**असच्छास्त्राभिगमनम् ॥३०॥**

नास्तिक शास्त्र पढ्नु, ।

**नास्तिकता ॥३१॥**

नास्तिक हुनु, ।

**कुशीलवता ॥३२॥**

निषेधित पेशा (नाच आदि) मा लाग्नु र ।

**मद्यपस्त्रीनिवेषणम् ॥३३॥**

मदिरा पिउने स्त्रीलाई गमन गर्नु ।

**इत्युपपातकानि ॥३४॥**

यी (सबै) उपपाप हुन् ।

**उपपातकिनस्त्वेते कुर्युश्चान्द्रायणं नराः ।**
**पराकञ्च तथा कुर्युर्यजेयुर्गोमखेन च ॥३५॥**

उपपापी मानिसले चान्द्रायण व्रत गर्नू, पराक व्रत पनि गर्नू तथा गोयज्ञ गर्नू ।

**॥ समाप्तमिदं सप्तत्रिंशोऽध्यायः ॥३७॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको सैंतिसौं अध्याय पूर्ण भयो ।



# अष्टात्रिंशोऽध्यायः
# (अठतिसौं अध्याय)

**ब्राह्मणस्य रुजस्करणम् ॥१॥**

ब्राह्मणलाई शारीरिकरुपमा दुःख दिनु, ।

**अघ्रेयमद्ययोर्घ्रातिः ॥२॥**

सुँघ्न नहुने मदिरा आदि सुँघ्नु, ।

**जैह्म्यम् ॥३॥**

बेइमान व्यवहार गर्नु, ।

**पशुषु मैथुनाचरणम् ॥४॥**

पशु गमन गर्नु, ।



**पुंसि च ॥५॥**

(समलिङ्गि मैथुन वा अप्राकृतिक स्त्री मैथुन) र पुरुष गमन गर्नु, ।

**इति जातिभ्रंशकराणि ॥६॥**

यी जातिभ्रष्ट गराउने खालका पाप हुन् ।

**जातिभ्रंशकरं कर्म कृत्वान्यतममिच्छया ।**
**कुर्यात्सान्तपनं कृच्छ्रं प्राजापत्यमनिच्छया ॥७॥**

यी जातिभ्रष्टकारी कार्य जानीजानी गर्नेले कृच्छ्र सान्तपन र
नजानीकन गर्नेले प्राजापत्य व्रत गर्नू ।

**॥ समाप्तमिदमष्टात्रिंशोऽध्यायः ॥३८॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको अठतिसौं अध्याय पूर्ण भयो ।



## एकोनचत्वारिंशोऽध्यायः
## (उनन्चालीसौं अध्याय)

**ग्राम्यारण्यानां पशूनां हिंसा सङ्करीकरणम् ॥१॥**

घरपालुवा वा जङ्गली जनावर मार्नु सङ्करीकरण हो ।

**सङ्करीकरणं कृत्वा मासमश्नीत यावकम् ।**
**कृच्छ्रातिकृच्छ्रमथवा प्रायश्चित्तं तु कारयेत् ॥२॥**

सङ्करीकरण गरे एक महिनासम्म जौको खाद्य खानू वा कृच्छ्रातिकृच्छ्र व्रत गर्नू ।

**॥ समाप्तमिदमेकोनचत्वारिंशोऽध्यायः ॥३९॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको
उनन्चालीसौं अध्याय पूर्ण भयो ।

## चत्वारिंशोऽध्यायः
## (चालीसौं अध्याय)

**निन्दितेभ्यो धनादानं वाणिज्यं कुसीदजीवनमसत्यभाषणं शूद्रसेवनमित्यपात्रीकरणम् ॥१॥**

निन्दितबाट धन लिनु, ब्यापार गर्नु, ब्याज खाएर बाँच्नु, झूट बोल्नु, शूद्रको सेवा गर्नु : यी अपात्रीकरण हुन् ।

**अपात्रीकरणं कृत्वा तप्तकृच्छ्रेण शुध्यति ।**
**शीतकृच्छ्रेण वा भूयोमहासान्तपनेन वा ॥२॥**

अपात्रीकरण गरे तप्तकृच्छ्रले (जानेर गरे) वा शीतकृच्छ्रले (नजानी गरे) वा महासान्तपन व्रतले (पटकपटक गरे) शुद्ध हुन्छ ।

**॥ समाप्तमिदं चत्वारिंशोऽध्यायः ॥४०॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको चालीसौं अध्याय पूर्ण भयो ।

# एकचत्वारिंशोऽध्यायः
# (एकचालीसौं अध्याय)

**पक्षिणाञ्जलाचराणाञ्जलजानाञ्च घातनम् ॥१॥**

चराहरु, उभयचर प्राणि तथा जलचर प्राणि मार्नु, ।

**कृमिकीटानां च ॥२॥**

तथा कीराफटयाङ्ग्रा मार्नु, ।

**मद्यानुगतभोजनम् ॥३॥**

(जाइफल आदि) जस्ता मद पैदा गर्ने विरुवा खानु, ।

**मलावहानि ॥४॥**



(आदि) जस्ता कुराले मानिसलाई अपवित्र (मलिनीकरण) बनाउँदछ ।

**मलिनीकरणीयेषु तप्तकृच्छ्रं विशोधनम् ।**
**कृच्छ्रातिकृच्छ्रमथवा प्रायश्चित्तं विशोधनम् ॥५॥**

मलिनीकरणको शुद्धि तप्तकृच्छ (नजानी गर्दा) वा कृच्छ्रातिकृच्छ्र (जानीजानी गर्दा) ले हुन्छ ।

**॥ समाप्तमिदमेकचत्वारिंशोऽध्यायः ॥४१॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको
एकचालीसौं अध्याय पूर्ण भयो ।



# द्विचत्वारिंशोऽध्यायः
# (बयालीसौं अध्याय)

**यदनुक्तं तत्प्रकीर्णम् ॥१॥**

जे बताइएन ति सबै प्रकीर्ण (फूटकर अपराध वा पाप) हुन् ।

**प्रकर्णिपातके ज्ञात्वा गुरुत्वमथ लाघवम् ।**
**प्रायश्चित्तं वुधः कुर्याद्ब्राह्मणानुमतः सदा ॥२॥**

प्रकीर्ण अपराधको मात्रा हेरी गुरु गुरुको आज्ञा अनुसार बुद्धिमानले प्रायश्चित गर्नू ।

**॥ समाप्तमिदं द्विचत्वारिंशोऽध्यायः ॥४२॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको बयालीसौं अध्याय पूर्ण भयो ।



# त्रिचत्वारिंशोऽध्यायः
# (त्रिचालीसौँ अध्याय)

**अथ नरकाः ॥१॥**

अब नरकका विषयमा बताइन्छ ।

**तामिस्रम् ॥२॥**

तामिस्र ।

**अन्धतामिश्रम् ॥३॥**

अन्धतामिश्र ।

**रौरवम् ॥४॥**



रौरव ।

**महारौरवम् ॥५॥**

महारौरव ।

**कालसूत्रम् ॥६॥**

कालसूत्र ।

**महानरकम् ॥७॥**

महानरक ।

**सञ्जीवनम् ॥८॥**

सञ्जीवन ।

**अवीचिः ॥९॥**

अवीचि ।

**तापनम् ॥१०॥**

तापन ।

**सम्प्रतापनम् ॥११॥**

सम्प्रतापन ।

**सङ्घातकम् ॥१२॥**



सङ्घातक ।

**काकोलम् ॥१३॥**

काकोल ।

**कुड्मलम् ॥१४॥**

कुड्मल ।

**पूतिमृत्तिकम् ॥१५॥**

पूतिमृत्तिक ।

**लोहशङ्कुः ॥१६॥**

लोहशङ्कु ।

**ऋचीषम् ॥१७॥**

ऋषीच ।

**विषपन्थानम् ॥१८॥**

विषपन्थान ।

**कण्टकशाल्मलिः ॥१९॥**

कण्टकशाल्मलि ।

**दीपनदी ॥२०॥**

दीपनदी ।

**असिपत्रवनम् ॥२१॥**



असिपत्रवन र ।

**लोहचारकमिति ॥२२॥**

लोकचारक ।

**एतेष्वकृतप्रायश्चित्ता अतिपातकिनः पर्यायेण कल्पं पच्यन्ते ॥२३॥**

यी नरकमा ती अतिपापीहरु जसले प्रायश्चित गरेका छैनन् कल्पपर्यन्त पर्दछन् ।

**महापातकिनो मन्वन्तरम् ॥२४॥**

महापापीहरु मन्वन्तर पर्यन्त पर्दछन् ।

**अनुपातकिनश्च ॥२५॥**

महापापी समानका पापी पनि मन्वन्तर पर्यन्त पर्दछन् ।

**उपपातकिनश्चतुर्युगम् ॥२६॥**

उपपापीहरु चार युगसम्म पर्दछन् ।

**कृतसङ्करीकरणाश्च सम्वत्सरसहस्रम् ॥२७॥**

वर्णसङ्कर गर्ने हजार वर्षसम्म पर्दछन् ।

**कृतजातिभ्रंशकरणाश्च ॥२८॥**

जातिभ्रंशकारी पनि हजार वर्षसम्म पर्दछन् ।

**कृतापात्रीकरणश्च ॥२९॥**

अपात्रीकरणकारी पनि हजार वर्षसम्म पर्दछन् ।



**कृतमलिनीकरणाश्च ॥३०॥**

मलिनीकरणकारी पनि हजार वर्षसम्म पर्दछन् ।

**प्रकीर्णपातकिनश्च बहून्वर्षपूगान् ॥३१॥**

प्रकीर्ण पापीहरु पनि धेरै वर्षसम्म यी नरकमा पर्दछन् ।

**कृतपातकिनः पापाः प्राणत्यागादनन्तरम् ।**
**याम्यं पन्थानमासाद्य दुखमश्नन्ति दारुणम् ॥३२॥**

पापीहरू प्राण त्याग गरेपछि यम-मार्गमा यमलोकतिर लगिँदा
अत्यन्त दर्दनाक दुःख पाउँदछन् ।

**यमस्य पुरुषैर्घोरैः कृष्यमाणा यतस्ततः ।**

**सकृच्छ्रेणानुकारेण नीयमानाश्च ते यथा ॥३३॥**

यताउता लछारपछार पार्दै घिसार्दै पिट्दै यमदूतहरूले तिनलाई नरकतिर लैजान्छन् ।

**श्वभिः श्रृगालैः क्रव्यादै काककङ्कबकादिभिः ।**
**अग्नितुण्डैर्भक्ष्यमाणा भुजङ्गैर्वृश्चिकैस्तथा ॥३४॥**

त्यहाँ त्यो यम-मार्गमा तिनलाई कुकुर, स्याल, गिद्ध, काग, बकुल्ला, सारस र अग्निसमान मुख वा चुच्चो भएका पशुपंक्षीबाट ठुँगिँदै टोकिँदै अनि विभिन्न किसिमका सर्प र विच्छीबाट डसिँदै जानु पर्दछ ।

**अग्निना दह्यमानाश्च तुद्यमानाश्च कण्टकैः ।**
**क्रकचै पाटयमानाश्च पीडयमानाश्च तृष्णया ॥३५॥**

त्यहाँ ती पापीले आगोले पोलिँदै, काँडाले घोचिँदै, करौंतीले चिरिँदै अनि तिर्खाले आकुल हुँदै हिँड्नु पर्दछ ।



**क्षुधया व्यथमानाश्च घोरैर्व्याघ्रगणैस्तथा ।**
**पूयशोणितगन्धेन मूर्छमानाः पदे पदे ॥३६॥**

भोकले पिडीत ती त्यहाँ, भयङ्कर आकारका बाघ आदिबाट त्रस्त हुँदै अनि पीप र रगतको गन्धले पाइलापाइलामा मूर्च्छा हुने गर्दछन् ।

**परान्नपानं लिप्सन्तस्ताडयमानाश्च किङ्करै ।**
**काककङ्कबकादीनां भीमानां सदृशाननैः ॥३७॥**

भोकप्यासले पीडित भई केही पाउने आशले ती पापीहरु काग, सारस, बकुल्ला आकारका यमदूततिर हेर्दै केही पाउने आश गरिरहेका हुन्छन् ।

**क्वचित्क्वाथ्यन्ते तैलेन ताडयन्ते मुसलैः क्वचित् ।**
**आयसीषु च वटयन्ते शिलासु च तथा क्वचित् ॥३८॥**

नरकमा पापीमध्ये कसैलाई तेलमा तारिन्छ, कसैलाई मुङ्ग्राले हिर्काइन्छ, कसैलाई आराले चिरिन्छ, त कसैलाई ढुङ्गामा पछारिन्छ ।

**क्वचिद्वान्तमथाश्नन्ति क्वचित्पूयसृक्क्वचित् ।**
**क्वचिद्विष्ठां क्वचिन्मांसं पूयगन्धि सुदारुणम् ॥३९॥**

ती पापीलाई कतै वान्ता, कतै मलमूत्र त कतै रगत खुवाइन्छ । कतै पीप गनाउने मासु आदि खुवाइन्छ ।

**अन्धकारेषु तिष्ठन्ति दारुणेषु तथा क्वचित् ।**
**कृमिभिर्भक्ष्यमाणाश्च वह्नितुण्डैश्च दारुणै ॥४०॥**

कसैलाई घोर अन्कारमा राखिन्छ भने कसैलाई कीरा र डरलाग्दा जनावर भएका ठाउँमा राखी तिनबाट टोकाइन्छ ।

**क्वचिच्छीतेन बाध्यन्ते क्वचिच्चामेध्यमध्यगाः ।**
**परस्परमथाश्नन्ति क्वचित्प्रेताः सुदारुणाः ॥४१॥**



कोही चिसोले कठ्याङ्ग्रिन (जम्न) बाध्य पारिन्छन्, कसैलाई पीपरगतको आहालमा बस्न बाध्य पारिन्छ । भोकप्यासले गर्दा ती दिक्क लाग्दो गरी प्रेतजसरी एकअर्काको मासुरगत खाइरहेका हुन्छन् ।

**क्वचिद्भूतेन ताड्यन्ते लम्बमानास्तथा क्वचित् ।**
**क्वचित्क्षिप्यन्ति वाणौघैरुत्कृत्यन्ते तथा क्वचित् ॥४२॥**

कसैलाई भूतले पिटिरहेका हुन्छन् । कोही रुखमा उल्टोपारेर झुण्ड्याइएका हुन्छन् । कसैलाई बाणैबाण भएका ठाउँमा फाली वा हानी टुक्राटुक्रा पारि रहिएको हुन्छ ।

**कण्टेषु दत्तपादाश्च भुजङ्गाभोगवेष्टिताः ।**
**पीड्याननास्तथा यन्त्रैः कृष्यमाणाश्च जानुभिः ॥४३॥**

कतै काँडामा उनिएका पापीहरुको शरीरलाई सर्प आदिले खाइरहेका हुन्छन् भने कतै तिनको शरीरलाई काठ चिरे जसरी चिरि रहिएको हुन्छ, कतै पेलिइ रहेको हुन्छ भने कतै घुँडा आदि अङ्ग काटिरहिएको हुन्छ ।

**भग्नपृष्ठशिरोग्रीवाः सूचीकण्ठाः सुदारुणाः ।**
**कूटागारप्रमाणैश्च शरीरैर्यातनाक्षमैः ॥४४॥**

तिनको ढाड, टाउको, काँध आदि सबै चकनाचूर भएका हुन्छन् । यातनाले गर्दा तिनका अङ्ग खिइएका हुन्छन् ।

**एवं पातकिनः पापमनुभूय सुदुःखिताः ।**
**तिर्यग्योनौ प्रपद्यन्ते दुःखानि विविधानि च ॥४५॥**

यसरी अनेक किसिमका यातना पाउँदै ती पापी, जनावर भएर फेरी
जन्म लिन पुग्दछन् र फेरी दुख पाउँदछन् ।

**॥ समाप्तमिदं त्रिचत्वारिंशोऽध्यायः ॥४३॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको
त्रिचालीसौं अध्याय पूर्ण भयो ।





## चतुश्चत्वारिंशोऽध्यायः
## (चौवालीसौं अध्याय)

**अथ पापात्मनां नरकेष्वनुभूतदुःखानां तिर्यग्योनयो भवन्ति ॥१॥**

नरकमा दुःख भोग गरेपछि पापीहरु पशु भएर जन्मन्छन् ।

**अतिपातकिनां पर्यायेण सर्वाः स्थावरयोनयः ॥२॥**

अति पापीहरु रुखविरुवा भई जन्मन्छन् ।

**महापातकिनां च कृमियोनयः ॥३॥**

महापापीहरु कीरा भई जन्मन्छन् ।

**अनुपातकिनां पक्षियोनयः ॥४॥**



अनुपापीहरु चरा भई जन्मन्छन् ।

**उपपातकिनां जलजयोनयः ॥५॥**

उपपापीहरु जलचर भई जन्मन्छन् ।

**कृतजातिभ्रंशकराणां जलचरयोनयः ॥६॥**

जाति नष्टकर्ता उभयचर भई जन्मन्छन् ।

**कृतसङ्करीकरणकर्मणां मृगयोनः ॥७॥**

सङ्करीकरण गर्नेहरु मृग भई जन्मन्छन् ।

**कृतापात्रीकरणकर्मणां पशुयोनयः ॥८॥**

अपात्रीकरण गर्नेहरु पशु भई जन्मन्छन् ।

**कृतमलिनीकरणकर्मणां मनुष्येष्वस्पृश्ययोनयः ॥९॥**

मलिनीकरण गर्ने मनुष्यमा अछूत भई जन्मनेछन् ।

**प्रकीर्णेषु प्रकीर्णा हिंस्राः क्रव्यादा भवन्ति ॥१०॥**

प्रकीर्ण गर्नेहरु हिँस्रक बाघ आदि हुन्छन् ।

**अभोज्यान्नाभक्ष्याशी कृमिः ॥११॥**

खान नहुनेको र अखाद्य खाने कीरा हुन्छन् ।

**स्तेनः श्येनः ॥१२॥**

चोरी गर्ने बाज हुन्छ ।



**प्रकृष्टवर्त्मापहारी बिलेशयः ॥१३॥**

बाटो ढुकेर चोर्ने दुलामा बस्ने (सर्प आदि) हुन्छ ।

**आखुर्धान्यहारी ॥१४॥**

अनाज चोर मुसा हुन्छ ।

**हंस काँस्यापहारी ॥१५॥**

काँस चोर्ने हाँस हुन्छ ।

**जलं हृत्वाभिप्लवः ॥१६॥**

जल चोर्ने जलपक्षी हुन्छ ।

**मधु दंशः ॥१७॥**

मह चोर्ने डाँस (जङ्गली झिङ्गो) हुन्छ ।

**पयः काकः ॥१८॥**

दूध चोर कौवा हुन्छ ।

**रसं श्वा ॥१९॥**

रस चोर्ने कुकुर हुन्छ ।

**घृतं नकुलः ॥२०॥**

घिउ चोर्ने न्याहुरीमुसो हुन्छ ।



**मांसं गृध्रः ॥२१॥**

मासु चोर्ने गिद्ध हुन्छ ।

**वसां मद्गुः ॥२२॥**

वोसो चार्ने जलकौवा हुन्छ ।

**तैलं तैलपायिकः ॥२३॥**

तेल चोर्ने साङ्लो कीरा हुन्छ ।

**लवणं चीविवाक् ॥२४॥**

नुन चोर्ने किर्थो (एक थरी कीरा) हुन्छ ।

**दधि बलाका ॥२५॥**

दही चोर्ने बकुल्लो हुन्छ ।

**कोशेयं हृत्वा भवति तित्तिरिः ॥२६॥**

रेशम चोर्ने तित्रो हुन्छ ।

**क्षौमं दर्दुरः ॥२७॥**

घरेलु कपडा चोर्ने भ्यागुतो हुन्छ ।

**कार्पासतान्तवं क्रौञ्च ॥२८॥**

कपासको वस्त्र चोर्ने कन्याङकुरुङ हुन्छ ।



**गोधा गाम् ॥२९॥**

गाई चोर्ने छेपारो हुन्छ ।

**वाल्गुदो गुडम् ॥३०॥**

सखर चोर्ने वाल्गुद (चमेरोको एक जात) हुन्छ ।

**छुच्छुन्दरिर्गन्धान् ॥३१॥**

अत्तर चोर्ने छुचुन्द्रो हुन्छ ।

**पत्रशाकं बर्ही ॥३२॥**

सागपात चोर्ने मुजुर हुन्छ ।

**कृतान्नं सेधा ॥३३॥**

तयारी अन्न चोर्ने (बनेल) वा दुम्सी ? हुन्छ ।

**अकृतान्नं शल्यकः ॥३४॥**

अपरिष्कृत अन्न चोर्ने दुम्सी हुन्छ ।

**अग्निं बकः ॥३५॥**

आगो चोर्ने बकुल्लो हुन्छ ।

**गृहकार्युपस्करम् ॥३६॥**

घरेलु भाँडाकुँडा चोर्ने बारुलो हुन्छ ।

**रक्तवासांसि जीवजीवकः ॥३७॥**

रङ्गाइएका कपडा चोर्ने मयूर हुन्छ ।



**गजं कूर्मः ॥३८॥**

हात्ती चोर कछुवा हुन्छ ।

**अश्वं व्याघ्रः ॥३९॥**

घोडा चोर बाघ हुन्छ ।

**फलं पुष्पं च मर्कटः ॥४०॥**

फलफूल चोर बनमान्छे हुन्छ ।

**ऋक्षः स्त्रियम् ॥४१॥**

स्त्रीचोर भालु हुन्छ ।

**यानमुष्ट्रः ॥४२॥**

बाहन चोर्ने ऊँट हुन्छ ।

**पशून्गृध्रः ॥४३॥**

घरपालुवा पशु चोर गिद्ध हुन्छ ।

**यद्वा तद्वा परद्रव्यमपहृत्य बलान्नरः ।**
**अवश्यं याति तिर्यक्त्वं जग्ध्वा चैवाहुतं हविः ॥४४॥**

जुनकुनै तरिकाले बलपूर्वक अर्काको सम्पत्ति चोर्ने र नचढाई (नहोमी) खाने जनावर हुन्छ ।

**स्त्रियोऽप्येतेन कल्पेन हृत्वा दोषमवाप्नुयुः ।**
**एतेषामेव जन्तूनां भार्यात्वमुपयान्ति ताः ॥४५॥**



यी पाप यदि स्त्रीले गरेको भए पनि उ यिनै बताइएका जन्ममा स्त्री भएर जन्मन्छे ।

**॥ समाप्तमिदं चतुश्चत्वारिंशोऽध्यायः ॥४४॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको
चौवालीसौं अध्याय पूर्ण भयो ।



## पञ्चचत्वारिंशोऽध्यायः
## (पैंतालीसौं अध्याय)

**अथ नरकाभिभूतदुःखानां तिर्यक्त्वमुत्तीर्णानां मनुष्येषु लक्षणानि भवन्ति ॥१॥**

नरक कष्ट र जीवजन्तुको जुनी पछि पापी निम्नानुसारका चिह्न लिएर जन्मन्छ ।

**कुष्ठ्यतिपातकी ॥२॥**

अतिपापी कुष्ठरोगी भएर जन्मन्छ ।

**ब्रह्महा यक्ष्मी ॥३॥**

ब्रह्महत्यारा क्षयरोगी भएर जन्मन्छ ।

**सुरापः श्यावदन्तकः ॥४॥**



मदिरासेवीका दाँत काला हुन्छन् ।

**सुवर्णहारी कुनखी ॥५॥**

सुनचोरका नङ सद्दे हुँदैन ।

**गुरुतल्पगो दुश्चर्मा ॥६॥**

गुरुपत्नी गमन कर्तालाई छालाको रोग  हुन्छ ।

**पूतिनासः पिशुनः ॥७॥**

परनिन्दकको नाकमा रोग हुन्छ (नाकको खराबी) ।

**पूतिवक्त्रः सूचकः ॥८॥**

खराब सूचना दिनेको मुख (श्वास) खराब हुन्छ ।

**धान्यचौरोऽङ्गहीनः ॥९॥**

अनाज चोर्नेको अङ्ग कम हुन्छ ।

**मिश्रचोरोऽतिरिक्ताङ्गः ॥१०॥**

सद्दे लगी खराब छोड्ने (साट्ने) को बढी अङ्ग हुन्छ ।

**अन्नापहारकस्त्वामयावी ॥११॥**

खाना चोर अजीर्णको रोगी हुन्छ ।

**वागपहारको मूकः ॥१२॥**

बोली (शब्द) चोर्ने लाटो हुन्छ ।



**वस्त्रापहारकः श्वित्री ॥१३॥**

कपडा चोर श्वेतकुष्ठी हुन्छ ।

**अश्वापहारकः पङ्गुः ॥१४॥**

घोडा चोर लँगडो हुन्छ ।

**देवब्राह्मणाक्रोशको मूकः ॥१५॥**

देवता र ब्राह्मणलाई गालि गर्ने लठेब्रो (लाटो) हुन्छ ।

**लोलजिह्वो गरदः ॥१६॥**

विष दिने तोते हुन्छ ।

**उन्मत्तोऽग्निदः ॥१७॥**

आगो लगाउने पागल हुन्छ ।

**गुरोः प्रतिकूलोऽपस्मारी ॥१८॥**

गुरु विरुद्ध जाने छारेरोगी हुन्छ ।

**गोघ्नस्त्वन्धः ॥१९॥**

गाई मार्ने  अन्धो हुन्छ ।

**दीपापहारकश्च ॥२०॥**

दीप चोर पनि अन्धो हुन्छ ।



**काणश्च दीपनिर्वापकः ॥२१॥**

दीपबाट जीवन पाल्ने कानो हुन्छ ।

**त्रपुचामरसीसकविक्रयी रजकः ॥२२॥**

टिन, शिसा, चमर बेच्ने धोबी हुन्छ ।

**एकशफविक्रयी मृगव्याधः ॥२३॥**

एकखुरे जनाबर बेच्ने शिकारी हुन्छ ।

**कुण्डाशी भगास्यः ॥२४॥**

कुण्डको अन्न खानेको मुखमा समस्या हुन्छ ।

**घाण्टिकः स्तेनः ॥२५॥**

चोर्ने भाट हुन्छ ।

**वार्धुषिको भ्रामरी ॥२६॥**

ब्याज खाने मिर्गी रोगी हुन्छ ।

**मृष्टाश्येकाकी वातगुल्मी ॥२७॥**

मिष्ठान्न एक्लै खाने वातरोगी हुन्छ ।

**समय भेत्ता खल्वाटः ॥२८॥**

सम्झौता भङ्ग गर्ने तालु खुइले हुन्छ ।



**श्लीपद्यवकीर्णी ॥२९॥**

शुद्धताको किरिया भङ्गगर्नेका गोडा सुनिन्छन् ।

**परवृत्तिघ्नो दरिद्रः ॥३०॥**

अरुको गाँस हर्ने गरिब हुन्छ ।

**परपीडाकरो दीर्घरोगी ॥३१॥**

अरुलाई दुःख दिने दीर्घरोगी हुन्छ ।

**एवं कर्मविशेषेण जायन्ते लक्षणान्विताः ।**
**रोगान्वितास्तथान्धाश्च कुब्जखञ्जैकलोचनाः ॥३२॥**

यसरी नै कर्म विशेषले लक्षण लिएर जन्मन्छन् । रोगी, अन्धो, कुप्रो, लडखडाउने र कानो ।

**वामना बधिरा मूका दुर्बलाश्च तथापरे ।**
**तस्मात्सर्वप्रयत्नेन प्रायश्चित्तं समाचरेत् ॥३३॥**

पुड्को, बहिरो, लाटो, दुर्बल आदि । त्यसैले प्रयासपूर्वक प्रायश्चित गर्नू ।

**॥ समाप्तमिदं पञ्चचत्वारिंशोऽध्यायः ॥४५॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको पैंतालीसौं अध्याय पूर्ण भयो ।



## षड्चत्वारिंशोऽध्यायः
## (छयालीसौँ अध्याय)

**अत कृच्छ्राणि भवन्ति ॥१॥**

अब व्रतका बारेमा बताइन्छ ।

**त्र्यहं नाश्नीयात् ॥२॥**

तीन दिन नखानू ।

**प्रत्यहं च त्रिषवणं स्नानमाचरेत् ॥३॥**

दिनहुँ तीन पटक तीन कालमा नुहाउनू ।

**त्रिः प्रतिस्नानमप्सु मज्जनम् ॥४॥**



प्रत्येक स्नानमा तीन पटक डुबुल्की लगाउनू ।

**मग्नस्त्रिरघमर्षणं जपेत् ॥५॥**

डुबुल्की लगाएपछि तीन पटक अघमर्षण जप्नू ।

**दिवा स्थितस्तिष्ठेत् ॥६॥**

दिनभर उभिनू ।

**रात्रावासीनः ॥७॥**

रातभर बस्नू ।

**कर्मणोऽन्ते पयस्विनीं दद्यात् ॥८॥**

कर्मको अन्तमा लैनू गाई ब्राह्मणलाई दान दिनू ।

**इत्यघमर्षणम् ॥९॥**

यो अघमर्षण व्रत हो ।

**त्र्यहं सायं त्र्यहं प्रातस्त्र्यहमयाचितमश्नीयादेष प्राजापत्यः ॥१०॥**

तीन दिन साँझमा मात्र, तीन दिन बिहान मात्र, तीन दिन नमागी जे भेटिन्छ त्यही र तीन दिन निराहार बसी गरिने यो प्राजापत्य व्रत हो ।

**त्र्यहमुष्णाः पिबेदपस्त्र्यहमुष्णं घृतं त्र्यहमुष्णं पयस्त्र्यहं च नाश्नीयादेष तप्तकृच्छ्रः ॥११॥**

तीन दिन तातो पानी, तीन दिन तातो घीऊ, तीन दिन तातो दूध र तीन दिन निराहार बस्नु तप्तकृच्छ्र व्रत हो ।



**एष एव शीतैः शीतकृच्छ्रः ॥१२॥**

यही विधिले चिसो खाएर व्रत गर्नू शीतकृच्छ्र व्रत हो ।

**कृच्छ्रातिकृच्छ्रः पयसा दिवसैकविंशतिक्षपणम् ॥१३॥**

एक्काईस दिनसम्म दूध मात्र पिएर बस्नु कृच्छ्रातिकृच्छ्र व्रत हो ।

**उदकसक्तूनां मासाभ्यवहारेणोदक कृच्छ्रः ॥१४॥**

एक महिनासम्म पानी र जौको सातु खाएर बस्नु उदक कृच्छ्र व्रत हो ।

**बिसाभ्यवहारेण मूलकृच्छ्रः ॥१५॥**

कमलको रेसा खाएर एक महिना बस्नु मूलकृच्छ्र व्रत हो ।

**बिल्वाभ्यवहारेण श्रीफलकृच्छ्रः ॥१६॥**

बेलफल खाएर एक महिना बस्नु श्रीफलकृच्छ्र हो ।

**पद्माक्षैर्वा ॥१७॥**

अथवा कमलको गेडा खाएर यो व्रत बस्नू ।

**निराहारस्य द्वादशाहेन पराकः ॥१८॥**

बाऱ्ह दिनको निराहारलाई पराक व्रत भनिन्छ ।

**गोमूत्रगोमयक्षीरदधिसर्पिःकुशोदकान्येकदिवसमश्नीयाद्द्वितीयमुपवसेदेतत्सान्तपनम् ॥१९॥**

एक दिन गहुँत, गोबर, गाईको दुध, गाईको दही, गाईको घीऊ, कुशपानी खाएर अर्को दिन निराहार बस्नु सान्तपन व्रत हो ।

**गोमूत्रादिभिः प्रत्यहाभ्यस्तैर्महासान्तपनम् ॥२०॥**

गहुँत आदि  छ कुरा मात्र एक एक दिन खानुलाई महासान्तपन व्रत भनिन्छ ।

**त्र्यहाभ्यस्तैश्चातिसान्तपनम् ॥२१॥**

गहुँत आदि छ कुरा मात्र तीनतीन खानु अति सान्तपन व्रत हो ।

**पिण्याकाचमतक्रोदकसक्तूनामुपवासान्तरितोऽभ्यवहारस्तुलापुरुषः ॥२२॥**

पिना, भातको माड, तर, पानी र सातु एकएक दिन खानु र प्रत्येक दुई दिनमा निराहार बस्नुलाई तुलापुरुष व्रत भनिन्छ ।

**कुशपलाशोडुम्बरपद्मशङ्खपुष्पीवटब्रह्मसुवर्चलापत्त्रैः क्वथितस्याम्भसः प्रत्येकं पानेन पर्णकृच्छ्रः ॥२३॥**

कुश, पलाश, डुम्री, कमल, शङ्खपुष्पी, वर र ब्रह्मसुवर्चला नामक विरुवाको पात एक एक दिन खानुलाई पर्णकृच्छ्र व्रत भनिन्छ ।

**कृच्छ्राण्येतानि सर्वाणि कुर्वीत कृतवापनः ।**
**नित्यं त्रिषवणस्नायी अधःशायी जितेन्द्रियः ॥२४॥**

यी सबै कृच्छ्रहरु पवित्र भई गर्नू, दिनहुँ तीन पटक नुहाउनू र जितेन्द्रिय भई जमिनमा सुत्नू ।

**स्त्रीशूद्रपतितानाञ्च वर्जयेच्चाभिभाषणम् ।**
**पवित्राणि जपेन्नित्यं जुहुयाच्चैव शक्तितः ॥२५॥**

स्त्री, शूद्र र पतितसँग कुराकानी नगर्नू, पवित्र मन्त्र जप्नू र गच्छे अनुसार होम गर्नू ।

**॥ समाप्तमिदं षड्चत्वारिंशोऽध्यायः ॥४६॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको छयालीसौं अध्याय पूर्ण भयो ।



## सप्तचत्वारिंशोऽध्यायः
## (सतचालीसौं अध्याय)

**अथ चान्द्रायणम् ॥१॥**

अब चान्द्रायण व्रतका बारेमा बताउँदछु ।

**ग्रासानविकारानश्नीयात् ॥२॥**

(परेवाका दिन) ठिक मात्रामा एक गाँस खानू ।

**ताँश्चन्द्रकलाभिवृद्धौ वर्धयेद्धानौ ह्रासयेदमावास्यायां नाश्नीयादेष चान्द्रायणो यवमध्यः ॥३॥**

त्यसपछि दिनहुँ एकएक गाँस बढाउँदै खानू । पूर्णिमा पछि पुनः एकएक गाँस घटाउँदै खानू र अन्तिम दिन पूरै निराहार बस्नू यो यवमध्य (जौ आकारको वा शैलीको) चान्द्रायण व्रत हो ।



**पिपीलिकामध्यो वा ॥४॥**

यस्तै पिपीलिका (कमिला) मध्य चान्द्रायण व्रत पनि हुन्छ ।

**यस्यामावास्या मध्ये भवति स पिपीलिकामध्यः ॥५॥**

औंसी बीचमा भए पिपीलिकामध्य चान्द्रायण व्रत हुन्छ ।

**यस्य पौर्णमासी स यवमध्यः ॥६॥**

पूर्णिमा बीचमा भए यवमध्य चान्द्रायण व्रत हुन्छ ।

**अष्टौ ग्रासान्प्रतिदिवसं मासमश्नीयात्स यतिचान्द्रायणः ॥७॥**

एक महिनासम्म दिनहुँ आठ गाँस खान्छ भने त्यसलाई यति चान्द्रायण व्रत भनिन्छ ।

**सायं प्रातश्चतुरश्चतुरः स शिशुचान्द्रायणः ॥८॥**

बिहान चार र बेलुकी चार गाँस एक महिनासम्म खाई व्रत बसे
त्यो शिशु चान्द्रायण व्रत हुन्छ ।

**यथाकथंचित्षष्ट्योनां त्रिशतीं मासेनाश्नीयात्स सामान्यचान्द्रायणः ॥९॥**

जसरीतसरी एक महिनामा जम्मा दुई सय चालिस गाँस
खानुलाई सामान्य चान्द्रायण भनिन्छ ।

**व्रतमेतत्पुरा भूमिं कृत्वा सप्तर्षयोऽमलाः ।**
**प्राप्तवन्तः परं स्थानं ब्रह्मा रुद्रस्तथैव च ॥१०॥**

हे पृथ्वी ! यी व्रत पूरा गरी प्राचीन कालमा निर्मल सप्तर्षिहरु,
ब्रह्मा र रुद्रले परमलोक पाएका थिए ।

**॥ समाप्तमिदं सप्तचत्वारिंशोऽध्यायः ॥४७॥**





मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको
सतचालीसौं अध्याय पूर्ण भयो ।



## अष्टचत्वारिंशोऽध्यायः
## (अठचालीसौं अध्याय)

**अथ कर्मभिरात्मकृतैर्गुरुमात्मानं मन्येतात्मार्थे प्रसृतियावकं श्रपयेत्॥१॥**

आफूबाट गरिएका कर्मका कारण आफू अशुद्ध छु भन्ने कुरा मनले भन्दछ भने आत्मा शुद्धिका लागि एक पसर जौको खिचडी वा हलुवा वा खोले बनाएर खानू ।

**न ततोऽग्नौ जुहुयात्॥२॥**

यसपछि नित्य होम नगर्नू ।

**न चात्र बलिकर्म॥३॥**

यसपछि बलिवैश्वदेव पनि नगर्नू ।

**अश्रृतं श्रप्यमाणं श्रृतं चाभिमन्त्रयेत्॥४॥**

अगेनामा पकाउन बसाल्नुभन्दा पहिले, पकाइरहँदा र पकाइ सकेपछि जौको खिचडीलाई मन्त्रले शुद्ध बनाउनू ।

**श्रप्यमाणे रक्षां कुर्यात्॥५॥**

पकाउँदा मन्त्र पढ्दै राम्ररी हेर्नू वा चलाउनू ।

**ब्रह्मा देवानां पदवीः कवीनां ऋषिर्विप्राणां महिषो मृगाणां श्येनो गृध्राणां स्वधितिर्वनानां सोमः मत्चिमत्येति रेभन्निति दर्भान्बध्नाति॥६॥**

“ब्रह्मा देवानां...रेभन्” यो मन्त्र पढ्दै पकाउने भाँडाको घाँटीमा कुश बाँध्नू ।

**श्रृतं चतमश्नीयात्पात्रे निषिच्य॥७॥**

पाकिसकेपछि अर्को भाँडामा खानका लागि खन्याउनू वा पस्कनू ।

**ये देवा मनोजाता मनोजुष सुदक्षा दक्षपितरस्ते न पान्तु ते नोऽवन्तु तेभ्यो नमस्तेभ्यः स्वाहेत्यात्मनि जुहुयात् ॥८॥**

अनि "यो देवा....स्वाहा" मन्त्र पढी त्यो खिचडीको केही अंश अग्निमा होम गर्नू ।

**अथाचान्तो नाभिमालभेत ॥९॥**

त्यसपछि आचमन गरी नाइटो छुँदै यो तलको मन्त्र पढ्नू ।

**स्नाताः प्रीता भवत यूयमापोऽस्माकमुदरे यवाः ता अस्मभ्यमनमीवा अयक्ष्मा अनागसः सन्तु देवीरमृता ऋतावृध इति ॥१०॥**

नाइटो छोई "स्नात्वा....ऋतावृध" मन्त्र पढ्नू ।

**त्रिरात्रं मेधार्थी ॥११॥**



तेजबुद्धि चाहनेले यो कार्य (व्रत) तीन रात गर्नू ।

**षड्रात्रं पापकृत् ॥१२॥**

पाप गरिएको भए छ रात गर्नू ।

**सप्तरात्रं पीत्वा महापातकिनामन्यतमं पुनाति ॥१३॥**

सात रात यो व्रत गर्नाले महापापीहरू पनि शुद्ध हुन्छन् ।

**द्वादशरात्रेण पूर्वपुरुषकृतमपि पापं निर्दहति ॥१४॥**

बाह्र रात यसरी व्रत गर्नाले पुर्खाले गरेको पाप पनि नष्ट हुन्छ ।

**मासं पित्वा सर्वपापानि ॥१५॥**

एक महिनासम्म यसरी जौको हलुवा वा खोले खाएर व्रत बस्नाले सबै पाप नष्ट हुन्छन् ।

**गोनिहारमुक्तानां यवानामेकत्रिंशति रात्रञ्च ॥१६॥**

गोमूत्र वा गोबरसँग मिसाएर एकतीस रात जौ खाएपनि सबै पाप नष्ट हुन्छ ।

**यवोऽसि धान्यराजोऽसि वारुणो मधुसंयुतः ।**
**निर्णोदः सर्वपापानां पवित्रमृषिभिः स्मृतम् ॥१७॥**

हे जौ ! हे अन्नका राजा ! हजुरमा महमिश्रित जल मिसाइ पिउनाले सबै पाप
नष्ट भई मानिस पवित्र हुन्छ भनेर ऋषिहरूले बताएका छन् ।

**घृतमेव मधु यवा आपो वा अमृतं यवाः ।**
**सर्वं पुनीत मे पापं यन्मे किञ्चन दुष्कृतम् ॥१८॥**

हे जौ ! तिमी घिउ हौ, मह हौ, जल हौ र अमृत हौ । मबाट भए, गरेका सबै
पापलाई तिमी नष्ट गर र मलाई शुद्ध बनाऊ ।



**वाचा कृतं कर्मकृतं मनसा दुर्विचिन्तितम् ।**
**अलक्ष्मीं कालकर्णीञ्च नाशयध्वं यवा मम ॥१९॥**

हे जौ ! वचन, कर्म र मनले गरिएका अलच्छिन र दुर्भाग्यलाई नाश गर ।

**श्वसूकरावलीढञ्च उच्छिष्टोपहतञ्च यत् ।**
**मातापित्रोरशुश्रूणां तन्पुनीध्वं यवा मम ॥२०॥**

हे जौ ! कुकुर, सुँगुर आदिले चाटेको वा अशुद्धले छोएको खाना खाएको एवं
अनि मातापिताको स्याहारसुसार नगरेको मेरो पाप हटाउ ।

**गणान्नं गणिकान्नञ्च शूद्रान्नं श्राद्धसूतकम् ।**
**चौरस्यान्नं नवश्राद्धं पुनीध्वञ्च यवा मम ॥२१॥**

हे जौ ! समूहको, वेश्याको, शूद्रको, श्राद्धको, सूतकको, चोरको र नवश्राद्धको अन्न

खाएर अपवित्र भएको मेरो शरीरलाई पवित्र बनाऊ ।

**बालधूर्तमधर्मञ्च राजद्वारकृतञ्च यत् ।**
**सुवर्णस्तैन्यमव्रात्यमयाज्यस्य च याजनम् ॥**
**ब्रह्मणानां परीवादं पुनीध्वञ्च यवा मम ॥२२॥**

हे जौ ! बालक र मूर्खप्रति गरिएका, राजाज्ञा पालन गर्दा वा नोकरी गर्दा, सुन चोर्नाले, व्रत-उपवास नगर्नाले, गर्न नहुनेको यज्ञ गराउनाले र ब्राह्मणसँग विवाद गर्नाले मलाई जानअनजानमा लागेका सबै पाप हटाई मलाई शुद्ध बनाऊ । यति भन्दै जौको हलुवा खानू ।

**॥ समाप्तमिदमष्टचत्वारिंशोऽध्यायः ॥४८॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको
अठचालीसौं अध्याय पूर्ण भयो ।



## एकोनपञ्चाशत्तमोऽध्यायः
## (उनन्चासौं अध्याय)

**मार्गशीर्षशुक्लैकादश्यामुपोषितो द्वादश्यां भगवन्तं वासुदेवमर्चयेत् ॥१॥**

मंसिर शुक्ल एकादशीका दिन उपवास बसी द्वादशीका दिन भगवान् श्रीविष्णुको पूजा गर्नू ।

**पुष्पधूपानुलेपनदीपनैवेद्यैर्ब्राह्मणतर्पणैश्च ॥२॥**

विष्णुलाई फूल, धूप, चन्दन, दीप एवं नैवेद्य अर्पण गरी ब्राह्मणलाई भोजन गराउनू ।

**व्रतमेतत् सम्वत्सरं कृत्वा पापेभ्य पूतो भवति ॥३॥**

मंसिर वा कार्तिक महिनादेखि शुरु गरी एक वर्षसम्म यसरी व्रत बसे
सबै पापबाट मानिस शुद्ध हुन्छ ।

**यावज्जीवं कृत्वा श्वेतद्वीपमाप्नोति ॥४॥**

जीवनभर यसरी व्रत बसे मरणोपरान्त श्वेतद्वीपमा गएर बस्न पाउँदछ ।

**उभयपक्षद्वादशीष्वेवं सम्वत्सरेण स्वर्गलोकं प्राप्नोति ॥५॥**

दुवै पक्षको द्वादशीमा वर्षभर यो व्रत बसे स्वर्ग पाउँदछ ।

**यावज्जीवं कृत्वा विष्णुलोकम् ॥६॥**

जीवनभर बसे विष्णुलोक पाउँदछ ।

**एवमेव पञ्चदशीष्वपि ॥७॥**

यस्तै फल यसरी नै बसिएको पूर्णिमाको व्रतबाट पनि पाइन्छ ।

**ब्रह्मभूतममावस्यां पौर्णमास्यां तथैव त ।**

**योगभूतं परिचरन् केशवं महदाप्नुयात् ॥८॥**

औँसीमा ब्रह्म र पूर्णिमामा योगरुपी हुने विष्णुले यी दिन
व्रत बस्नेलाई चाहेको वरदान दिनुहुन्छ ।

**दृश्येते सहितौ यस्यां दिवि चन्द्रबृहस्पति ।
पौर्णमासी तु महती प्रोक्ता सम्वत्सरे तु सा ॥९॥**

कुनै वर्षको कुनै पूर्णिमाका दिन चन्द्रमा र बृहस्पति आकाशमा
सँगै देखिए भने त्यो वर्षको पूर्णिमालाई महा-पूर्णिमा भनिन्छ ।

**तस्यां दानोपवासाद्यमक्षयं परिकीर्तितम् ।
तथैव द्वादशी शुक्ला या स्याच्छ्रवणसंयुता ॥१०॥**

त्यो दिइने दान र बसिने व्रत कहिल्यै नाश हुँदैन । यस्तै फल शुक्लपक्षको द्वादशीका
दिन चन्द्रमा र श्रवण नक्षत्र सँगै देखिए भने पनि हुन्छ ।



**॥ समाप्तमिदमेकोनपञ्चाशत्तमोऽध्यायः ॥४९॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको उनन्चासौँ अध्याय पूर्ण भयो ।



## पञ्चाशत्तमोऽध्यायः
## (पचासौं अध्याय)

**वने पर्णकुटीं कृत्वा वसेत्॥१॥**

वनमा घाँसपातको कुटी (छाप्रो) बनाई बस्नू ।

**त्रिषवणं स्नायात्॥२॥**

हरेक दिन तीन वटै सन्ध्यामा नुहाउनू ।

**स्वकर्म चाचक्षाणो ग्रामे ग्रामे भैक्षमाचरेत्॥३॥**

गाउँगाउँ डुली भिक्षा मागेर लेराउनू ।

**तृणशायी च स्यात्॥४॥**



घाँसमाथि सुत्नू ।

**एतन्महाव्रतम्॥५॥**

यसलाई महाव्रत भनिन्छ ।

**ब्राह्मणं हत्वा द्वादशसम्वत्सरं कुर्यात्॥६॥**

ब्रह्महत्याराले यो व्रत बाह्र वर्ष बस्नू ।

**यागस्थं क्षत्रियं वैश्यं वा॥७॥**

कुनै धार्मिक अनुष्ठानमा संलग्न क्षत्रिय वा वैश्य मार्नेले पनि बाह्र वर्ष यो व्रत बस्नू ।

**गुर्विणीं रजस्वलां वा॥८॥**

गर्भिणी र रजस्वला स्त्रीको हत्याराले पनि यसै गर्नू ।

**अत्रिगोत्रां वा नारीम् ॥९॥**

कुनै अपवित्रता हटाउन स्नान गरेकी स्त्रीको हत्या गर्नेले पनि यसै गर्नू ।

**मित्रं वा ॥१०॥**

मित्रघातीले पनि यसै गर्नू ।

**नृपतिवधे महाव्रतमेव द्विगुणं कुर्यात् ॥११॥**

राजा मार्नेले यसको दोब्बर व्रत बस्नू ।

**पादोनं क्षत्त्रियवधे ॥१२॥**

अन्य क्षत्रियको हत्यामा यसको एक चौथाई घटाएर (नौ वर्ष) व्रत बस्नू ।

**अर्धं वैश्यवधे ॥१३॥**

वैश्यको हत्यामा आधा (छ वर्ष) महाव्रत बस्नू ।

**तदर्धं शूद्रवधे ॥१४॥**

शूद्रको हत्यामा त्यसको पनि आधा (छ वर्ष) बस्नू ।

**सर्वेषु शवशिरोध्वजी स्यात् ॥१५॥**

यी सबै खाले व्रतमा खोपडीलाई झण्डा बोकेझैँ बोकेर हिँड्नू ।

**मासमेकं कृतवापनो गवानुगमनं कुर्यात् ॥१६॥**

एक महिनासम्म कपाल खौरी गाईगोठालो हुनू ।

**आसीनास्वासीत ॥१७॥**

गाई बस्दा बस्नू ।

**स्थितासु स्थितश्च स्यात् ॥१८॥**

ती उभिँदा उभिइरहनू ।

**सन्नां चोद्धरेत् ॥१९॥**

कुनै अप्ठ्यारोमा पर्दा गाईको उद्धार गर्नू ।

**भयेभ्यश्च रक्षेत् ॥२०॥**

डरबाट तिनलाई रक्षा गर्नू ।



**तासां शस्तादित्राणमकृत्वा नात्मनः कुर्यात् ॥२१॥**

तिनलाई चिसोतातो आदिबाट नजोगाई आफू जोगिन नखोज्नू ।

**गोमूत्रेण स्नायात् ॥२२॥**

गहुँतले नुहाउनू ।

**गोरसैश्च वर्तेत ॥२३॥**

पञ्चगव्यले आफूलाई बचाउनू ।

**एतद्गोव्रतं गोवधे कुर्यात् ॥२४॥**

यो गोव्रत गोहत्यामा बस्नू ।

**गजं हत्वा पञ्च नीलान्वृषभान्दद्यात् ॥२५॥**

हात्ती मारे पाँचवटा नीला साँढे दान गर्नू ।

**तुरङ्गं वासः ॥२६॥**

घोडा मार्नेले वस्त्र दान गर्नू ।

**एकहायनमनड्वाहं खरवधे ॥२७॥**

गधा मारे एक वर्षको साँढे दान गर्नू ।

**मेषाजवधे च ॥२८॥**

भेडो वा बोको मारे पनि यसै गर्नू ।

**सुवर्णकृष्णलमुष्ट्रवधे ॥२९॥**

उँट मारे एक कृष्णल सुन दान गर्नू ।

**श्वानं हत्वा त्रिरात्रमुपवसेत् ॥३०॥**

कुकुर मारे तीन रात उपवास बस्नू ।

**हत्वा मूषकमार्जारनकुलमण्डूकडुण्डुभाजगराणामन्यतमुपोषित कृसरान्नं भोजयित्वा लोहदण्डं दक्षिणां दद्यात् ॥३१॥**

मुसो, बिरालो, न्याउरीमुसो, भ्यागुतो, विष नहुने पानीसर्प, अजिङ्गर आदि मारे एक रात उपवास बसी ब्राह्मणलाई दूध-तिल-चामल पकाएर खुवाउनू र फलामको लौरो दान गर्नू ।

**गोधोलूककाकमत्स्यवधे त्रिरात्रमुपवसेत् ॥३२॥**

गोहोरो, उल्लू, काग, माछा मारे तीन रात उपवास बस्नू ।

**हंसबलाकाबकमद्गुवानरश्येनभासचक्रवाकानामन्यतमं हत्वा ब्राह्मणाय गां दद्यात्॥३३॥**

हाँस, बकुल्ला, सारस, हुटिट्याउँ, बाँदर, चिल, गिद्ध, राजहाँस आदि मारे ब्राह्मणलाई गोदान गर्नू ।

**सर्पं हत्वाभ्रीं कार्ष्णायसीम्॥३४॥**

सर्प मारे फलामको (कृषिकर्ममा प्रयोग हुने कोदाली आदि औजार) पाता दान गर्नू ।

**षण्ढं हत्वा पलालभारकम्॥३५॥**

खसी पारेका जनावर मारे एक भारी पराल दान गर्नू ।

**वराहं हत्वा घृतकुम्भम्॥३६॥**



बँदेल मारे एक भाँडो घिउ दान गर्नू ।

**तित्तिरं तिलद्रोणम्॥३७॥**

तित्रो मारे एक द्रोण (पसर?) तिल दान गर्नू ।

**शुकं द्विहायनं वत्सम्॥३८॥**

सुँगा मारे दुई वर्षको गाईको बाच्छो दान गर्नू ।

**क्रौञ्चं त्रिहायणम्॥३९॥**

कर्‍याङकुरुङ मारे तीन वर्षको बाच्छो दान गर्नू ।

**क्रव्यादमृगवधे पयस्विनीं गां दद्यात्॥४०॥**

शाकाहारी जङ्गली जनावर मारे लैनू गाई दान गर्नू ।

**अक्रव्यादमृगवधे वत्सतरीम् ॥४१॥**

मांसाहारी जङ्गली जनावर मारे बाच्छी दान गर्नू ।

**अनुक्तमृगवधे त्रिरात्रं पयसावर्तेत ॥४२॥**

अन्य नाम थाहा नभएका वा नबताइएका जनावर मारे तीन रात दूध मात्र पिउनू ।

**पक्षिवधे नक्ताशी स्यात् ॥४३॥**

अन्य नाम थाहा नभएका वा नबताइएका चरा मारे त्यो दिन रातमा मात्र खानू ।

**रूप्यमाषं वा दद्यात् ॥४४॥**



अथवा एक माषा चाँदी दान गर्नू ।

**हत्वा जलचरमुपवसेत् ॥४५॥**

जलचर जन्तु मारे एक दिनरात उपवास बस्नू ।

**अस्थन्वतान्तु सत्त्वानां सहस्रस्य प्रमापणे ।**
**पूर्णे चानस्यनस्थ्नान्तु शूद्रहत्याव्रतञ्चरेत् ॥४६॥**

हजारौं साना अस्थि हुने जनावर र एक गोरुगाडा हाड नहुने जीव
मार्दा शूद्रहत्या गर्दाको व्रत गर्नू ।

**किञ्चिदेव तु विप्राय दद्यादस्थिमतां वधे ।**
**अनस्थ्नां चैव हिंसायां प्राणायमेण शुध्यति ॥४७॥**

अस्थि भएका जनावर मार्दा हरेक जनावरका लागि ब्राह्मणलाई केही दान गर्नू ।
अस्थि नभएका जीव मार्दा भने प्राणायामले शुद्ध हुन्छ ।

**फलदानान्तु वृक्षाणां छेदने जप्यमृक्शतम् ।**
**गुल्मवल्लीलतानाञ्च पुष्पितानाञ्च वीरुधाम् ॥४८॥**

फलेका वृक्ष, पोथ्रा, लहरा र फुलेका वनस्पति काटे सय पटक गायत्री जप्नू ।

**अन्नाद्यजानां सत्त्वानां रसजानाञ्च सर्वशः ।**
**फलपुष्पोद्भवानां च घृतप्राशो विशोधनम् ॥४९॥**

अन्न, रस, पानी, फल र फूलमा हुने जीव मारेकोमा घिउ खानू ।

**कृष्टजानामौषधीनां जातानाञ्च स्वयं वने ।**
**वृथालम्भे तु गच्छेद्गां दिनमेकं पयोव्रतः ॥५०॥**

कृषिकार्य वा दैनिक अत्यावश्यक उपभोगका लागि जडिबूटी काटे, झारपात फाँडे वा गोडे एक दिन दूध मात्र पिएर बस्नू ।



**॥ समाप्तमिदं पञ्चाशत्तमोऽध्यायः ॥५०॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको पचासौँ अध्याय पूर्ण भयो ।



# एकपञ्चाशत्तमोऽध्यायः
# (एकाउन्नौ अध्याय)

**सुरापः सर्वकर्मवर्जितः कणान्वर्षमश्नीयात् ॥१॥**

सुरासेवीले सबै कर्म त्यागी वर्षदिनसम्म थोरै खानू वा वनजीरा खानू ।

**मलानां मद्यानाञ्चान्यतमस्य प्राशने चान्द्रायणं कुर्यात् ॥२॥**

शरीरजन्य बाह्य मल जानीजानी खानेले चान्द्रायण व्रत गर्नू ।

**लशुनपलाण्डुगृञ्जनैतद्गन्धिविड्वराहग्रामकुक्कुटवानरगोमांसभक्षणे च ॥३॥**

जानीजानी लसुन, प्याज, रातो लसुन र यस्तै गन्ध आउने, सुँगुर,
कुखुरा, बाँदर र गोमांस खाए पनि चान्द्रायण व्रत गर्नू ।

**सर्वेष्वेतेषु द्विजानां प्रायश्चित्तान्ते भूयः संस्कारं कुर्यात् ॥४॥**

यी सबैमा द्विजले प्रायश्चित पछि पुनः संस्कार गरोस् ।

**वपनमेखलादण्डभैक्षाचर्याव्रतानि पुनःसंस्कारकर्मणि वर्जनीयानि ॥५॥**

यस प्रकारको पुनः संस्कारमा मुण्डन, मेखला, दण्ड र भिक्षाचरणका व्रत नगर्नू ।

**शशकशल्यकगोधाखड्गकूर्मवर्जं पञ्चनखमांसाशने सप्तरात्रमुपवसेत् ॥६॥**

कछुवा, दुम्सी, गोहोरो, गैंडा र कछुवा बाहेकका पाँचनङ्ग्रे
जीवको मासु खाए सात रात उपवास बस्नू ।

**गणगणिकास्तेनगायन्नानि भुक्त्वा सप्तरात्रं पयसा वर्तेत ॥७॥**

समूहको, वेश्याको, चोरीको र गायकको अन्न खाए सात दिनरात दूध पिएर बिताउनू ।

**तक्षकान्नं चर्मकर्तुश्च ॥८॥**

सिकर्मी र चर्मकारको अन्न खाए पनि यसै गर्नू ।

**वार्धुषिककदर्यदीक्षितबन्धनिकाभिशस्तषण्ढानाञ्च ॥९॥**

ब्याजखोर, कञ्जुस, कुनै धार्मिक कार्यमा वरण गरिएकाको, जेलर तथा
अभियुक्त र नपुंसकको अन्न खाए पनि यसै गर्नू ।

**पुंश्चलीदाम्भिकचिकित्सकलुब्धकक्रूरोग्रोच्छिष्टभोजिनाञ्च ॥१०॥**

बाइफाले, पाखण्डी, चिकित्सक, शिकारी, क्रूर र जूठो खानेको अन्न खाए पनि यसै गर्नू ।

**अवीरास्त्रीसुवर्णकारसपत्नपतितानाञ्च ॥११॥**

पुत्र र पति नभएकी स्त्री, सुवर्णकार, शत्रु र पतितको अन्न खाए पनि यसै गर्नू ।



**पिशुनानृतवादिक्षतधर्मात्मरसविक्रयिणाञ्च ॥१२॥**

कानफुक्ने, भूटो बोल्ने, धर्म च्युत भनी कहलिएको,
आफूलाई बेच्ने र रस बेच्नेको अन्न खाए पनि यसै गर्नू ।

**शैलूषतन्तुवायकृतघ्नरजकानाञ्च ॥१३॥**

नर्तकी, बुन्ने काम गर्ने, कृतघ्न र धोबीको अन्न खाए पनि यसै गर्नू ।

**कर्मकारनिषादरङ्गावतारिवेणशस्त्रविक्रयिणाञ्च ॥१४॥**

लोहार, निषाद, रङ्गकर्मी, बाँसकर्मी र हतियार बिक्रयीको अन्न खाए पनि यसै गर्नू ।

**श्वजीविशौण्डिकतैलिकचैलनिर्णेजकानाञ्च ॥१५॥**

कुकुरजीवि, मदिराजीवि, तेली र कपडा धुनेको अन्न खाए पनि यसै गर्नू ।

**रजस्वलासहोपपतिवेश्मनाश्च ॥१६॥**

रजस्वलाको तथा घरमै नाठो पाल्नेको अन्न खाए पनि यसै गर्नू ।

**भ्रूणघ्नावेक्षितमुदक्यासंस्पृष्टं पतत्रिणावलीढं शुना संस्पृष्टं गवन घ्रातञ्च ॥१७॥**

भ्रूणहत्याराले देखेको, सुत्केरीले छोएको, चराले ठुँगेको, कुकुरले छोएको
तथा गाईले सुँघेको अन्न खाए पनि यसै गर्नू ।

**कामतः पदा स्पृष्टमवक्षुतम् ॥१८॥**

जानीजानी गोडाले छोइएको र आँखा लागेको अन्न खाए पनि यसै गर्नू ।

**मत्तक्रुद्धातुराणाञ्च ॥१९॥**

मातेको, रिसाएको र रोगीको अन्न खाए पनि यसै गर्नू ।

**अनर्चितं वृथामांसञ्च ॥२०॥**

श्रद्धा नगरी दिइएको र आफ्नो मासु बढाउन त्यत्तिकै पकाएको मासु खाए पनि यसै गर्नू ।

**पाठीनरोहितराजीवसिंहतुण्डशकुलवर्जं सर्वमत्स्यमांसाशने त्रिरात्रमुपवसेत् ॥२१॥**

पाठीन, रोहित, राजीव, सिंहतुण्ड र शकुल माछालाई छोडी
अरु सबै खाले माछा खानेले तीन रात उपवास बस्नू ।

**सर्वजलजमांसाशने च ॥२२॥**

सबै अन्य जलप्राणीको मासु खाएमा पनि यसै गर्नू ।

**अपः सुराभाण्डस्थाः पीत्वा सप्तरात्रं शङ्खपुष्पीश्रृतं पयः पिबेत् ॥२३॥**

सुराको भाँडोमा पानी पिए सात रातसम्म शङ्खपुष्पी (जडिबुटी विशेष) उमालेको दूध पिउनू ।

**मद्यभाण्डस्थाश्च पञ्चरात्रम् ॥२४॥**

मद्य राखेको भाँडामा पानी पिए छ रात यस्तो पानी खानू ।

**सोमपः सुरापस्याघ्राय गन्धमुदकमग्नस्त्रिरघमर्षणं जप्त्वा घृतप्राशनमाचरेत् ॥२५॥**

सोमरस त्याग्नेले अनायासै सुरासेवीको सासलाई सुँघे पानीमा डुबुल्की मार्नू
र तीन पटक अघमर्षण जपी घिउ खानू ।

**खरोष्ट्रकाकमांसाशने चान्द्रायणं कुर्यात् ॥२६॥**

गधा, ऊँट, कागको मासु खाए चान्द्रायण व्रत गर्नू ।

**प्राश्याज्ञातं सूनास्थं शुष्कमांसञ्च ॥२७॥**



थाहा नपाएका पशुपंक्षीको, वधशालाको (आलो) वा सुकेको मासु खाएमा पनि यसै गर्नू ।

**क्रव्यादमृगपक्षिमांसाशने तप्तकृच्छ्रम् ॥२८॥**

मांसाहारी पशुपंक्षीको मासु खाए तप्तकृच्छ्र व्रत गर्नू ।

**कलविङ्कप्लवचक्रवाकहंसरज्जुदालसारसदात्यूहशुकसारिका-
बलाकाबककोकिलखञ्जरीटाशने त्रिरात्रमुपवसेत् ॥२९॥**

चाँचर, एक थरी जलपक्षी, चखेवा, हाँस, जङ्गली कुखुरो, सारस, काफल पाक्यो चरा, सुँगा,
सारौं, पोथी बकुल्ला, बकुल्लो, कोइली र टिकटिकेको मासु खानेले तीन रात उपवास बस्नू ।

**एकशफोभयदन्ताशने च ॥३०॥**

(घोडा आदि) एक खुरे र दुबै बङ्गारामा दाँत हुनेको मासु खाए पनि यसै गर्नू ।

**तित्तिरिकपिञ्जललावकवर्तिकामयूरवर्जं सर्वपक्षिमांसाशने चाहोरात्रम् ॥३१॥**

तित्रो, काकाकुल, लावक (लाभे ?), वर्तिक (बट्टाई ?), मयूर बाहेकका अन्य सबै खाले चराको मासु खाए पनि एक रातदिन व्रत बस्नू ।

**कीटाशने दिनमेकं ब्रह्मसुवर्चलां पिबेत् ॥३२॥**

कीरा खाए एक दिन ब्रह्मसुवर्चला पिउनू ।

**शुनां मांसाशने च ॥३३॥**

कुकुरको मासु खाए पनि यसै गर्नू ।

**छत्राककवकाशने सान्तपनम् ॥३४॥**

छत्राक र कवक नामका च्याउ खाए सान्तपन व्रत गर्नू ।



**यवगोधूमपयोविकारं स्नेहाक्तं शुक्तं खाण्डवञ्च वर्जयित्वा पर्युषितं तत्प्राश्योपवसेत् ॥३५॥**

जौ, गहुँ, दुग्धविकार र चिल्लोले बनाइएका बाहेकका बासी कुरा खाए (एक दिन) उपवास बस्नू ।

**व्रश्चनामेध्यप्रभवाँल्लोहिताँश्च वृक्षनिर्यासान् ॥३६॥**

रुखबाट बहने रस, खोटो र रातो चोप खाए पनि यसै गर्नू ।

**शालूकवृथाकृसरसंयावपायसापूपशष्कुलीदेवान्नानि हवींषि च ॥३७॥**

कमलको जरा, तिल र चामलको भात, घिउ-दूध-शखर र गहुँ मिसाएर बनाएको परिकार, खीर, मालपुवा र तिल-चामल-माषले बनेको परिकार तथा देवतालाई चढाउने अनाज देवतालाई नचढाई खाए पनि यसै गर्नू ।

**गोऽजामहिषीवर्जं सर्वपयांसि च ॥३८॥**

गाई, बाख्रा र भैंसी बाहेकका सबै जनावरको दूध खाए पनि यसै गर्नू ।

**अनिर्दशाहानि तान्यपि ॥३९॥**

ती जनावरको बिहाएको दश दिन भित्रको दूध खाए पनि यसै गर्नू ।

**स्यन्दिनीसन्धिनीविवत्साक्षीरञ्च ॥४०॥**

आफैं दूध बहने, भर्खर बालि लागेकी र हतुवा गाईको दूध खाए पनि यसै गर्नू ।

**अमेध्यभुजश्च ॥४१॥**

मल आदि खाने गाईको दूध खाए पनि यसै गर्नू ।

**दधिवर्जं केवलानि च शुक्तानि ॥४२॥**

दही बाहेकका अमिल्चिएका पदार्थ खाएमा पनि यसै गर्नू ।

**ब्रह्मचर्याश्रमी श्राद्धभोजने त्रिरात्रमुपवसेत् ॥४३॥**

ब्रह्मचर्याश्रमीले कसैका श्राद्धमा गई खाए तीन रात उपवास बस्नू ।

**दिनमेकं चोदके वसेत् ॥४४॥**

पानी पिए एक दिन उपवास बस्नू ।

**मधुमांसाशने प्राजापत्यम् ॥४५॥**

मह वा मासु खाए प्राजापत्य व्रत गर्नू ।

**विडालकाकनकुलाखूच्छिष्टभक्षणे ब्रह्मसुवर्चलां पिबेत् ॥४६॥**

बिरालो, काग, न्याहुरीमुसो र मुसोको जुठो खाए ब्रह्मसुवर्चला पिउनू ।

**श्वोच्छिष्टाशने दिनमेकमुपोषितः पञ्चगव्यं पिबेत् ॥४७॥**

कुकुरको जुठो खाए एक दिन उपवास बसी पञ्चगव्य पिउनू ।

**पञ्चनखविण्मूत्राशने सप्तरात्रम् ॥४८॥**

पाँचनङ्ग्रे जनावरको मलमूत्र खाए सात रात उपवास बसी पञ्चगव्य पिउनू ।

**आमश्राद्धाशने त्रिरात्रं पयसा वर्तेत ॥४९॥**

साधारण श्राद्ध खाए तीन रात दूध खाएर व्रत बस्नू ।

**ब्राह्मणः शूद्रोच्छिष्टाशने सप्तरात्रम् ॥५०॥**



ब्राह्मणले शुद्रको जुठो खाए सात रात व्रत बस्नू ।

**वैश्योच्छिष्टाशने पञ्चरात्रम् ॥५१॥**

वैश्यको जुठो खाए पाँच रात व्रत बस्नू ।

**राजन्योच्छिष्टाशने त्रिरात्रम् ॥५२॥**

क्षेत्रीको जुठो खाए तीन रात व्रत बस्नू ।

**ब्राह्मणोच्छिष्टाशने त्वेकाहम् ॥५३॥**

ब्राह्मणको जुठो खाए एक दिन व्रत बस्नू ।

**राजन्यः शुद्रोच्छिष्टाशायी पञ्चरात्रम् ॥५४॥**

क्षेत्रीले शूद्रको जुठो खाए पाँच रात व्रत बस्नू ।

**वैश्योच्छिष्टाशी त्रिरात्रम् ॥५५॥**

वैश्यको खाए तीन रात व्रत बस्नू ।

**वैश्यः शूद्रोच्छिष्टाशी च ॥५६॥**

वैश्यले शुद्रको जुठो खाए पनि तीन रात व्रत बस्नू ।

**चाण्डालान्नं भुक्त्वा त्रिरात्रमुपवसेत् ॥५७॥**

चाण्डालको अन्न खाए तीन रात उपवास बस्नू ।

**सिद्धं भुक्त्वा पराकः ॥५८॥**

चाण्डालले पकाएको अन्न खाए पराक व्रत गर्नू ।



**असंस्कृतान्पशून्मन्त्रैर्नाद्याद्विप्रः कथञ्चन ।**
**मन्त्रैस्तु संस्कृतानाद्याच्छाश्वतं विधिमास्थितः ॥५९॥**

असंस्कृत र विधिबिनाको अमन्त्रित मासु ब्राह्मणले कहिल्यै नखानू ।
तिनले विधिवूर्वक सुसंस्कृत र अभिमन्त्रित मासु मात्र खाने विधान छ ।

**यावन्ति पशुरोमाणि तावत्कृत्वेह मारणम् ।**
**वृथापशुघ्नः प्राप्नोति प्रत्य चेह च निष्कृतिम् ॥६०॥**

श्रौत र स्मार्त (बलि) कर्म बाहेक पशु मार्ने व्यक्ति त्यो पशुको शरीरका
रौं जति छन् त्यति वर्ष यो लोक र परलोकमा दुःख पाउँदछ ।

**यज्ञार्थं पशवः सृष्टाः स्वयमेव स्वयम्भुवा ।**
**यज्ञो हि भूत्यै सर्वस्य तस्माद्यज्ञे वधोऽवधः ॥६१॥**

ब्रह्मा स्वयंले यज्ञका लागि पशुको सृष्टि गरेका र यज्ञ सबै प्राणीका कल्याणका लागि हुनाले यज्ञमा पशुवध गर्न हुन्छ ।

**न तादृशं भवत्येनो मृगहन्तुर्धनार्थिनः ।**
**यादृशं भवति प्रेत्य वृथामांसानि खादतः ॥६२॥**

पैसाका लागि मृग मार्नुभन्दा नचढाई मासु खानु ठूलो पाप हो ।

**ओषध्यः पशवो वृक्षास्तिर्यञ्च पक्षिणस्तथा ।**
**यज्ञार्थं निधनं प्राप्ताः प्राप्नुवन्त्युच्छ्रितीः पुनः ॥६३॥**

औषधी (वनस्पति), पशु, वृक्ष, उभयचर र पक्षि बलिका लागि मारिए तिनको अर्को उत्तम जुनीमा जन्म हुन्छ ।

**मधुपर्के च यज्ञे च पितृदैवतकर्मणि ।**
**अत्रैव पशवो हिंस्या नान्यचेति कथञ्चन ॥६४॥**



मधुपर्कमा, यज्ञमा र पितृ एवं देवकर्मममा पशु मार्नू । अरुबेलामा कुनै हालतमा हुन्न ।

**यज्ञार्थेषु पशून् हिंसन् वेदतत्त्वार्थविद्द्विजः ।**
**आत्मानं च पशूँश्चैव गमयत्युत्तमां गतिम् ॥६५॥**

यज्ञमा पशुहिँसा वेदसम्मत छ भनी जानेका द्विज तथा पशु दुवैले उत्तम गति प्राप्त गर्दछन् ।

**गृहे गुरावरण्ये वा निवसन्नात्मवान्द्विजः ।**
**नावेदविहितां हिंसामापद्यपि समाचरेत् ॥६६॥**

घरमा होस् वा गुरुकुलमा जहाँ बस्दा पनि वेदले बताएको बाहेकको हिँसा आपद्मा पनि नगर्नू ।

**या वेदविहिता हिंसा नियतास्मिँश्चराचरे ।**
**अहिंसामेव तां विद्याद्वेदाद्धर्मो हि निर्बभौ ॥६७॥**

वेदसम्मत हिँसालाई संसारमा मान्यता दिइएको छ ता पनि वेद
अनुसार अहिँसाबाट यी धर्म निर्वाह गर्न सकिन्छ ।

**योऽहिंसकानि भूतानि हिनस्त्यात्मसुखेच्छया ।**
**स जीवँश्च मृतश्चैव न क्वचित्सुखमेधते ॥६८॥**

जसले आफ्नु सुखको चाहना गरी जीवहिँसा गर्छ उसले
बाँचुञ्जेल र मरेर पनि सुख पाउँदैन ।

**यो बन्धनवधक्लेशान्प्राणिनां न चिकीर्षति ।**
**स सर्वस्य हितप्रेत्सुः सुखमत्यन्तमश्नुते ॥६९॥**

जसले प्राणीलाई बाँध्ने, मार्ने गरी कुनै दुःख दिँदैन, सबै जीवको हीत
चाहन्छ उसले अपार आनन्द पाउँदछ ।

**यद्ध्यायति यत्कुरुते रतिं बध्नाति यत्र च ।**
**तदेवाप्नोत्ययत्नेन यो हिनस्ति न किञ्चन ॥७०॥**



जसले कुनै जीवलाई आघात पुर्‍याउँदैन उसले सोचेको र गरेको सिद्ध हुन्छ ।

**नाकृत्वा प्राणिनां हिंसां मांसमुत्पद्यते क्वचित् ।**
**न च प्राणिवधः स्वर्ग्यस्तस्मान्मांसं विवर्जयेत् ॥७१॥**

जीव नमारी मासु प्राप्त हुँदैन । जीव मारेपछि स्वर्ग पाइन्न । त्यसैले मासु त्याग्नू ।

**समुत्पत्तिञ्च मांसस्य वधबन्धौ च देहिनाम् ।**
**प्रसमीक्ष्य निर्वेत सर्वमांसस्य भक्षणात् ॥७२॥**

मासु उत्पत्ति र हिँसाजन्य पापलाई जानी कुनै पनि जीव-भक्षण
परित्याग गर्नू वा यसबाट परै रहनू ।

**न भक्षयति यो मांसं विधिं हित्वा पिशाचवत् ।**
**स लोके प्रियतां याति व्याधिभिश्च न पीड्यते ॥७३॥**

जसले पिशाचले झैं विधिलाई लत्याएर मासु खाँदैन उ यसलोकमा
पूजिन्छ र रोगबाट पनि पिडित हुँदैन ।

**अनुमन्ता विशसिता निहन्ता क्रयविक्रयी ।**
**संस्कर्ता चोपहर्ता च खादकश्चेति घातकाः ॥७४॥**

मार्न सहमती दिने, काट्ने, मार्ने, किन्ने, बेच्ने, तयार पार्ने, पस्कने र खाने सबै हत्यारा हुन् ।

**स्वमांसं परमांसेन यो वर्धयितुमिच्छति ।**
**अनभ्यर्च्य पितृन्देवान्न ततोऽन्योऽस्त्यपुण्यकृत् ॥७५॥**

देवता र पितृलाई नचढाई आफ्नो मासु बढाउन अरुको मासु प्रयोग गर्ने चाहना गर्नू जस्तो
ठूलो पाप अरु छैन ।

**वर्षे वर्षेऽश्वमेधेन यो यजेत शतं समाः ।**
**मांसानि च न खादेद्यस्तस्य पुण्यफलं समम् ॥७६॥**

वर्षवर्ष दिनमा गरिने अश्वमेध यज्ञ सयवटा गर्नु र मासु नखानु : यी
दुवैको पुण्यफल समान हुन्छ ।

**फलमूलाशनैर्दिव्यैर्मुन्यन्नानाञ्च भोजनैः ।**
**न तत्फलमवाप्नोति यन्मांसपरिवर्जनात् ॥७७॥**

फलफूल, कन्दमूल र मुनी-अन्न खाएर त्यो फल पाइन्न जुन फल मासु नखाएर पाइन्छ ।

**मां स भक्षयितामुत्र यस्य मांसमिहाद्म्यहम् ।**
**एतन्मांसस्य मांसत्वं प्रवदन्ति मनीषिणः ॥७८॥**

(मासु खानेले जान्नु की) मलाई उसले जस्को मासु मैले चाखिरहेको छु अर्को जुनीमा खानेछ ।
यही नै मांस शब्दको अर्थ हो ।

**॥ समाप्तमिदमेकपञ्चाशत्तमोऽध्यायः ॥५१॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको उकाउन्नौं अध्याय पूर्ण भयो ।



## द्विपञ्चाशत्तमोऽध्यायः
## (बाउन्नौ अध्याय)

**सुवर्णस्तेयकृद्राज्ञे कर्माचक्षाणो मुसलमर्पयेत् ॥१॥**

सुन चोरेको (ब्राह्मण) छ भने उसलाई मार्न राजालाई मुसल दिनू ।

**वधात्त्यागाद्वा प्रयतो भवति ॥२॥**

राजाले उसलाई मारेमा वा छोडेमा उ शुद्ध हुन्छ ।

**महाव्रतं द्वादशाब्दानि वा कुर्यात् ॥३॥**

अथवा (सकारेमा) बाह्र वर्षसम्म महाव्रत गरोस् ।

**निक्षेपापहारी च ॥४॥**



नासो पचाउनेलाई पनि यसै गर्नू (सुनचोरकै सजाय दिनू)।

**धान्यधनापहारी च कृच्छ्रमब्दम् ॥५॥**

अनाज वा धन चोरलाई एक वर्षको कृच्छ्र व्रत गराउनू ।

**मनुष्यस्त्रीकूपक्षेत्रवापीनामपहारे चान्द्रायणम् ॥६॥**

पुरुष वा स्त्री नोकर चोर्ने र कुवा, खेत, तलाउ कब्जा गर्नेलाई चान्द्रायण व्रत गराउनू ।

**द्रव्याणामल्पसाराणां सांतपनम् ॥७॥**

कममूल्यका वस्तु चोर्नेलाई सान्तपन व्रत गराउनू ।

**भक्ष्यभोज्यपानशय्यासनपुष्पमूलफलानां पञ्चगव्यपानम् ॥८॥**

खानेकुरा, पिउने कुरा, ओछ्यान, आसन, फूल, कन्दमूल र फल चोर्नेलाई पञ्चगव्य खुवाउनू ।

**तृणकाष्ठद्रुमशुष्कान्नगुडवस्त्रचर्मामिषाणां त्रिरात्रमुपवसेत् ॥९॥**

घाँसपात, दाउरा, रुख, पाकेको अनाज, सखर, लुगा, छाला र
मासु चोर्नेले तीन रात उपवास बस्नू ।

**मणिमुक्ताप्रवालताम्ररजतायःकांस्यानां द्वादशाहं कणानश्नीयात् ॥१०॥**

मणि, मोति, मुगा, तामा, चाँदी, फलाम र काँस चोर्नेले
बाह्र दिनसम्म धान्यांश (कनिका) खानू ।

**कार्पासकीटजोर्णाद्यपहरणे त्रिरात्रं पयसा वर्तेत ॥११॥**

कपास, रेसम, ऊन आदि चोर्नेले तीन दिन दूध मात्र खानू ।

**द्विशफैकशफापहरणे त्रिरात्रमुपवसेत् ॥१२॥**



दुई खुरे वा एक खुरे जनावर चोर्नेले तीन रात उपवास बस्नू ।

**पक्षिगन्धौषधिरज्जुवैदलानामपहरणे दिनमुपवसेत् ॥१३॥**

चरा, सुगन्ध, औषधि, डोरी, बाँसका सामान चोर्नेले एक दिन उपवास बस्नू ।

**दत्त्वैवापहृतं द्रव्यं धनिकस्याप्युपायतः ।
प्रायश्चित्तं ततः कुर्यात्कल्मषस्यापनुत्तये ॥१४॥**

चोरबाट चोरिएका सामान मालिकलाई फर्काउनु र चोरलाई शुद्ध
पार्न उचित प्रायश्चित गर्न लगाउनू वा दण्ड दिनू ।

**यद्यत्परेभ्यस्त्वादद्यात्पुरुषस्तु निरङ्कुशः ।
तेन तेन विहीनः स्याद्यत्र यत्राभिजायते ॥१५॥**

जजसले अहिले अरुका जेजे कुरा खोसेका हुन्छन् अर्कोजन्ममा
तिनलाई त्यहीत्यही वस्तुको अभाव हुन्छ ।

**जीवितं धर्मकामौ च धने यस्मात्प्रतिष्ठितौ ।**
**तस्मात्सर्वप्रयत्नेन धनहिंसां विवर्जयेत्॥१६॥**

जीवितहुँदा धर्म, कर्म धनमा नै रहेको हुन्छ, त्यसैले सबै प्रकारले
धनको हिँसा (चोरी आदि) नगर्नू ।

**प्राणिहिंसापरो यस्तु धनहिंसापरस्तथा ।**
**महद्दुःखमवाप्नोति धनहिंसापरस्तयोः॥१७॥**

प्राणीहिँसा र धनहिँसा गर्नेमध्ये धनहिँसा गर्नेले ठूलो दुःख प्राप्त गर्दछ ।

**॥ समाप्तमिदं द्विपञ्चाशत्तमोऽध्यायः ॥५२॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको बाउन्नौ अध्याय पूर्ण भयो ।





## त्रिपञ्चाशत्तमोऽध्यायः
## (त्रिपन्नौ अध्याय)

**अथागम्यागमने महाव्रतविधानेनाब्दं चीरवासा वने प्राजापत्यं कुर्यात् ॥१॥**

अगम्यालाई गमन गर्नेले महाव्रतको विधानले एक वर्षसम्म
बोक्राको लुगा लगाई वनमा बसेर प्राजापत्य व्रत गर्नू ।

**परदारगमने च ॥२॥**

परायास्त्री गमन गर्नेले पनि यसै गर्नू ।

**गोव्रतं गोगमने च ॥३॥**

गाई गमन गर्नेले (यसबाहेक) गोव्रत पनि लिनू।

**पुंस्ययोनावाकाशेऽप्सु दिवा गोयाने च सवासाः स्नानमाचरेत् ॥४॥**

जबरजस्ती, खुला स्थानमा, दिउसै र गोठमा गमन गरे सवस्त्र नुहाउनू ।

**चण्डालीगमने तत्साम्यमाप्नुयात् ॥५॥**

चाण्डाल्नी गमन गरे तिनकै बराबर (जात) हुन्छ ।

**अज्ञानतश्चान्द्रायणद्वयं कुर्यात् ॥६॥**

अज्ञानताले चाण्डाल्नी गमन गरे दुई चान्द्रायण व्रत गर्नू ।

**पशुवेश्यागमने च प्राजापत्यम् ॥७॥**

पशु (गाई बाहेक) र वेश्या गमन गरे प्राजापत्य व्रत गर्नू ।

**सकृद्दुष्टा स्त्री यत्पुरुषस्य परदारे तद्व्रतं कुर्यात् ॥८॥**

जसका स्त्री दुष्ट छन् ति परस्त्री एकपटक गमन गरिएमा पनि त्यही व्रत बस्नू ।

**यत्करोत्येकरात्रेण वृषलीसेवनाद्द्विजः ।**
**तद्भैक्षभुग्जपन्नित्यं त्रिभिर्वर्षैर्व्यपोहति ॥९॥**

जसले एकरात मात्र पनि चाण्डाल्नीको सेवन गर्दछ, उसले भिक्षामाग्दै र
निरन्तर गायत्री जप्दै तीन वर्ष बिताए पछि मात्र पाप काटिन्छ ।

## ॥ समाप्तमिदं त्रिपञ्चाशत्तमोऽध्यायः ॥५३॥



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको त्रिपन्नौ अध्याय पूर्ण भयो ।



## चतुष्पञ्चाशत्तमोऽध्यायः
## (चौवन्नौ अध्याय)

**यः पापात्मा येन सह संयुज्यते स तस्यैव प्रायश्चित्तं कुर्यात् ॥१॥**

जो पापी जोसँग जुन पापमा जोडिन्छ उसले पनि त्यही पापको प्रायश्चित गर्नू ।

**मृतपञ्चनखात्कुपादत्यन्तोपहताच्चोदकं पीत्वा ब्राह्मणस्त्रिरात्रमुपवसेत् ॥२॥**

पाँच नङ्ग्रे जनावर मरेर दूषित वा तिनले अत्यधिक मात्रामा प्रदूषित
बनाएको पानी पिए ब्राह्मणले तीन रात उपवास बस्नू ।

**द्व्यहं राजन्यः ॥३॥**

क्षत्रीयले दुई दिनरात बस्नू ।



**एकाहं वैश्यः ॥४॥**

वैश्यले एक दिनरात बस्नू ।

**शूद्रो नक्तम् ॥५॥**

शूद्रले एक रात व्रत बस्नू ।

**सर्वे चान्ते व्रतस्य पञ्चगव्यं पिबेयुः ॥६॥**

सबैले (शूद्र बाहेक) व्रतको समाप्तिमा पञ्चगव्य पिउनू ।

**पञ्चगव्यं पिबेच्छूद्रो ब्राह्मणस्तु सुरां पिबेत् ।**
**उभौ तौ नरकं यातो महारौरवसंज्ञितम् ॥७॥**

पञ्चगव्य पिउने शूद्र र मदिरा पिउने ब्राह्मण ती दुवै महारौरव नाम गरिएको नरकमा पर्दछन् ।

**पर्वानारोग्यवर्जमृतावगच्छन्पत्नीं त्रिरात्रमुपवसेत् ॥८॥**

पर्व र रोगी अवस्थामा बाहेक ऋतुमती पत्नीका साथ गमन नगर्नेले तीन रात उपवास बस्नू ।

**कुटसाक्षी ब्रह्महत्याव्रतं चरेत् ॥९॥**

गलत साछी बस्नेले ब्रह्महत्याको व्रत गर्नू ।

**अनुदकमूत्रपुरीषकरणे सचैलं स्नानं महाव्याहृतिहोमश्च ॥१०॥**

जसले मलमूत्र त्याग पछि पानीले शुद्धी गर्दैन (उपलब्ध हुँदामा पनि) उसले सवस्त्र नुहाउनु, महाव्याहृति जप्नु र होम गर्नू ।

**सूर्याभ्युदितनिर्मुक्तः सचैलस्नानः सावित्र्यष्टशतमावर्तयेत् ॥११॥**

जो सूर्योदय हुँदा पनि सुतिरहन्छ उसले सवस्त्र नुहाउनू र एक सय आठ पटक गायत्री जप्नू ।



**श्वश्रृगालविड्वराहखरवानरवायसपुंश्चलीभिर्दष्टः स्रवन्तीमासाद्य षोडश प्राणायामान्कुर्यात् ॥१२॥**

कुकुर, स्याल, सुँगुर, गधा, बाँदर, काग र वेश्याले टोके नदीमा गएर सोह्र पटक प्राणायाम गर्नू ।

**वेदाग्न्युत्सादी त्रिषवणस्नाय्यधःशायी सम्वत्सरं सकृद्भैक्षेण वर्तेत ॥१३॥**

पढेको वेद बिर्सिए वा वेदाग्नि त्यागे दिनहुँ तीन पटक नुहाउने, जमिनमा सुत्ने र एक पटक खाने गरेर वर्ष दिन बिताउनू ।

**समुत्कर्षानृते गुरोश्चालीकनिर्बन्धे तदाक्षेपणे च मासं पयसा वर्तेत ॥१४॥**

झूट बोलेर अरुको चित्त दुखाएमा वा गुरुको अपहेलना गरेमा एक महिना दूध पिएर व्रत गर्नू ।

**नास्तिको नास्तिकवृत्तिः कृतघ्नः कूटव्यवहारी ब्राह्मणवृत्तिघ्नश्चैते**

**सम्वत्सरं भैक्षेण वर्तेरन्॥१५॥**

जो नास्तिक हुन्छ वा नास्तिक पेसा गर्दछ, जो कृतघ्न हुन्छ, छलछामको काम गर्दछ वा ब्राह्मणको पेसालाई उल्लङ्घन गर्दछ उसले एकवर्षसम्म भिक्षाचरण गर्नू ।

**परिवित्तिः परिवेत्ता यया च परिविद्यते दाता याजकश्च चान्द्रायणं कुर्यात्॥१६॥**

परिवित्ति, परिवेत्ता यस्तो विवाहमा कन्यादान दिने र पुरेतले पनि चान्द्रायण व्रत गर्नू ।

**प्राणिभूपुण्यसोमविक्रयी तप्तकृच्छ्रम्॥१७॥**

प्राणि, जमिन, पुण्य, सोमरस बेच्नेलेे तप्तकृच्छ्र व्रत बस्नू ।

**आर्द्रौषधिगन्धपुष्पफलमूलचर्मवेत्रविदलतुषकपालकेश-**
**भस्मास्थिगोरसपिण्याकतिलतैलविक्रयी प्राजापत्यम्॥१८॥**

अदुवा, औषधि, अत्तर, फूल, फलफूल, कन्दमूल, छाला, बेत, बाँसका सामान, भुस, खोपडी, कपाल, खरानी, हाड, गोरस, पिना, तिल र तेल बेच्नेले प्राजापत्य व्रत बस्नू ।

**श्लेष्मजतुमधूच्छिष्टशङ्खशुक्तित्रपुसीसकृष्णलोहौदुम्बरखड्गपात्रविक्रयी**
**चान्द्रायणं कुर्यात्॥१९॥**

लौसी, लाहा, मौरीको मैन, शङ्ख, मुगा, टिन, शिशा, फलाम, तामा र
खागका सामान बेच्नेले चान्द्रायण व्रत बस्नू ।

**रक्तवस्त्ररङ्गरत्नगन्धगुडमधुरसोर्णाविक्रयी त्रिरात्रमुपवसेत्॥२०॥**

रङ्गाइएका कपडा, राङ धातु, रत्न, सुगन्ध, सखर, मह, रस र ऊन
बेच्नेले तीन रात उपवास बस्नू ।

**मांसलवणलाक्षाक्षीरविक्रयी चान्द्रायणं कुर्यात्॥२१॥**

मासु, नुन, लाहा र दूध बेच्नेले चान्द्रायण व्रत गर्नू ।

**तं च भूयश्चोपनयेत् ॥२२॥**

यी माथि सत्रदेखि एक्काईस सूत्रसम्म बताइएका व्यक्तिले दोश्रो पटक गरे पुनः संस्कार गर्नुपर्दछ । अथवा दोश्रोपटकदेखि नै प्रायश्चित गर्न शुरु गर्नुपर्दछ ।

**उष्ट्रेण खरेण वा गत्वा नग्नः स्नात्वा सुप्त्वा भुक्त्वा प्राणायामत्रयं कुर्यात् ॥२३॥**

जसले (स्वेच्छाले) ऊँट वा गधा चढ्दछ, जसले नाङ्गै नुहाउँछ, नाङ्गै सुत्दछ,
नाङ्गै खान्छ उसले तीन पल्ट प्राणायाम गर्नू ।

**जपित्वा त्रीणी सावित्र्याः सहस्राणि समाहितः ।**
**मासं गोष्ठे पयः पीत्वा मुच्यतेऽसत्प्रतिग्रहात् ॥२४॥**

तीन हजार पटक शुद्ध र शान्त भएर गोठमा बसी दूध पिउँदै गायत्री जप्नाले
लिन नहुने दान (प्रतिग्रह) लिएको पापबाट शुद्ध हुन्छ ।



**अयाज्ययाजनं कृत्वा परेषामन्त्यकर्म च ।**
**अभिचारमहीनञ्च त्रिभिः कृच्छ्रैर्व्यपोहति ॥२५॥**

गराउन नहुनेको यज्ञ गराए वा नचिनेका व्यक्तिको अन्तिम संस्कार गराए पनि अनि जसले जादू सिक्दछ उसले पनि तीन कृच्छ्र व्रत बस्नू ।

**येषां द्विजानां सावित्री नानूच्येत यथाविधि ।**
**ताँश्चारयित्वा त्रीन्कृच्छ्रान्यथाविध्युपनाययेत् ॥२६॥**

ती द्विज जसले गायत्री विधिपूर्वक उच्चारण गर्दैनन् तिनले तीन कृच्छ्र व्रत बसी परम्परा अनुसारको प्रायश्चित पनि गर्नू ।

**प्रायश्चित्तं चिकीर्षन्ति विकर्मस्थास्तु ये द्विजाः ।**
**ब्राह्मण्याच्च परित्यक्तास्तेषामप्येतदादिशेत् ॥२७॥**

गैर धार्मिक कर्मगर्ने र वेदाध्ययन गर्नबाट परित्यक्त

द्विजले पनि यही प्रायश्चितको विधान गर्नू ।

**यद्गर्हितेनार्जयन्ति कर्मणा ब्राह्मणा धनम् ।**
**तस्योत्सर्गेण शुध्यन्ति जप्येन तपसा तथा ॥२८॥**

ब्राह्मणवर्जित कर्म गरी धन कमाउने ब्राह्मणले पनि यही प्रायश्चित गर्नू अनि
वेदोत्सर्ग गर्नू, मन्त्रहरु जप्नु र तप गर्नू ।

**वेदोदितानां नित्यानां कर्मणां समतिक्रमे ।**
**स्नातकव्रतलोपे च प्रायश्चित्तमभोजनम् ॥२९॥**

वेदले बताएका नित्यकर्मलाई अतिक्रमण गर्ने तथा स्नातकव्रत मिच्नेले उपवास बस्नू ।

**अवगूर्य चरेत्कृच्छ्रमतिकृच्छ्रं निपातने ।**
**कृच्छ्रातिकृच्छ्रं कुर्वीत विप्रस्योत्पाद्य शोणितम् ॥३०॥**

ब्राह्मणलाई पिट्न खोजे (पिट्न लौरो वा हतियार उठाए) कृच्छ्र व्रत गर्नू ।
हिर्काए अतिकृच्छ्र व्रत बस्नु । रगत नै निकाले कृच्छ्रातिकृच्छ्र व्रत गर्नू ।

**एनस्विभिरनिर्णिक्तैर्नार्थं कश्चित्समाचरेत् ।**
**कृतनिर्णेजनाँश्चैतान्न जुगुप्सेत धर्मवित् ॥३१॥**

पापीहरु जसले प्रायश्चित गरेका छैनन् तिसँग कुनै पनि व्यवहार नगर्नू । तर, जसलाई धर्म
थाहा छ तिनले प्रायश्चित गरिसकेकालाई कहिल्यै दोष नलगाउनू ।

**बालघ्नाँश्च कृतघ्नाँश्च विशुद्धानपि धर्मतः ।**
**शरणागतहन्तॄँश्च स्त्रीहन्तॄँश्च न सम्वसेत् ॥३२॥**

बालहत्यारा, कृतघ्न, धर्मले विशुद्ध, शरणमा परेकोलाई मार्ने, स्त्रीलाई
मार्ने यिनको सङ्गत र संसर्ग नगर्नू ।

**अशीतिर्यस्य वर्षाणि बालो वाप्यूनषोडशः ।**
**प्रायश्चित्तार्धमर्हन्ति स्त्रियो रोगिण एव च ॥३३॥**

असी वर्ष कटेका वृद्ध, सोह्र वर्ष मुनिका बालक, स्त्री र रोगीले बताइएको प्रायश्चितको आधा प्रायश्चित गर्नू ।

**अनुक्तनिष्कृतीनान्तु पापानामपनुत्तये ।**
**शक्तिं चावेक्ष्य पापं च प्रायश्चित्तं प्रकल्पयेत् ॥३४॥**

ती पाप जसको प्रायश्चितको विधान गरिएको छैन, कट्टा गर्नपनि प्रायश्चित गर्नु नै पर्दछ । यसको लागि गरिने प्रायश्चित पाप गर्नेको अवस्था र पापको प्रकृति हेरेर बताउनु पर्दछ ।

**॥ समाप्तमिदं चतुष्पञ्चाशत्तमोऽध्यायः ॥५४॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको चौवन्नौ अध्याय पूर्ण भयो ।



## पञ्चपञ्चाशत्तमोऽध्यायः
## (पचपन्नौ अध्याय)

**अथ रहस्यप्रायश्चित्तानि भवन्ति ॥१॥**

अब गुप्त पापका प्रायश्चितका बारेमा बताइन्छ ।

**स्रवन्तीमासाद्य स्नातः प्रत्यहं षोडश प्राणायामान्कृत्वैककालं हविष्याशी मासेन ब्रह्महा पूतो भवति ॥२॥**

नदीमा गएर (नुहाई) सोह्र पटक प्राणायाम गरी, एक पटक मात्र खाना खाई एक महिना बिताए ब्रह्महत्याको पापबाट शुद्ध हुन्छ ।

**कर्मणोऽन्ते पयीसवनीं गां दद्यात् ॥३॥**

व्रतको समाप्तिमा लैनु गाई दान गर्नू ।



**व्रतेनाघमर्षणेन च सुरापः पूतो भवति ॥४॥**

(ब्रह्महत्याको प्रायश्चित र) अघमर्षणले सुरासेवी शुद्ध हुन्छ ।

**गायत्रीदशसाहस्रजपेन सुवर्णस्तेयकृत् ॥५॥**

(ब्रह्महत्याको प्रायश्चित र) एक हजार दश गायत्री जप्नाले सुनचोरीको पाप शुद्ध हुन्छ ।

**त्रिरात्रोपोषितः पुरुषसूक्तजपहोमाभ्यां गुरुतल्पगः ॥६॥**

गुरुपत्नी गमन गर्नेले ( ब्रह्महत्याको प्रायश्चित र) तीन दिन भोकै बसी पुरुषसूक्त जपी होम गर्नाले शुद्ध हुन्छ ।

**यथाश्वमेधः क्रतुराट् सर्वपापापनोदकः ।**
**तथाघमर्षणं सूक्तं सर्वपापापनोदकम् ॥७॥**

जसरी अश्वमेध गर्नाले राजाका सबै पाप नाशिन्छ त्यसरी नै
अघमर्षणको जपले सबै पाप नाशिन्छ ।

**प्राणायामं द्विजः कुर्यात्सर्वपापापनुत्तये ।**
**दह्यन्ते सर्वपापानि प्राणायामैर्द्विजस्य तु ॥८॥**

द्विजले सबै पापबाट मुक्त हुन प्राणायाम गर्नू । द्विजका सबै पापहरु
पटकपटकको प्राणायामले जलेर नष्ट हुन्छन् ।

**सव्याहृतिं सप्रणवां गायत्रीं शिरसा सह ।**
**त्रिः पठेदायतप्राणः प्राणायामः स उच्यते ॥९॥**

व्याहृति, ॐ र शिर सहितको गायत्री सास रोकेर तीन पटक मनमनै
उच्चारण गर्नुलाई (एक) प्राणायाम भनिन्छ ।

**अकारश्चाप्युकारश्च मकारश्च प्रजापतिः ।**
**वेदत्रयान्निरदुहद्भूर्भुवःस्वरितीति च ॥१०॥**



सृष्टिकर्ता ब्रह्माजीले तीन वेदबाट दोहेर अ, उ र म (ओम्)
तथा भूः, भुवः र स्वः पनि निकाले ।

**त्रिभ्य एव तु वेदेभ्यः पादं पादमदूदुहत् ।**
**तदित्यृचोऽस्याः सावित्र्याः परमेष्ठी प्रजापतिः ॥११॥**

ब्रह्माले तीनै बेदबाट तत्...आदि तीन पाउहरु पनि दोहे जसलाई सावित्री मन्त्र भनिन्छ ।

**एतदक्षरमेताञ्च जपन्व्याहृतिपूर्विकाम् ।**
**सन्ध्ययोर्वेदविद्विप्रो वेदपुण्येन युज्यते ॥१२॥**

यी अक्षरको यि गायत्रीलाई व्याहृति पहिले राखेर दुवै सन्ध्यामा वेदज्ञ
ब्राह्मणले जप गर्नाले वेदाध्ययन गरेको फल प्राप्त गर्दछ ।

**सहस्रकृत्वस्त्वभ्यस्य बहिरेतत्त्रिकं द्विजः ।**

**महतोऽप्येनसो मासात्त्चेवाहिर्विमुच्यते ॥१३॥**

व्याहृति, ॐ र शिर सहितको गायत्री एक महिनासम्म गाऊँ बाहिर हजार पटक जप गर्नाले कहिल्यै ननासिने पाप गरेको द्विज पनि सर्प काँचुली फेरेर मुक्त भएझैँ पापबाट मुक्त हुन्छ ।

**एतत्त्रयविसंयुक्तः काले च क्रियया स्वया ।**
**विप्रक्षत्रियविड्जातिर्गर्हणां याति साधुषु ॥१४॥**

ब्राह्मण, क्षत्रिय र वैश्य जसले यी तीन मन्त्र जान्दैनन् , जानेर पनि जप्नुपर्ने बेलामा जप्ने गर्दैनन् ती साधुहरुका बीचमा निन्दनीय हुन्छन् ।

**ओंकारपूर्विकास्तिस्रो महाव्याहृतयोऽव्ययाः ।**
**त्रिपदा चैव गायत्री विज्ञेयं ब्रह्मणो मुखम् ॥१५॥**

ॐ, महाव्याहृति र तीन चरण गायत्री भनेको बेदको मुख हो भनेर जान्नू ।

**योऽधीतेऽहन्यहन्येतां त्रीणि वर्षाण्यतन्द्रितः ।**
**स ब्रह्मपरमभ्येति वायुभूतः खमूर्तिमान् ॥१६॥**



जसले प्रत्येक दिन (ॐकार, महाव्याहृति र तीन चरण गायत्री) संयमित भएर तीन वर्षसम्म जप गर्दछ उसले शेषपछि ब्रह्मत्व प्राप्त गर्दछ, वायु जसरी स्वच्छन्दले विचरण गर्न पाउँदछ र त्यस्तै पवित्र पनि हुन्छ ।

**एकाक्षरं परं ब्रह्म प्राणायामाः परं तपः ।**
**सावित्र्यास्तु परं नान्यन्मौनात्सत्यं विशिष्यते ॥१७॥**

एक अक्षर (ॐकार) परम ब्रह्म हो, प्राणायाम परम तप हो भने गायत्रीभन्दा ठूलो केही छैन । यो सत्य उजागर गर्नु मौन रहनुभन्दा वेश हो ।

**क्षरन्ति सर्ववैदिक्यो जुहोतियजतिक्रियाः ।**
**अक्षरं त्वक्षरं ज्ञेयं ब्रह्मा चैव प्रजापतिः ॥१८॥**

होम, जप जस्ता सम्पूर्ण वैदिक कर्महरु नाश भएर जान्छन् तर

ॐ सृष्टिकर्ता ब्रह्मासँगै उत्पन्न हुनाले अविनाशी छ ।

**विधियज्ञाज्जपयज्ञो विशिष्टो दशभिर्गुणैः ।**
**उपांशुः स्याच्छतगुणः साहस्रो मानसः स्मृतः ॥१९॥**

ज्योतिष्टोम आदि यज्ञभन्दा जपयज्ञ दश गुना उत्तम हुन्छ । गायत्रीको उपांशु जप सय गुना र मानस जप हजार गुना उत्तम हुन्छ ।

**ये पाकयज्ञाश्चत्वारो विधियज्ञसमन्विताः ।**
**सर्वे ते जपयज्ञस्य कलां नार्हन्ति षोडशीम् ॥२०॥**

चार प्रकारका पाकयज्ञ, विधियज्ञ ती सबै जपयज्ञको सोह्र भागको एक भाग पनि हुँदैनन् ।

**जप्येनैव तु संसिध्येद्ब्राह्मणो नात्र संशयः ।**
**कुर्यादन्यन्नवा कुर्यान्मैत्रो ब्राह्मण उच्यते ॥२१॥**

अरु धार्मिक कार्य गरुन् वा नगरुन् जपयज्ञ गर्दछन् भने
ती ब्राह्मण हुन्छन् यसमा कुनै शङ्का छैन ।

**॥ समाप्तमिदं पञ्चपञ्चाशत्तमोऽध्यायः ॥५५॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको पचपन्नौ अध्याय पूर्ण भयो ।



## षट्पञ्चाशत्तमोऽध्यायः
## (छपन्नौ अध्याय)

**अथातः सर्ववेदपवित्राणि भवीनत ॥१॥**

अब सबै वेदका पवित्र मन्त्रहरु बताइन्छ ।

**येषां जपैश्च होमैश्च द्विजातयः पापेभ्यः पूयन्ते ॥२॥**

यी मन्त्रले जप, होम गर्नाले द्विजहरु पापबाट मुक्त हुन्छन् ।

**अघमर्षणम् ॥३॥**

अघमर्षण (ऋ.वे.१०।१९०) ।

**देवकृतम् ॥४॥**



देवकृत (वाजसनेय संहिता ८।१३) ।

**शुद्धवत्यः ॥५॥**

शुद्धवति (ऋ.वे.८।८४।७-९) ।

**तरत्समन्दीयम् ॥६॥**

तरत्समन्दीय । (ऋ.वे.९।५८।१-३,  तरत्समन्दीत देखिका चार मन्त्र)

**कूष्माण्ड्यः ॥७॥**

कूष्माण्ड मन्त्र । (यद्देवा...देखि वेत्थ यथातथम् सम्मका नौ वेदमन्त्र)

**पावमान्यः ॥८॥**

पावमानी मन्त्र ।

**दुर्गासावित्री ॥९॥**

दुर्गासावित्री ।

**अतीषङ्गाः ॥१०॥**

अतीषङ्गा ।

**पदस्तोभाः ॥११॥**

पदस्तोभ ।

**सामानि व्याहृतयः ॥१२॥**

साम व्याहृति ।



**भारुण्डानि ॥१३॥**

भारुण्ड ।

**चन्द्रसाम ॥१४॥**

चन्द्रसाम ।

**पुरुषव्रते सामनी ॥१५॥**

पुरुषव्रत साम ।

**अब्लिङ्गम् ॥१६॥**

अब्लिङ्ग ।

**बार्हस्पत्यम् ॥१७॥**

बार्हस्पत्य ।

**गोसूक्तम् ॥१८॥**

गोसूक्त ।

**आश्वसूक्तम् ॥१९॥**

आश्वसूक्त ।

**सामनी चन्द्रसूक्ते च ॥२०॥**

साम चन्द्रसूक्त ।



**शतरुद्रीयम् ॥२१॥**

शतरुद्री ।

**अथर्वशिरः ॥२२॥**

अथर्वशिर ।

**त्रिसुपर्णम् ॥२३॥**

त्रिसुपर्ण ।

**महाव्रतम् ॥२४॥**

महाव्रत ।

## नारायणीयम् ॥२५॥

नारायणी ।

## पुरुषसूक्तं च ॥२६॥

पुरुषसूक्त ।

**त्रीण्याज्यदोहानि रथन्तरं च ।**
**अग्निव्रतं वामदेव्यं बृहच्च । एतानि गीतानि**
**पुनन्ति जन्तूञ्जातिस्मरत्वं लभते यदीच्छेत् ॥२७॥**

तीन आज्यादोह, रथन्तर, अग्निव्रत, वामदेव्य र बृहत् यि मन्त्र राम्ररी जप्नाले मानिस पापबाट चोखिन्छ र यदि चाहने हो भने पूर्वजन्मका विषयमा पनि जान्दछ ।

**॥ समाप्तमिदं षट्पञ्चाशत्तमोऽध्यायः ॥५६॥**



⁓✷⁓

मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको छपन्नौ अध्याय पूर्ण भयो ।



## सप्तपञ्चाशत्तमोऽध्यायः
## (सन्ताउन्नौ अध्याय)

**अथ त्याज्याः ॥१॥**

अब त्याज्यहरुका विषयमा बताइन्छ ।

**व्रात्याः ॥२॥**

व्रात्यहरु ।

**पतिताः ॥३॥**

पतितहरु ।

**त्रिपुरुषं मातृतः पितृतश्चाशुद्धाः ॥४॥**



आमा वा बाबुबाट अशुद्ध तीन पुस्ता ।

**सर्व एवाभोज्याश्चाप्रतिग्राह्याः ॥५॥**

खान नहुने कुरा खाने र तिसँग दान लिनेहरू ।

**अप्रतिग्राह्येभ्यश्च प्रतिग्रहप्रसङ्गं वर्जयेत् ॥६॥**

लिन नहुनेसँग दान लिनेहरू ।

**प्रतिग्रहेण ब्राह्मणानां ब्राह्मं तेजः प्रणश्यति ॥७॥**

लिन नहुनेसँग दान लिँदा ब्राह्मणको ब्रह्मतेज नष्ट हुन्छ ।

**द्रव्याणां वाविज्ञाय प्रतिग्रहविधिं यः प्रतिग्रहं कुर्यात्स दात्रा सह निमज्जति ॥८॥**

दानविधि नजानी जसले दान लिन्छ उ दातासहित नरकमा पर्दछ ।

**प्रतिग्रहसमर्थश्च यः प्रतिग्रहं वर्जयेत्स दातृलोकमाप्नोति ॥९॥**

योग्य हुँदाहुँदै जसले दान लिंदैन उसले दातृलोक प्राप्त गर्दछ ।

**एधोदकमूलफलाभयामिषमधुशय्यासनगृहपुष्पदधिशाकाम्भ्युद्यताञ्च निर्णुदेत् ॥१०॥**

समिधा वा दाउरा, जल, कन्दमूल, फलफूल, संरक्षण (निर्भय), मासु,
मह, ओछ्यान, आसन, घर, फूल, दही र सागपात कसैले दिए लिनू।

**आहूयाभ्युद्यतां भिक्षां पुरस्तादनुचोदिताम् ।**
**ग्राह्यां प्रजापतिर्मेने अपि दुष्कृतकर्मणः ॥११॥**

पापी गृहस्थले नमागीकनै भिक्षा लिन अनुरोध गरे लिनूपर्दछ भनी ब्रह्माले भनेका छन् ।

**नाश्नन्ति पितरस्तस्य दश वर्षाणि पञ्च च ।**

**न च हव्यं वहत्यग्निर्यस्तामभ्यवमन्यते ॥१२॥**

यस्तो भिक्षा नलिनेले गर्ने श्राद्ध-भोजन पितृहरु पन्ध्र वर्षसम्म स्वीकार गर्दैनन् र अग्नि
यस्ता भिक्षा-अवहेलकले दिएको हवि ग्रहण गर्दैनन् ।

**गुरून्भृत्यानुज्जिहीर्षुरर्चिष्यन्पितृदेवताः ।**
**सर्वतः प्रतिगृह्णीयान्नतु तृप्येत्स्वयं ततः ॥१३॥**

गुरु वा सेवकको भोक मेटाउन वा देवदेवी र अतिथिको पूजा गर्न दाताको
पात्रता वा कुपात्रता नसोची सबै गृहस्थसँग भिक्षा लिन हुन्छ ।

**एतेष्वपि च कार्येषु समर्थस्तत्प्रतिग्रहे ।**
**नादद्यात्कुलटाषण्ढपतितेभ्यस्तथा द्विषः ॥१४॥**

यसरी लिंदा पनि चरित्रहीन आईमाई, नपुंसक, पतित र शत्रुसँग भने भिक्षा नलिनू।

**गुरुषु त्वभ्यतीतेषु विना वा तैर्गृहे वसन् ।**
**आत्मनो वृत्तिमन्विच्छन्गृह्णीयात्साधुतःसदा ॥१५॥**

मातापिता बितेको वा ठूलाको पेटपाल्ने चिन्ता नहुने गृहस्थले जीवन चलाउन केवल सदाचारी गृहस्थसँग मात्र भिक्षा लिनुपर्दछ ।

**आर्धिकः कुलमित्रश्च दासगोपालनापिताः ।**
**एते एते शूद्रेषु भोज्यान्नाः यश्चात्मानं निवेदयेत् ॥१६॥**

अधियामा जग्गा कमाउने, पुर्ख्यौली मित्र, दास, गोठालो र नाईले वा आत्मैबाट अनुरोधगरी दिने शूद्रको अन्न खान हुन्छ ।

**॥ समाप्तमिदं सप्तपञ्चाशत्तमोऽध्यायः ॥५७॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको सन्ताउन्नौ अध्याय पूर्ण भयो ।



## अष्टपञ्चाशत्तमोऽध्यायः
## (अन्ठाउन्नौ अध्याय)

**अथ गृहाश्रमिणस्त्रिविधोऽर्थो भवति ॥१॥**

गृहस्थका तीन किसिमका धन हुन्छन् ।

**शुक्लः शबलोऽसितश्च ॥२॥**

सेतो, बुट्टे र कालो ।

**शुक्लेनार्थेन यदौर्ध्वदेहिकं करोति तेनास्य देवत्वमासादयति ॥३॥**

सेतो धनले जसले धर्म गर्दछ त्यसले देवत्व प्राप्त गर्दछ ।

**यच्छबलेन तन्मानुष्यम् ॥४॥**



बुट्टे धनले मानव जुनी पाउँदछ ।

**यत्कृष्णेन तत्तिर्यक्त्वम् ॥५॥**

कालोधनले पशु जुनी प्राप्त गर्दछ ।

**स्ववृत्त्युपार्जितं सर्वेषां शुक्लम् ॥६॥**

वर्ण अनुसारका पेसा गरी कमाएको सबै धन सेतो हो ।

**अनन्तरवृत्त्युपात्तं शबलम् ॥७॥**

आफूभन्दा एक तह मुनिको पेसाले कमाएको बुट्टे धन हो ।

**एकान्तरवृत्त्युपात्तञ्च कृष्णम् ॥८॥**

आफूभन्दा दुई तह मुनिको वर्णको पेसाले कमाएको धन कालो हो ।

**क्रमागतं प्रीतिदायः प्राप्तञ्च सह भार्यया ।**
**अविशेषेण सर्वेषां धनं शुक्लमुदाहृतम् ॥९॥**

पैत्रिक सम्पत्ति, उपहार, पत्नीको दाइजो : यी अविच्छिन्न सबै वर्णका लागि सेतो धन हुन् ।

**उत्कोचशुल्कसम्प्राप्तमविक्रेयस्य विक्रयैः ।**
**कृतोपकारादाप्तञ्च शबलं समुदाहृतम् ॥१०॥**

घुस, शुल्क, तस्करी गरी कमाएको धन र प्रत्युपकारको धनलाई बुट्टे धन भनिन्छ ।

**पार्श्विकद्यूतचौर्याप्तप्रतिरूपकसाहसैः ।**
**व्याजेनोपार्जितं यच्च तत्कृष्णं समुदाहृतम् ॥११॥**

चाकडीबाट, जुवाबाट, चोरेर, मागेर, धोखा दिएर, डाँका
गरेर र छलछामले कमाएको धन कालो धन हो ।

**यथाविधेन द्रव्येण यत्किञ्चित्कुरुते नरः ।**
**तथाविधमवाप्नोति स फलं प्रेत्य चेह च ॥१२॥**

मानिसले जुन किसिमको धनले जे कार्य गर्दछ उसले त्यही प्रकारको फल प्राप्त गर्दछ ।

**॥ समाप्तमिदमष्टपञ्चाशत्तमोऽध्यायः ॥५८॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको अन्ठाउन्नौ अध्याय पूर्ण भयो ।



## एकोनषष्टितमोऽध्यायः
## (उनन्साठीयौँ अध्याय)

**गृहाश्रमी वैवाहिकाग्नौ पायज्ञान्कुर्यात्॥१॥**

गृहस्थाश्रमीले वैवाहिक अग्निमा पाकयज्ञ गरोस्।

**सायं प्रातश्चाग्निहोत्रम्॥२॥**

(गृहस्थाश्रमीले) साँझबिहान अग्निहोत्र गरोस्।

**देवताभ्यो जुहुयात्॥३॥**

देवयज्ञ गरोस्।

**चन्द्रार्कसन्निनकर्षविप्रकर्षयोर्दर्शपूर्णमासाभ्यां यजेत॥४॥**



चन्द्रसूर्य नजिक र टाढा (आमनेसामने र विपरित) हुने औँसी र पूर्णिमामा होम गर्नू।

**प्रत्ययनं पशुना॥५॥**

(गृहस्थाश्रमीले) प्रत्येक अयनमा पशुको बलि देओस्।

**शरद्ग्रीष्मयोश्चाग्रयणेन॥६॥**

(गृहस्थाश्रमीले) शरद र ग्रीष्म ऋतुमा आग्रयणी होम गरोस् (नवान्न होम)।

**व्रीहियवयोर्वापाके॥७॥**

धान र जौ पाक्दा पनि नवान्न होम गरोस्।

**त्रैवार्षिकाभ्यधिकान्नः॥८॥**

तीन वर्षलाई पुग्ने अन्न हुने (गृहस्थाश्रमी)ले ..।

**प्रत्यब्दं सोमेन ॥९॥**

प्रतिवर्ष सोमयज्ञ गर्नू ।

**वित्ताभावे इष्ट्या वैश्वानर्यौ ॥१०॥**

(गृहस्थाश्रमीले) धन नभए इष्टि र वैश्वानर यज्ञ गर्नू ।

**शूद्रान्नं यागे परिहरेत् ॥११॥**

शूद्रान्नले यज्ञ नगर्नू ।

**यज्ञार्थं भिक्षितमवाप्तमर्थं सकलमेव वितरेत् ॥१२॥**

यज्ञका लागि मागिएको सबै (थोक) यज्ञमा नै खर्च गर्नू ।

**सायं प्रातर्वैश्वदेवं जुहुयात् ॥१३॥**

साँझबिहान वैश्वदेव गर्नू ।

**भिक्षाञ्च भिक्षवे दद्यात् ॥१४॥**

भिक्षुकलाई भिक्षा पनि दिनू ।

**अर्चितभिक्षादानेन गोदानफलमाप्नोति ॥१५॥**

श्रद्धाले दिएको भिक्षाले गोदानको फल पाउँदछ ।

**भिक्ष्वभावे ग्रासमात्रं गवां दद्यात् ॥१६॥**

भिक्षुक नपाए एक गाँस मात्रै भए पनि गाईलाई दिनू ।

**वह्नौ वा प्रक्षिपेत् ॥१७॥**

अथवा अग्निमा हाल्नू (चढाउनू) ।

**भुक्तेऽप्यन्ने विद्यमाने न भिक्षुकं प्रत्याचक्षीत ॥१८॥**

खाना खाइ सके पछि भिक्षुक आए पनि अन्न बाँकी भए रित्तै नफर्काउनू ।

**कण्डनी पेषणी चुल्ली कुम्भ उपस्कर इति पञ्च सूना गृहस्थस्य ॥१९॥**

ओखलमुसल, जाँतो, चुलो, पानीका भाँडा र कुचो : यी गृहस्थका पाँच पाप (हुने कुरा) हुन् ।

**तन्निष्कृत्यर्थं च ब्रह्मदेवभूतपितृनरयज्ञान्कुर्यात् ॥२०॥**

यसको पापबाट छुटकाराका लागि (गृहस्थाश्रमीले) ब्रह्म, देव, भूत, पितृ र नर यज्ञ गर्नू ।

**स्वाध्यायो ब्रह्मयज्ञः ॥२१॥**



(नित्य) वेदको अध्ययन गर्नू ब्रह्मयज्ञ हो ।

**होमो दैवः ॥२२॥**

(नित्य) होम गर्नू दैवयज्ञ हो ।

**पितृतर्पणं पित्र्यः ॥२३॥**

पितृलाई तर्पण गर्नू पितृयज्ञ हो ।

**बलिर्भौतः ॥२४॥**

बलि दिनू भूतयज्ञ हो ।

**नृयज्ञश्चातिथिपूजनम् ॥२५॥**

अतिथिको पूजा गर्नू नरयज्ञ हो ।

**देवतातिथिभृत्यानां पितृणामात्मनस्तथा ।**

**न निर्वपति पञ्चानामुछ्वसन्न स जीवति ॥२६॥**

देवता, अतिथि, आश्रित जन र पितृलाई नखुवाई आफैं खाने व्यक्तिलाई
सास फेर्ने भएपनि बाँचेको मानिदैन ।

**ब्रह्मचारी यतिर्भिक्षुर्जीवन्त्येते गृहाश्रमात् ।**
**तस्मादभ्यागतानेतान्गृहस्थो नावमानयेत् ॥२७॥**

ब्रह्मचारी, सन्यासी र भिक्षुक गृहस्थाश्रमीबाट नै बाँचिएका हुन्छन्
त्यसैले गृहस्थले घरमा आएका यिनलाई अपमान नगर्नू ।

**गृहस्थ एव जयते गृहस्थस्तप्यते तपः ।**
**ददाति च गृहस्थस्तु तस्माज्ज्येष्ठो गृहाश्रमी ॥२८॥**

गृहस्थले यज्ञ गर्दछ, गृहस्थले नै तपस्या गर्दछ, दान पनि गृहस्थले नै दिन्छ ।
त्यसैले गृहस्थाश्रम श्रेष्ठ आश्रम हो ।

**ऋषयः पितरो देवा भूतान्यतिथयस्तथा ।**
**आशासते कुटुम्बिभ्यस्तस्माच्छ्रेष्ठो गृहाश्रमी ॥२९॥**

ऋषी, पितृ, देवता, प्राणी तथा अतिथिले सहायताका लागि गृहस्थाश्रमीसँग आश गर्दछन् ।
त्यसैले गृहस्थाश्रम श्रेष्ठ आश्रम हो ।

**त्रिवर्गसेवां सततान्नदानं सुरार्चनं ब्राह्मणपूजनञ्च ।**
**स्वाध्यायसेवां पितृतर्पणञ्च कृत्वा गृही शक्रपदं प्रयाति ॥३०॥**

त्रिवर्ग (सदाचार, माया र धन) साधनार्थ निरन्तर अन्न दान, देवताको आराधना, ब्राह्मणको पूजा, वेदाध्ययन र अध्यापन अनि पितृ तर्पण पनि गर्दै गृहस्थाश्रमीले इन्द्रपद प्राप्त गर्दछ ।

**॥ समाप्तमिदमेकोनषष्टितमोऽध्यायः ॥५९॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको
उनन्साठीयौं अध्याय पूर्ण भयो ।



# षष्टितमोऽध्यायः
(साठीयौं अध्याय)

**ब्राह्मे मुहूर्ते उत्थाय मूत्रपुरीषेत्सर्गं कुर्यात् ॥१॥**

ब्राह्म मुहूर्तमा उठी मलमूत्र त्याग गर्नू ।

**दक्षिणाभिमुखो रात्रौ दिवा चोदङ्मुखः सन्ध्ययोश्च ॥२॥**

रातमा दक्षिण फर्केर तथा दिन र दुबै सन्ध्यामा उत्तर फर्केर मलमूत्र त्याग गर्नू ।

**नाप्रच्छादितायां भूमौ ॥३॥**

नछोपिएको जमिनमा मलमूत्र त्याग नगर्नू ।

**न फालकृष्टायाम् ॥४॥**



जोतिएको जमिनमा मलमूत्र त्याग नगर्नू ।

**न छायायाम् ॥५॥**

(पवित्र रुखको) छहारीमा मलमूत्र त्याग नगर्नू ।

**न चोषरे ॥६॥**

बञ्जर जमिनमा मलमूत्र त्याग नगर्नू ।

**न शाद्वले ॥७॥**

ताजा घाँसमाथि मलमूत्र त्याग नगर्नू ।

**न ससत्त्वे ॥८॥**

कीरा आदि माथि मलमूत्र त्याग नगर्नू ।

**न गर्ते ॥९॥**

दुलो वा रुखको जरामाथि मलमूत्र त्याग नगर्नू ।

**न वल्मीके ॥१०॥**

धमिराको गोलोमाथि मलमूत्र त्याग नगर्नू ।

**न पथि ॥११॥**

बाटामा मलमूत्र त्याग नगर्नू ।

**न रथ्यायाम् ॥१२॥**

राजमार्गमा मलमूत्र त्याग नगर्नू ।

**न पराशुचौ ॥१३॥**

अर्काले गरेको ठाउँमा मलमूत्र त्याग नगर्नू ।

**नोद्याने ॥१४॥**

बगैंचामा मलमूत्र त्याग नगर्नू ।

**नोद्यानोदकसमीपयोः ॥१५॥**

बगैंचामा रहेका जलाशयका नजिक मलमूत्र त्याग नगर्नू ।

**न भस्मनि ॥१६॥**

खरानीमा मलमूत्र त्याग नगर्नू ।

**नाङ्गारे ॥१७॥**

गोलमाथि मलमूत्र त्याग नगर्नू ।

**न गोमये ॥१८॥**

गाईको गोबरमाथि मलमूत्र त्याग नगर्नू ।

**न गोव्रजे ॥१९॥**

गोठमा मलमूत्र त्याग नगर्नू ।

**नाकाशे ॥२०॥**

आकाशमा (हावामा वा उठीउठी वा खुल्ला स्थानमा) मलमूत्र त्याग नगर्नू ।



**नोदके ॥२१॥**

पानीमा मलमूत्र त्याग नगर्नू ।

**न प्रत्यनिलानलेन्द्वर्कस्त्रीगुरुब्राह्मणानाञ्च ॥२२॥**

हावा, आगो, चन्द्रमा, सूर्य, स्त्री, गुरु र ब्राह्मणका अगिल्तिर मलमूत्र त्याग नगर्नू ।

**नैवानवगुण्ठितशिराः ॥२३॥**

टाउको नछोपी मलमूत्र त्याग नगर्नू ।

**लोष्टेष्टकापरिमृष्टगुदो गृहीतशिश्नश्चेत्थायाद्भिर्मृद्भिश्चोद्धृताभिर्गन्धलेपक्षयकरं शौचं कुर्यात् ॥२४॥**

डल्लो वा ईँटका टुक्राले (वा झारपातले) गरेको दिशा सफा गर्नू (छोप्नु)। त्यसपछि माटो

पानीले गन्ध ननिख्रेसम्म (गुप्ताङ्ग) सफा गर्नू ।

**एका लिङ्गे गुदे तिस्रस्तथैकच करे दश ।**
**उभयोः सप्त दातव्या मृदस्तिस्रस्तु पादयोः ॥२५॥**

एक पटक लिङ्गमा, गुदद्वारमा तीन पटक, देब्रे हात दश पटक, दुवै हात सात पटक र दुवै गोडा तीन पटक माटोपानीले धुनू ।

**एतच्छौचं गृहस्थानां द्विगुणं ब्रह्मचारिणाम् ।**
**त्रिगुणञ्च वनस्थानां यतीनान्तु चतुर्गुणम् ॥२६॥**

यो शौच विधि गृहस्थका लागि हो । ब्रह्मचारीले दोबर, वानप्रस्थले तेब्बर र सन्यासीले चौबर गर्नू ।

**॥ समाप्तमिदं षष्टितमोऽध्यायः ॥६०॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको साठीयौं अध्याय पूर्ण भयो ।





## एकषष्टितमोऽध्यायः
## (एकसठीयौँ अध्याय)

**अथ पालाशं दन्तधावनं नाद्यात्॥१॥**

दाँत माझ्न पलाँश (मुलायम हाँगो) को प्रयोग नगर्नू ।

**नैव श्लेष्मान्तकारिष्टविभीतकधवधन्वनजम्॥२॥**

लौसी, रिठ्ठो, बर, धयैँरो, धन्वनज (वृक्षविशेष ?) ।

**न च बन्धूकनिर्गुण्डीशिग्रुतिल्वतिन्दुकजम्॥३॥**

दोपहरिया लहरो, नेवारी नामको बोट, सैजन, सेतो लोध, तिन्दु ।

**न च कोविदारशमीपीलुपिप्पलेङ्गुदगुग्गुलजम्॥४॥**



कोइरालो, शमी, दाँति ओखर, पीपल, चिउरी, गोकुलधूप, ।

**न पारिभद्रकाम्लिकामोचकशालमलीशणजम्॥५॥**

बकाइनु, अमिली, सैजन (?), सिमल र भाँगको कोमल हाँगाको पनि प्रयोग नगर्नू ।

**न मधुरम्॥६॥**

न गुलियो ।

**नाम्लम्॥७॥**

न अमिलो ।

**नोर्ध्वशुष्कम्॥८॥**

न फेदतिर सुकेको ।

**न सुषिरम् ॥९॥**

न छिया परेको वा प्वाल परेको ।

**न पूतिगन्धि ॥१०॥**

न खराब (गनाउने) ।

**न पिच्छिलम् ॥११॥**

न धेर नरम-यस्ता मुलायक काठले (दतिवन गर्नू) ।

**न दक्षिणापराभिमुखः ॥१२॥**

दक्षिण र पश्चिम फर्केर (दतिवन नगर्नू) ।

**अद्याच्चोदङ्मुखः प्राङ्मुखो वा ॥१३॥**

पूर्व वा उत्तर फर्केर दतिवन गर्नू ।

**वटासनार्कखदिरकरञ्जबदरसर्जनिम्बारिमेदापा-
मार्गमालतीककुभबिल्वानामन्यतमम् ॥१४॥**

बर, विजयसाल, अर्क (आँक), खयर, बयर, साल, निम, गनाउने खयर, दतिवन, मालती, ककुभ (अर्जुन वृक्ष) र बेलले (दतिवन गर्नू) ।

**काषायं तिक्तं कटुकञ्च ॥१५॥**

टर्रो, तीतो वा पिरो स्वादको छेस्काले दाँत माझ्नू ।

**कनीन्यग्रसमस्थौल्यं सकूर्चं द्वादशाङ्गुलम् ।**

**प्रातर्भूत्वा च यतवाग्भक्षयेद्दन्तधावनम् ॥१६॥**

सूर्योदय अगावै शान्त भएर कान्छी औँलाको टुप्पो जति मोटाइको दतिवनलाई
चपाएर दाँत माइनू, जुन बाह्र अङ्गुल लामो होस् ।

**प्रक्षाल्य भुक्त्वा तज्जह्याच्छुचौ देशे प्रयत्नतः ।**
**अमावास्यां न चाश्नीयाद्दन्तकाष्ठं कदा च न ॥१७॥**

दाँत माझि सकेपछि दतिवनलाई शुद्ध स्थानमा यत्नपूर्वक राख्नु ।
औँसी (वा पूर्णिमा) मा दतिवन गर्ने काठ कहिल्यै नचपाउनू (दाँत नमाइनू) ।

**॥ समाप्तमिदमेकषष्टितमोऽध्यायः ॥६१॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको एकसठ्ठीसौँ अध्याय पूर्ण भयो ।



## द्विषष्टितमोऽध्यायः
## (बैसठ्ठीयौं अध्याय)

**अथ द्विजातीनां कनीनिकामूले प्राजापत्यं नाम तीर्थम् ॥१॥**

द्विजको (दाहिने हातको) कान्छी औंलाका फेदमा प्राजापत्य नामको तीर्थ हुन्छ ।

**अङ्गुष्ठमूले ब्राह्मम् ॥२॥**

बूढी औंलाको फेदमा ब्राह्म तीर्थ हुन्छ ।

**अङ्गुल्यग्रे दैवम् ॥३॥**

औंलाका टुप्पामा देव तीर्थ हुन्छ ।

**तर्जनीमूले पित्र्यम् ॥४॥**



चोर औंलाको फेदमा पितृ तीर्थ हुन्छ ।

**अनग्न्युष्णाभिरफेनिलाभिर्न शूद्रैककरावर्जिताभिरक्षाराभिरद्भिः शुचौ देशे स्वासीनोऽन्तर्जानुः प्राङ्मुखश्चोदङ्मुखो वा तन्मनाः सुमनाश्चाचामेत् ॥५॥**

नतताइएको, फिँज नभएको, शूद्रादिले वा एउटै हातले नदिइएको र अमिलो वा नुनिलो स्वाद नभएको जलले शुद्ध स्थानमा राम्ररी बसी, दुबै हात घुँडा भित्र पारी, पूर्व वा उत्तर फर्की, जलमा ध्यान लगाउँदै शान्त भएर आचमन गर्नू ।

**ब्राह्मेण तीर्थेन त्रिराचामेत् ॥६॥**

ब्राह्मतीर्थले तीन पटक आचमन गर्नू ।

**द्विः प्रमृज्यात् ॥७॥**

दुई पटक हात (मुख) धुनू ।

**खान्यद्भिर्मूर्धानं हृदयं स्पृशेत्॥८॥**

(त्यसपछि) कण्ठ, टाउको र छाती पानीले (औंला चोप्दै) छुनू ।

**हृत्कण्ठतालुगाभिस्तु यथासङ्ख्यं द्विजातयः ।**
**शुध्येरन्स्त्री च शूद्रश्च सकृत्स्पृष्टाभिरन्ततः ॥९॥**

हृदय, कण्ठ र तालुमा जल पुग्दा क्रमशः द्विजहरु तथा स्त्री र शुद्र
तालुले जल एकपटक छोएपछि शुद्ध हुन्छन् ।

**॥ समाप्तमिदं द्विषष्टितमोऽध्यायः ॥६२॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको बैसठ्ठीयौं अध्याय पूर्ण भयो ।



## त्रिषष्टितमोऽध्यायः
## (त्रिसठ्ठीयौँ अध्याय)

**अथ योगक्षेमार्थमीश्वरमधिगच्छेत्॥१॥**

धन आर्जन र सुरक्षाका लागि ईश्वर (मालिक वा राजा) का शरणमा जानू ।

**नैकोऽध्वानं प्रपद्येत॥२॥**

एक्लै यात्रा नगर्नू ।

**नाधार्मिकैः सार्धम्॥३॥**

अधार्मिकसँग नहिँड्नू ।

**न वृषलैः॥४॥**



शुद्रसँग नहिँड्नू ।

**न द्विषद्भिः॥५॥**

शत्रुसँग पनि नहिँड्नू ।

**नातिप्रत्यूषसि॥६॥**

(बिहान) धेरै सबेरै पनि नहिँड्नू ।

**नातिसायम्॥७॥**

झमक्क साँझ परेपछि नहिँड्नू ।

**न सन्ध्ययोः॥८॥**

साँझमा नहिँड्नू ।

**न मध्याह्ने ॥९॥**

मध्याह्नमा नहिँड्नू ।

**न सन्निनहितपानीयम् ॥१०॥**

पानीका नजिक नहिँड्नू ।

**नातितूर्णम् ॥११॥**

धेरै हतार गरेर नहिँड्नू ।

**न रात्रौ ॥१२॥**

रातमा नहिँड्नू ।



**न सन्ततं बालव्याधितार्तैर्वाहनैः ॥१३॥**

बालक, रोगी र सङ्कटमा परेकाको तथा बाहनको बाटो नरोक्नू ।

**न हीनाङ्गैः ॥१४॥**

न कम अङ्ग हुनेलाई ।

**न दीनैः ॥१५॥**

न दुखीलाई ।

**न गोभिः ॥१६॥**

न गाईगोरुको ।

**नादान्तैः ॥१७॥**

न अप्रशिक्षित जनावरको नै (बाटो छेक्नू) ।

**यवसोदके वाहनानामदत्त्वात्मनः क्षुत्तृष्णापनोदने न कुर्यात् ॥१८॥**

आफू चढेका बाहनमा नारिएका जनावरलाई दानापानी नदिई आफ्नो भोकप्यास नमेट्नू ।

**न चतुष्पथमधितिष्ठेत् ॥१९॥**

चौबाटोमा (धेरैबेर वा एक्लै) नबस्नू ।

**न रात्रौ वृक्षमूलम् ॥२०॥**

रुखको फेदमा रातमा नबस्नू ।

**न शून्यालयम् ॥२१॥**



सुनसान घरमा नबस्नू ।

**न तृणम् ॥२२॥**

घाँसमाथि नबस्नू ।

**न पशूनां बन्धगारम् ॥२३॥**

पशुशालामा नबस्नू ।

**न केशतुषकपालास्थिभस्माङ्गारान् ॥२४॥**

कपाल, भुस, खप्पर, हाड, खरानी र अँगार माथि नबस्नू ।

**न कार्पासास्थि ॥२५॥**

कपासका गेडामाथि नबस्नू ।

**चतुष्पथं प्रदक्षिणीकुर्यात् ॥२६॥**

चौबाटोलाई दाहिने पारेर हिँड्नू ।

**देवतार्चाश्च ॥२७॥**

देवमूर्तिलाई पनि दाहिने पारेर हिँड्नू ।

**प्रज्ञातांश्च वनस्पतीन् ॥२८॥**

राम्ररी चिनेका ठूला रुखहरुलाई पनि दाहिने पारेर हिँड्नू ।

**अग्निब्राह्मणगणिकापूर्णकुम्भादर्शच्छत्रध्वजपताका-**
**श्रीवृक्षवर्धमाननन्द्यावर्तांश्च ॥२९॥**



आगो, ब्राह्मण, वेश्या, जलपूर्ण भाँडो, ऐना, छाता, झण्डा, पताका,
बेलवृक्ष र स्मारक आदिलाई पनि दाहिने पारेर हिँड्नू ।

**तालवृन्तचामराश्वगजाजगोदधिक्षीरमधुसिद्धार्थकाँश्च ॥३०॥**

पङ्खा, कौडी, चमर, घोडा, हाती, बाख्रा, बाच्छा सहितको गाई,
दही, दूध, मह र सर्स्यूं पनि दाहिने पारेर हिँड्नू ।

**वीणाचन्दनायुधार्द्रगोमयफलपुष्पार्द्रशाकगोरोचनादूर्वाप्ररोहाँश्च ॥३१॥**

वीणा, चन्दन, हतियार, गाईको आलो गोबर, फल, फूल,  ताजा सागपात, गोलोचन,
दुबोको अङ्कुर पनि दाहिने पारेर हिँड्नू ।

**उष्णीषालङ्कारमणिकनकरजतवस्त्रासनयानामिषाँश्च ॥३२॥**

पगडी, आभुषण, मणि, सुन, चाँदी, वस्त्र, आसनी, बाहन र

काँचो मासु पनि दाहिने पारेर हिँड्नू ।

**भृङ्गारोद्धृतोर्वराबद्धैकपशुकुमारीमीनाँश्च दृष्ट्वा प्रयादिति ॥३३॥**

सुनौला गमला, खेती गरिएको जमिन, बाँधिएका पशु, कुमारी र
माछा पनि देखे दाहिने पारेर हिँड्नू ।

**अथ मत्तोन्मत्तव्यङ्गान्दृष्ट्वा निवर्तेत ॥३४॥**

मत्त, उन्मत्त, विकृत व्यक्ति देखे घर फर्कनू ।

**वान्तविरिक्तमुण्डितजटिलवामनाँश्च ॥३५॥**

वान्ता, अशुद्ध, कपाल खौरेको, जटाधारी र बामपुड्के देखे पनि फर्कनू ।

**काषायिप्रव्रजितमलिनाँश्च ॥३६॥**



गेरु वस्त्रधारी, सन्यासी र (कापालिक?) देखे पनि फर्कनू ।

**तैलगुडशुष्कगोमयेन्धनतृणपलाशभस्माङ्गाराँश्च ॥३७॥**

तेल, शखर, सुकेको गाईको गोबर, दाउरा, घाँस (दुबो र कुस बाहेकको),
पलाँस, खरानी र गोल देखे पनि फर्कनू ।

**लवणक्लीबासवनपुंसककार्पासरज्जुनिगडमुक्तकेशाँश्च ॥३८॥**

नुन, नपुंसक, मदिरा, नामर्द, कपासका लुगा वा धागो, गोडामा बाँधिएको
फलामे साङ्लो र छरपस्ट कपाल देखे पनि फर्कनू ।

**वीणाचन्दनार्दशाकोष्णीषालङ्करणकुमारीस्तु प्रस्थानकालेऽभिनन्दयेदिति ॥३९॥**

यात्राको शुरुमा वीणा, चन्दन, हरिया सागपात, पगडी, गहना,
कुमारी देखे तिनलाई अभिवादन गर्नू ।

**देवब्राह्मणगुरुबभ्रुदीक्षितानां छायां नाक्रामेत् ॥४०॥**

देवता, ब्राह्मण, गुरु र सोम यज्ञका लागि दिक्षीत जनावरको छाया ननाघ्नू ।

**निष्ठूनवान्तरुधिरविण्मूत्रस्नानोदकानि च ॥४१॥**

केही कुराको छिटा, वमन, रगत, मलमूत्र र नुहाएको पानी पनि ननाघ्नू ।

**न वत्सतन्त्रीं लङ्घयेत् ॥४२॥**

गाई बाँधिएको दाम्लो पनि ननाघ्नू ।

**प्रवर्षति न धावेत् ॥४३॥**

वर्षामा (पानी परिरहेका बेलामा) नदौडनू ।



**न वृथा नदीं तरेत् ॥४४॥**

सोखका लागि नदी नतर्नू ।

**न देवताभ्यः पितृभ्यश्चोदकमप्रदाय ॥४५॥**

देवता र पितृलाई पानी नचढाई पनि नदी नतर्नू ।

**न बाहुभ्याम् ॥४६॥**

हातले पौडेर नदी नतर्नू ।

**न भिन्नया नावा ॥४७॥**

प्वाल परेको डुँगामा चढेर पनि नदि नतर्नू ।

**न कूलमधितिष्ठेत् ॥४८॥**

(नदी) किनारमा धेरै बेर नबस्नू ।

**न कूपमवलोकयेत् ॥४९॥**

कुवामा (घोप्टेर) नहेर्नू ।

**न लङ्घयेत् ॥५०॥**

यसलाई ननाघ्नू ।

**वृद्धभारिनृपस्नातस्त्रीरोगिवरचक्रिणाम् ।
पन्था देयो नृपस्त्वेषां मान्यः स्नातश्च भूपतेः ॥५१॥**

वृद्ध, भरिया, राजा, स्नातक, रोगी, जन्ती र गाडालाई बाटो छोडि दिनू ।
यिमध्ये राजा माननीय हुन्छ र राजाले पनि स्नातकलाई मान्नू ।



**॥ समाप्तमिदं त्रिषष्टितमोऽध्यायः ॥६३॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको त्रिसठीऔँ अध्याय पूर्ण भयो ।



# चतुष्षष्टितमोऽध्यायः
# (चौसठ्ठीऔँ अध्याय)

**परनिपानेषु न स्नानमाचरेत् ॥१॥**

अर्काले बनाएको (व्यक्तिगत) जलाशयमा ननुहाउनू ।

**आचरेत्पञ्च पिण्डानुद्धृत्यापस्तथापदि ॥२॥**

आपद् पर्दा त्यस्तो जलाशयबाट पाँच डल्ला माटो र केही पानी
निकालेर बाहिर फाली अनि नुहाउनू ।

**नाजीर्णे ॥३॥**

अपच हुँदा ननुहाउनू ।



**न चातुरः ॥४॥**

बिरामी हुँदा ननुहाउनू ।

**न नग्नः ॥५॥**

नाङ्गै ननुहाउनू ।

**न रात्रौ ॥६॥**

राती ननुहाउनू ।

**राहुदर्शनवर्जम् ॥७॥**

ग्रहणमा बाहेक (ग्रहणमा राती नुहाउन हुन्छ) ।

**न सन्ध्ययोः ॥८॥**

साँझमा ननुहाउनू ।

**प्रातःस्नानशीलोऽरुणताम्रां प्राचीमालोक्य स्नायात् ॥९॥**

बिहान रातापहेँला अरुणोदय (झुल्कन लागेका घाम) हेर्दै (पूर्व फर्केर) नुहाउनू ।

**स्नातः शिरो नावधुनेत् ॥१०॥**

नुहाएर (कपालको) पानी झार्न (पशुपंक्षीले पर्से जसरी) टाउको नहल्लाउनू ।

**नाङ्गेभ्यस्तोयमुद्धरेत् ॥११॥**

नुहाएको चिसो अङ्ग (शरीर) नाङ्गो हातले वा (लगाएको वा नुहाउने बेलामा लगाएको वा चिसो) लुगाले नपुछ्नू ।



**न तैलवत्संस्पृशेत् ॥१२॥**

नुहाएको शरीरले (अरु कर्म नसकी) चिल्ला पदार्थ (वा वस्तु) नछुनू ।

**नाप्रक्षालितं पूर्वधृतं वसनं बिभृयात् ॥१३॥**

पहिले लगाइएका तर नधोइएका लुगा (नुहाएर) नलगाउनू ।

**स्नातः सोष्णीषो धौतवाससी बिभृयात् ॥१४॥**

नुहाइ सकेर टाउकामा गम्छा बेरी आफैँले लगाएर नुहाएका भिजेका कपडा लिनू ।

**न म्लेच्छान्त्यजपतितैः सह सम्भाषणं कुर्यात् ॥१५॥**

(नुहाएर अरु नित्यकर्म नसकी) म्लेच्छ, अन्त्यज र पतितसँग कुराकानी नगर्नू ।

**स्नायात्प्रस्रवणदेवखातसरोवरेषु ॥१६॥**

पानीको मूलमा वा झरनामा, पवित्र (प्राकृतिक) दहमा वा तलाउमा नुहाउनू ।

**उद्धृताद्भूमिष्ठमुदकं पुण्यं स्थावरात्प्रस्रवत्तस्मान्नादेयं तस्मादपि साधुपरिगृहीतं सर्वत एव गाङ्गम् ॥१७॥**

उभाइएको भन्दा जमिनमै भएको, कृत्रिमरूपमा भण्डारण गरिएको भन्दा प्राकृतिक झरनाको, यि जलभन्दा नदीको, त्योभन्दा विशिष्ट साधुले लेराएर दिएको जल पवित्र हुन्छ । सबैतिर सबैभन्दा पवित्र गङ्गाजल हुन्छ ।

**मृत्तोयैः कृतमलापकर्षोऽप्सु निमज्योपविश्यापो हिष्ठेति तिसृभिर्हिरण्यवर्णा इति चतसृभिरिदमापः प्रवहतेति च तीर्थमभिमन्त्रयेत् ॥१८॥**

माटो र पानीले नुहाई शरीरको मल निखारी सकेपछि डुबुल्की लाएर किनारमा आई "आपो हिष्ठा..." आदि तीन, "हिरण्यवर्णा..." आदि चार र "इदमापः प्रवह..." मन्त्रले तीर्थ ( स्नानस्थलको जल) लाई मन्त्रिनू ।



**तातोऽप्सु निमग्नस्त्रिरघमर्षणं जपेत् ॥१९॥**

त्यसपछि जलमा तीन पटक डुबुल्की पार्दै अघमर्षण मन्त्र जप्नू ।

**तद्विष्णोः परमं पदमिति वा ॥२०॥**

अथवा "तद्विष्णोः परमं पदम्...." मन्त्र जप गर्नू ।

**द्रुपदां सावित्रीं वा ॥२१॥**

अथवा द्रुपदा सावित्री मन्त्र जप्नू ।

**युञ्जते मन इत्यनुवाकं वा ॥२२॥**

अथवा "युञ्जते मन..." यो अनुवाक जप्नू ।

**पुरुषसूक्तं वा ॥२३॥**

वा पुरुषसूक्त जप्नू ।

**स्नातश्चार्द्रवासा देवपितृतर्पणमम्भःस्थ एव कुर्यात् ॥२४॥**

नुहाएर भिजेकै कपडामा देवता र पितृलाई पानीमै बसेर तर्पण गर्नू ।

**परिवर्तितवासाश्चेत्तीर्थमुत्तीर्य ॥२५॥**

लुगा फेरिसकेको भए किनारमा आएर तर्पण गर्नू ।

**अकृत्वा देवपितृतर्पणं स्नानशाटीं न पीडयेत् ॥२६॥**

तर देवता र पितृलाई तर्पण नदिई नुहाउँदा भिजेका आफ्ना कपडा ननिचोर्नू ।

**स्नात्वाचम्य विधिवदुपस्पृशेत् ॥२७॥**



नुहाइसकेर विधिवत् (पुनः) आचमन गर्नू ।

**पुरुषसूक्तेन प्रत्यृचं पुरुषाय पुष्पाणि दद्यात् ॥२८॥**

त्यसपछि पुरुषसूक्तका सोह्र मन्त्रले पुरुषोत्तमलाई (सोह्र पटक) फूल चढाउनू ।

**उदकाञ्जलिं पश्चात् ॥२९॥**

यसपछि अँजुलीले जल चढाउनू ।

**आदावेव दिव्येन तीर्थेन देवतानां कुर्यात् ॥३०॥**

यसरी जल चढाउँदा पहिले बताइएको देवतीर्थले देवतालाई जल चढाउनू ।

**तदनन्तरं पित्र्येण पितृणाम् ॥३१॥**

पितृतीर्थले पितृहरूलाई जल चढाउनू ।

**तत्रादौ स्ववंश्यानां तर्पणं कुर्यात् ॥३२॥**

यसरी पितृहरूलाई जल चढाउँदा पहिला आफ्ना कुलका पितृलाई जल चढाउनू ।

**ततः सम्बन्धिबान्धवानाम् ॥३३॥**

त्यसपछि अन्य नातागोताका पितृलाई चढाउनू ।

**ततः सुहृदाम् ॥३४॥**

त्यसपछि हितैषीलाई चढाउनू ।

**एवं नित्यस्नायी स्यात् ॥३५॥**

यसरी दिनहुँ नुहाउने गर्नू ।



**स्नातश्च पवित्राणि यथाशक्ति जपेत् ॥३६॥**

नुहाइसकेपछि पवित्र मन्त्रहरू यथाशक्ति जप गर्नू ।

**विशेषतः सावित्रीम् ॥३७॥**

विशेषगरी सावित्री मन्त्र जप गर्नू ।

**पुरुषसूक्तं च ॥३८॥**

पुरुषसूक्त पनि जप्नू ।

**नैताभ्यामधिकमस्ति ॥३९॥**

(नुहाए पछि जप गर्न) यी दुईभन्दा श्रेष्ठ मन्त्र अरु छैनन् ।

**स्नातोऽधिकारी भवति दैवे पित्र्ये च कर्मणि ।**
**पवित्राणां तथा जप्ये दाने च विधिबोधिते ॥४०॥**

यसरी नुहाएको व्यक्ति नै देवकर्म, पितृकर्म, जप र दानका लागि योग्य हुन्छ, विधि यही हो ।

**अलक्ष्मीः कालकर्णी च दुःस्वप्नं दुर्विचिन्तितम् ।**
**अब्मात्रेणाभिषिक्तस्य नश्यन्त इति धारणा ॥४१॥**

अलक्ष्मी, सङ्कट, खराब सपना, खराब सोच आदि सबै यसरी गरिएको स्नान र
अभिषेकले नष्ट हुन्छन् यही नै धर्मको विधान हो ।

**याम्यं हि यातनादुःखं नित्यस्नायी न पश्यति ।**
**नित्यस्नानेन पूयन्ते येऽपि पापकृतो नराः ॥४२॥**

जो यसरी सधैं नुहाउँदछ उसले यमलोकमा यम-यातना भोग्नु पर्दैन,
नित्य स्नानले पापीहरुको पाप पनि नष्ट हुन्छ ।



**॥ समाप्तमिदं चतुष्षष्टितमोऽध्यायः ॥६४॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको चौसठ्ठीयौं अध्याय पूर्ण भयो ।



## पञ्चषष्टितमोऽध्यायः
## (पैंसठ्ठीयौं अध्याय)

**अथातः सुस्नातः सुप्रक्षालितपाणिपादः स्वाचान्तो देवतार्चायां स्थले वा भगवन्तमनादिनिधनं वासुदेवमभ्यर्चयेत् ॥१॥**

यसपछि विधिपूर्वक नुहाई, हातगोडा धोई, आचमन गरी पूजास्थलमा गई आदि र अन्त नभएका भगवान् वासुदेवको पूजाअर्चना गर्नू ।

**अश्विनोः प्राणस्तौत इति जीवादानं दत्त्वा युञ्जते मन इत्यनुवाकेनावाहनं कृत्वा जानुभ्यां पाणिभ्यां शिरसा च नमस्कारं कुर्यात् ॥२॥**

"अश्विनोः प्राणा..." यो अनुवाकले आवाहन गरी दुवै घुँडा, गोडा र शीरले वासुदेव भगवान् लाई नमस्कार गर्नू ।

**आपो हिष्ठेति तिसृभिरर्घ्यं निवेदयेत् ॥३॥**



"आपो हिष्ठा..." यी तीन मन्त्रले अर्घ दिनू ।

**हिरण्यवर्णा इति चतसृभिः पाद्यम् ॥४॥**

"हिरणयवर्णा..." आदि चार मन्त्रले जल चढाउनू ।

**शं न आपो धन्वन्या इत्याचमनीयम् ॥५॥**

" शं न आपो..." मन्त्रले फेरी जल चढाउनू ।

**इदमापः प्रवहतेति स्नानीयम् ॥६॥**

"इदमापः प्रवह..." मन्त्रले स्नान गराउनू ।

**रथेष्वक्षेषु वृषभराजा इत्यनुलेपनालङ्कारौ ॥७॥**

“रेथेष्वक्षेषु वृषभ...” मन्त्रले चन्दन र अलङ्कार चढाउनू ।

**युवा सुवासा इति वासः ॥८॥**

“युवा सुवासा..” मन्त्रले वस्त्र चढाउनू ।

**पुष्पावतीरिति पुष्पम् ॥९॥**

“पुष्पावती...” मन्त्रले फूल चढाउनू ।

**धूरसि धूर्वेति धूपम् ॥१०॥**

“धूरसि धूर्व....” मन्त्रले धूप बाल्नू ।

**तेजोऽसि शुक्रमिति दीपम् ॥११॥**

“तेजोऽसि शुक्र...” मन्त्रले बत्ती (दीप) बाल्नू ।

**दधिक्राब्ण इति मधुपर्कम् ॥१२॥**

“दधिक्राब्णा...” मन्त्रले मधुपर्क चढाउनू ।

**हिरण्यगर्भ इत्यष्टाभिर्नैवेद्यम् ॥१३॥**

“हिरण्यगर्भ...” आठ मन्त्रले नैवेद्य चढाउनू ।

**चामरं व्यजनं मात्रां छत्रं यानासने तथा ।**
**सावित्रेणैव तत्सर्वं देवाय विनिवेदयेत् ॥१४॥**

चमर हम्कने, कौडा चडाउने, ऐना देखाउने, छाता ओढाउने जस्ता
कार्य गायत्री मन्त्र पढ्दै गर्नू ।

**एवमभ्यर्च्य च जपेत्सूक्तं वै पौरुषं ततः ।**

**तेनैव जुहुयादाज्यं य इच्छेच्छाश्वतं पदम् ॥१५॥**

यसरी पूजा गरिसकेर पुरुषसूक्त जप गर्नू । यसरी पूजा गर्दा मोक्षत्वको प्राप्ति हुन्छ ।

**॥ समाप्तमिदं पञ्चषष्टितमोऽध्यायः ॥६५॥**



मोहन प्रसाद सापकोटाद्धारा भावानुवाद गरिएको विष्णुस्मृतिको पैंसठ्ठीयौं अध्याय पूर्ण भयो ।



## षट्षष्टितमोऽध्यायः
## (छैसठ्ठीयौँ अध्याय)

**न नक्तं गृहीतेनोदकेन देवपितृकर्म कुर्यात् ॥१॥**

राती लेराएको बासी पानीले देव तथा पितृ कार्य नगर्नू ।

**चन्दनमृगमददारुकर्पूरकुङ्कुमजातीफलवर्जमनुलेपनं न दद्यात् ॥२॥**

चन्दन, कस्तूरी, देवदारु, कपूर, कुङ्कुम र जाइफल बाहेक अरु
थोकको लेपन (चन्दन) नचढाउनू ।

**न वासो नीलीरक्तम् ॥३॥**

नीलोले रङ्गाइएको वस्त्र नचढाउनू ।

**न मणिसुवर्णयोः प्रतिरूपमलङ्करणम् ॥४॥**

नक्कली सुन वा मणिका अलङ्कार नचढाउनू ।



**नोग्रगन्धि ॥५॥**

उग्र गन्ध आउने फूल नचढाउनू ।

**नागन्धि ॥६॥**

गन्ध नआउने फूल नचढाउनू ।

**न कण्टकिजम् ॥७॥**

काँडा भएको रुखमा फुल्ने फूल नचढाउनू ।

**कणकिजमपि शुक्लं सुगन्धिकन्तु दद्यात् ॥८॥**

सेतो र मीठा बास्ना आउने भए काँडा भएको रुखमा फुलेको फूल पनि चढाउनु हुन्छ ।

**रक्तमपि कुङ्कुमं जलजञ्च दद्यात् ॥९॥**

पानीमा उम्रने विरुवामा फुलेको भए रातो फूल पनि चढाउनु हुन्छ ।

**न धूपार्थे जीवजातम् ॥१०॥**

धूपका लागि कुनै जीवजन्तुको अङ्ग प्रयोग नगर्नू ।

**न घृततैलं विना किञ्चन दीपार्थे ॥११॥**

बत्ती बाल्न घिउ र तेल (तीलको) बाहेक अरु कुरा प्रयोग नगर्नू ।

**नाभक्ष्यं नैवेद्यार्थे ॥१२॥**

अभक्ष्य नैवेद्य नचढाउनू ।

**न भक्ष्ये अप्यजामहिषीक्षीरे ॥१३॥**

खान हुने भएपनि बाख्री र भैंसीको दूध नचढाउनू ।



**पञ्चनखमत्स्यवराहमांसानि च ॥१४॥**

पाँच नङ्ग्रा हुने जीव, माछा र सुँगुर (बँदेल वा वनेल) को मासु नचढाउनू ।

**प्रयतश्च शुचिर्भूत्वा सर्वमेव निवेदयेत् ।**
**तन्मनाः सुमना भूत्वा त्वराक्रोधविवर्जितः ॥१५॥**

पूर्णरूपमा शुद्ध भई सबै कुरा अर्पण गर्नू । शुद्ध तन र मनको भई रिसराग मनमा नलिई यि कुरा गर्नू ।

**॥ समाप्तमिदं षट्षष्टितमोऽध्यायः ॥६६॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको छैसठ्ठीयौं अध्याय पूर्ण भयो ।



## सप्तषष्टितमोऽध्यायः
## (सतसठ्ठीयौं अध्याय)

**अथाग्निं परिसमूह्य पर्युक्ष्य परिस्तीर्य परिषिच्य सर्वतः पाकादग्रमुद्धृत्य जुहुयात् ॥१॥**

यसपछि विविपूर्वक अग्नि जगाएर, वरिपरि जल छर्की, कुश ओछ्याएर, फेरी कुशपानी वरिपरि छर्केर पकाएको अन्नबाट अलिअलि अन्न झिकी होम गर्नू ।

**वासुदेवाय सङ्कर्षणाय प्रद्युम्नायानिरुद्धाय पुरुषाय सत्याच्युताय वासुदेवाय ॥२॥**

वासुदेव, संकर्षण (बलराम), प्रद्युम्न, अनिरुद्ध, पुरुष, सत्य, अच्युत र वासुदेव,...।

**अथाग्नये सोमाय मित्राय वरुणाय इन्द्राय, इन्द्राग्निभ्याम् विश्वेभ्यो देवेभ्यः प्रजापतये अनुमत्यै धन्वन्तरये वास्तोष्पतये अग्नये स्विष्टकृते च ॥३॥**

त्यसपछि अग्नि, सोम, मित्र, वरुण, इन्द्र, इन्द्राग्नि समुच्चय, विश्वेदेवा, प्रजापति, अनुमती, धन्वन्तरी, वास्तोष्पति र अग्निस्विष्टकृतलाई होम हाल्नू ।



**ततोऽन्नशेषेण वलिमुपहरेत् ॥४॥**

त्यसपछि बचेको अन्नले बलि दिनू ।

**तक्षोपतक्षाभ्याम् ॥५॥**

यसपछि तक्ष र उपतक्ष (सरिसृप राक्षस ) का लागि बलि दिनू ।

**अभितः पूर्वेणाग्निम् ॥६॥**

यसपछि अग्निको पूर्वोत्तर र दक्षिणपूर्व भागमा बलि दिनू ।

**अम्बानामासीति दुला नामासीति नितन्ती नामासीति चुपुणीका नामासीति सर्वासाम् ॥७॥**

यसपछि सात इष्टिका अम्बा, दुला, नितन्ती, चुपुणिका आदि सबैलाई बलि दिनू ।

**नन्दिनि सुभगे सुमङ्गलि भद्रंकरीति स्रक्तिष्वभिप्रदक्षिणम् ॥८॥**

यसपछि पूर्वोत्तर कुनाबाट शुरु गरी नन्दिनी, सुभगा, सुमङ्गली र भद्रंकरीलाई बलि दिनू ।

**स्थूणायां ध्रुवायां श्रियै हिरण्यकेश्यै वनस्पतिभ्यश्च ॥९॥**

यसपछि मूल थामका नजिकका हिरण्यकेशी र वनस्पतिलाई बलि दिनू ।

**धर्माधर्मयोर्द्वारि मृत्यवे च ॥१०॥**

त्यसपछि ढोकामा रहेका मृत्यु, अमृत्यु र धर्मलाई बलि दिनू ।

**उदधाने वरुणाय ॥११॥**

त्यसपछि पानीको पात्रमा वरुणका लागि बलि दिनू ।

**विष्णव इत्युलूखले ॥१२॥**

ॐ विष्णवे भनी ओखललाई बलि दिनू ।

**मरुद्भ्य इति दृषदि ॥१३॥**

ॐ मरुद्भ्य धनी जाँतोलाई बलि दिनू ।

**उपरि शरणे वैश्रवणाय राज्ञे भूतेभ्यश्च ॥१४॥**

छानामा वैश्रवण र सबै जीवका लागि बलि दिनू ।

**इन्द्रायेन्द्रपुरुषेभ्य इति पूर्वार्धे ॥१५॥**

इन्द्र र इन्द्रपुरुषका लागि पूर्वतिर बीचमा बलि दिनू ।

**यमाय यमपुरुषेभ्य इति दक्षिणार्धे ॥१६॥**

यम र यमपुरुषका लागि दक्षिणतिर बीचमा बलि दिनू ।

**वरुणाय वरुणपुरुषेभ्य इति पश्चार्धे ॥१७॥**

वरुण र वरुणपुरुषका लागि पश्चिमतिर बीचमा बलि दिनू ।

**सोमाय सोमपुरुषेभ्य इत्युत्तरार्धे ॥१८॥**

सोम र सोमपुरुषका लागि उत्तरतिर बीचमा बलि दिनू ।

**ब्रह्मणे ब्रह्मपुरुषेभ्य इति मध्ये ॥१९॥**

ब्रह्म र ब्रह्मपुरुषका लागि घरको बीचमा बलि दिनू ।



**ऊर्ध्वमाकाशाय ॥२०॥**

आकाशका लागि माथितिर बलि दिनू ।

**दिवाचरेभ्यो भूतेभ्य इति स्थण्डिले ॥२१॥**

दिवाचरका लागि पवित्र जमिनमा बलि दिनू ।

**नक्तश्चरेभ्य इति नक्तम् ॥२२॥**

रातमा सोही स्थानमा "नक्तं चरेभ्य.." मन्त्रले रात्रिचरका लागि बलि दिनू ।

**ततो दक्षिणाग्रेषु दर्भेषु पित्रे पितामहाय प्रपितामहाय मात्रे पितामह्यै प्रपितामह्यै स्वनामगोत्राभ्याञ्च पिण्डनिवर्पणं कुर्यात् ॥२३॥**

यसपछि दक्षिणतिर टुप्पो फर्काइएका कुशमाथि पिता, पितामह, प्रपितामह, माता,

मातामह र प्रमातामहका लागि नामगोत्र उच्चारण गर्दै पिण्ड दिनू ।

**पिण्डानां चानुलेपनपुष्पधूपनैवेद्यादि दद्यात् ॥२४॥**

पिण्डसँगै अनुलेपन, फूल, धूप, नैवेद्य आदि अर्पण गर्नू ।

**उदकलशमुपनिधाय स्वस्त्ययनं वाचयेत् ॥२५॥**

यसपछि एक कलश पानी ब्राह्मणलाई दिई स्वस्तिवाचन गर्न लगाउनू ।

**श्वकाकश्वपचानां भुवि निर्वपेत् ॥२६॥**

कुकुर, काग र श्वपचका लागि जमिनमा बलि दिनू ।

**भिक्षाञ्च दद्यात् ॥२७॥**

यसपछि भिक्षा पनि दिनू ।



**अतिथिपूजने च परं फलमधितिष्ठेत् ॥२८॥**

अतिथि पूजनले ठूलो फल मिल्दछ ।

**सायमतिथिं प्राप्तं प्रयत्नेनार्चयेत् ॥२९॥**

साँझमा आएका अतिथिलाई यत्नपूर्वक पूजा गर्नू ।

**अनाशितमतिथिं गृहे न वासयेत् ॥३०॥**

नखुवाईकन अतिथिलाई घरमा बास बस्न नदिनू ।

**यथा वर्णानां ब्राह्मणः प्रभुर्यथा स्त्रीणां भर्ता तथा गृहस्थस्यातिथिः ॥३१॥**

सबै वर्णका लागि ब्राह्मण, स्त्रीका लागि पति पूजनीय भएजस्तै

गृहस्थका लागि अतिथि पूजनीय हुन्छ ।

**तत्पूजायां स्वर्गमाप्नोति ॥३२॥**

अतिथि पूजनले स्वर्ग मिल्दछ ।

**अतिथिर्यस्य भग्नाशो गृहात्प्रतिनिवर्तते ।**
**तस्मात्सुकृतमादाय दुष्कृतन्तु प्रयच्छति ॥३३॥**

जुन घरमा आएको अतिथि खिन्न भएर जान्छ उसले त्यो घरको लक्षण लिएर कुलक्षण छाडेर जान्छ ।

**एकरात्रं हि निवसन्नतिथिर्ब्राह्मणः स्मृतः ।**
**अनित्यं हि स्थितो यस्मात्तस्मादतिथिरुच्यते ॥३४॥**

एकरातका लागि बस्ने ब्राह्मणलाई अतिथि भनिन्छ । सधैं एकठाउँमा नबस्ने (थिति नभएको) हुनाले नै उसलाई अतिथि भनिन्छ ।



**नैकग्रामीणमतिथिं विप्रं साङ्गतिकं तथा ।**
**उपस्थितं गृहे विद्याद्भार्या यत्राग्नयोऽपि वा ॥३५॥**

एकै गाउँको, मित्र र जहाँ उसको घर, पत्नी र अग्नि छ त्यहाँ आउने ब्राह्मण अतिथि हुन्न ।

**यदि त्वतिथिधर्मेण क्षत्रियो गृहमागतः ।**
**भुक्तवत्सु च विप्रेषु कामं तमपि भोजयेत् ॥३६॥**

यदि क्षत्रिय अतिथि घरमा आए उसको पनि आदरसत्कार गर्नू र ब्राह्मण अतिथि भन्दा पछि उसलाई खुवाउनू ।

**वैश्यशूद्रावपि प्राप्तौ कुटुम्बेऽतिथिधर्मिणौ ।**
**भोजयेत्सह भृत्यैस्तावानृशंस्यं प्रयोजयन् ॥३७॥**

वैश्य वा शूद्र अतिथि आए घरका नोकरचाकरसँगै तिनलाई खुवाउनू र दयाभाव राख्नू ।

इतरानपि सख्यादीन्सम्प्रीत्या गृहमागतान् ।
प्रकृतान्नं यथाशक्ति भोजयेत्सह भार्यया ॥३८॥

अन्य अतिथि आएपनि श्रद्धापूर्वक गच्छे अनुसार उसलाई पत्नीले खाइसकेपछि खुवाउनू ।

स्ववासिनीं कुमारीश्च रोगिणीं गुर्विणीं तथा ।
अतिथिभ्योऽग्र एवैतान्भोजयेदविचारयन् ॥३९॥

बिहे भएर घर गई नसकेकी, कुमारी, विरामी महिला र गर्भिणीलाई
सोचविचार नगरीकन अतिथिभन्दा पहिले खुवाउनू ।

अदत्त्वा यस्तु एतेभ्यः पूर्वं भुङ्क्तेऽविचक्षणः ।
स भुञ्जानो न जानाति श्वगृध्रैर्जग्धिमात्मनः ॥४०॥

माथि बताइएका व्यक्तिहरूलाई नखुवाई पहिले आफैं खाने गृहस्थलाई
उ कुकुर र गिद्ध भएर जन्मन्छ भन्ने कुरा के थाहा ? ।



भुक्तवत्सु च विप्रेषु स्वेषु भृत्येषु चैव हि ।
भुञ्जीयातां ततः पश्चादवशिष्टं तु दम्पती ॥४१॥

यसरी अतिथि, मित्र, नातेदार, आश्रित जन सबैलाई खुवाई बचेको खाना पतिपत्नीले खानू ।

देवान्पितॄन्मनुष्याँश्च भृत्यान्गृह्याश्च देवताः ।
पूजयित्वा ततः पश्चाद्गृहस्थः शेषभुग्भवेत् ॥४२॥

देवता, पितृ र मानिस, नोकर र आश्रित जन र जीवलाई
खुवाइ सकेपछि प्रसन्न भई बचेको खाना खानू ।

अघं स केवलं भुङ्क्ते यः पचत्यात्मकारणात् ।
यज्ञशिष्टाशनं ह्येतत्सतामन्नं विधीयते ॥४३॥

आफ्नैलागि मात्र खाना पकाएर खानेले पाप खान्छ । यज्ञ गरी बचेको

खाना खानुलाई सत् अन्न भनी बताइएको छ ।

**स्वाध्यायेनाग्निहोत्रेण यज्ञेन तपसा तथा ।**
**न चाप्नोति गृही लोकान्यथा त्वतिथिपूजनात् ॥४४॥**

वेदाध्ययन, होम, यज्ञ, तपस्या गर्दा पनि त्यति फल पाइन्न जति
फल गृहस्थीले अतिथिको पूजा गरेर पाउँदछ ।

**सायंप्रातस्त्वतिथये प्रदद्यादासनोदके ।**
**अन्नं चैव यथाशक्त्या सत्कृत्य विधिपूर्वकम् ॥४५॥**

साँझबिहान आउने अतिथिलाई विधि र श्रद्धापूर्वक आसन र जल दिनू अनि
आफ्नो शक्ति अनुसारको खाना खुवाउनू ।

**प्रतिश्रयं तथा शय्यां पादाभ्यङ्गं सदीपकम् ।**
**प्रत्येकदानेनाप्नोति गोप्रदानसमं फलम् ॥४६॥**



अतिथिलाई वास दिँदा, ओछ्यान दिँदा, गोडामा दल्न अभ्यङ्ग दिँदा, उज्यालो आदि हरेक कुरा
दिँदा गोदान गरेजत्तिकै फल प्राप्त हुन्छ ।

**॥ समाप्तमिदं सप्तषष्टितमोऽध्यायः ॥६७॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको सतसठ्ठीयौँ अध्याय पूर्ण भयो ।



# अष्टषष्टितमोऽध्यायः
# (अठसठ्ठीयौँ अध्याय)

**चन्द्रार्कोपरागे नाश्नीयात् ॥१॥**

चन्द्रसूर्यको ग्रहणमा नखानू ।

**स्नात्वा मुक्तयोरश्नीयात् ॥२॥**

ग्रहण सकिएर नुहाएपछि मात्र खानू ।

**अमुक्तयोरस्तङ्गतयोः स्नात्वा दृष्ट्वा चापरेऽह्नि ॥३॥**

यदि ग्रहण नसकिँदै सूर्यचन्द्र अस्ताए भने नुहाउनू । तर भोलिपल्ट तिनको दर्शन नगरी नखानू ।

**न गोब्राह्मणोपरागेऽश्नीयात् ॥४॥**

ब्राह्मण वा गाईलाई विपत्ति पर्दा नखानू ।

**न राज्ञो व्यसने ॥५॥**

राजा कुनै दुर्घटनामा पर्दा पनि नखानू ।

**प्रवसिताग्निहोत्री यदाग्निहोत्रं कृतं मन्येत तदाश्नीयात् ॥६॥**

अग्निहोत्रीले यात्रामा रहँदा अब अग्निहोत्र गरिसक्ने समय भो भन्ने लागेपछि खानू ।

**उदा कृतं मन्येत वैश्वदेवमपि ॥७॥**

वैश्वदेव अब सकिने बेला भो भन्ने लागेपछि पनि खान सकिन्छ ।

**पर्वणि च यदा कृतं मन्येत पर्व ॥८॥**

औंसी आदि पर्वमा बलिकर्म सकिने समय बिचार गरी खानू ।

**नाश्नीयाच्चाजीर्णे ॥९॥**

अजीर्ण हुँदा नखानू ।

**नार्धरात्रे ॥१०॥**

आधारातमा नखानू ।

**न मध्याह्ने ॥११॥**

दिउस मध्याह्नमा नखानू ।

**न सन्ध्ययोः ॥१२॥**



साँझ (दुवै सन्ध्या) मा नखानू ।

**नार्द्रवासाः ॥१३॥**

भिजेका कपडा लगाएर नखानू ।

**नैकवासाः ॥१४॥**

एउटा मात्र वस्त्र लगाएर नखानू ।

**न नग्नः ॥१५॥**

नाङ्गै नखानू ।

**नोदके ॥१६॥**

पानी भित्र बसेर नखानू ।

**नोत्कुटकः ॥१७॥**

घुँडा टेकेर नखानू ।

**न भिन्नासनगतः ॥१८॥**

भाँचिएको वा बिग्रिएको आसनमा बसेर नखानू ।

**न च शयनगतः ॥१९॥**

सुतेर वा ओछ्यानमा बसेर नखानू ।

**न भिन्नभाजने ॥२०॥**

टुटेफुटेका भाँडामा नखानू ।



**नोत्सङ्गे ॥२१॥**

काखमा राखेर नखानू ।

**न भुवि ॥२२॥**

खाली भुइँमा बसेर वा राखेर नखानू ।

**न पाणौ ॥२३॥**

हत्केलामा राखेर (वा हत्केलाले) नखानू ।

**लवणं च यत्र दद्यात्तन्नाश्नीयात् ॥२४॥**

पकाइ सकेपछि नुन हालिएका कुरा नखानू ।

**न बालकान्निर्भर्त्सयेत् ॥२५॥**

सँगै बसेर खाइरहेका बालकलाई हैँला नगर्नू ।

**नैको मृष्टम् ॥२६॥**

मिठो खानेकुरा एक्लै नखानू ।

**नोद्धृतस्नेहम् ॥२७॥**

चिल्लो निकालेर बचेको निथार नखानू ।

**न दिवा धानाः ॥२८॥**

तारेको वा भुटिएको चिज दिउस नखानू ।



**न रात्रौ तिलसम्बन्धम् ॥२९॥**

तिलका परिकार वा तिल हालिएका कुरा रातमा नखानू ।

**न दधिसक्तून् ॥३०॥**

दही र जौजन्य पदार्थ रातमा नखानू ।

**न कोविदारवटपिप्पलशाणशाकम् ॥३१॥**

कोइरालो, वर र पीपलका मुण्टा र भाङको साग नखानू ।

**नादत्त्वा ॥३२॥**

अरुलाई नखुवाई नखानू ।

**नाहुत्वा ॥३३॥**

होम नगरी नखानू ।

**नानार्द्रपादः ॥३४॥**

सुक्खा गोडा लिएर नखानू (गोडा धोएर चिसै गोडाले खान बस्नू) ।

**नानार्द्रकरमुखश्च ॥३५॥**

हात र मुख नधोई नखानू ।

**नोच्छिष्टश्च घृतमादद्यात् ॥३६॥**

मुखमा वा हातमा जुठो हुँदा घिउ नखानू ।

**न चन्द्रार्कतारका निरीक्षेत ॥३७॥**

जुठै चन्द्रमा र तारा नहेर्नू ।



**न मूर्धानं स्पृशेत् ॥३८॥**

जुठै टाउको नछुनू ।

**न ब्रह्म कीर्तयेत् ॥३९॥**

जुठै वेदादि नपढ्नू ।

**प्राङ्मुखोऽश्नीयात् ॥४०॥**

पूर्वतिर फर्केर खानू ।

**दक्षिणामुखो वा ॥४१॥**

वा दक्षितिर फर्केर खानू ।

**अभिपूज्यान्नम् ॥४२॥**

अन्नलाई सम्मान र पूजा गरी खानू ।

**सुमनाः स्रग्व्यनुलिप्तश्च ॥४३॥**

प्रसन्न भई फूलको माला तथा चन्दनादि शरीरमा दलेर खानू ।

**न निःशेषकृत्स्यात् ॥४४॥**

पस्किएको खाना पूरै चाटीचुटी पारेर नखानू ।

**अन्यत्र दधिमधुसर्पिःपयःसक्तुपलमोदकेभ्यः ॥४५॥**

दही, मह, घिउ, दूध, सातू, मासु र मिठाइमा यो नियम लागू हुँदैन ।



**नाश्नीयाद्भार्यया सार्धं नाकाशे न तथोत्थितः ।**
**बहुनां प्रेक्षमाणानां नैकस्मिन्बहवस्तथा ॥४६॥**

पत्नीसँगै, खुल्ला आकाश मुनि, उभिएर, धेरै (भोकाएका) ले देखिएर
एक्लै वा धेरैले एउटा भोकोलाई देखाएर नखानू ।

**शून्यालये वह्निगृहे देवागारे कथञ्चन ।**
**पिबेन्नाञ्जलिना तोयं नातिसौहित्यमाचरेत् ॥४७॥**

कोही नभएको सुनसान घरमा, पवित्र अग्निलाई संरक्षण गरिएको घरमा, मठमन्दिरमा नखानू ।
अँजुलीमा थापेर वा अँजुलीले उभाएर पानी नपिउनू । उकुसमुकुस हुने गरी नखानू ।

**न तृतीयमथाश्नीयान्न चापथ्यं कथञ्चन ।**
**नातिप्रगे नातिसायं न सायं प्रातराशितः ॥४८॥**

नित्य खाइने दुई पटकको खाना भन्दा बढी तेश्रो पटक खाना नखानू । नपच्ने वा पचाउन कठिन हुने खानेकुरा नखानू । अति सबेरै र अति अबेर नखानू । बिहान खाएको खानाले अघाएको महशूष भए बेलुकी नखानू ।

**न भावदुष्टमश्नीयान्न भाण्डे भावदूषिते ॥**
**शयानः प्रौढपादश्च कृत्वा चैवावसक्थिकाम् ॥४९॥**

अशुद्ध भाव (खराब नियत) ले दिइएको र खराब भाँडाको प्रयोग भएको खाना नखानू । सुतीसुती, जमिनमा खुट्टा नराखी वा उचाली र कसिएको लुगा लगाएर खाना नखानू ।।

**॥ समाप्तमिदमष्टषष्टितमोऽध्यायः ॥६८॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको
अठसठ्ठीयौं अध्याय पूर्ण भयो ।



# एकोनसप्ततितमोऽध्यायः
# (उनन्सत्तरीयौं अध्याय)

**नाष्टमीचतुर्दशीपञ्चदशीषु स्त्रियमुयात् ॥१॥**

अष्टमी, चतुर्दशी र पूर्णिमाका दिनमा स्त्री-सहवास नगर्नू ।

**न श्राद्धं भुक्त्वा ॥२॥**

श्राद्ध खाएको दिनमा स्त्री-सहवास नगर्नू ।

**न दत्त्वा ॥३॥**

श्राद्ध गरेको वा श्राद्धमा केही दिएको दिन पनि स्त्री-सहवास नगर्नू ।

**नोपनिमन्त्रितः श्राद्धे ॥४॥**



श्राद्धको निम्ता पाएको दिन पनि स्त्री-सहवास नगर्नू ।

**न व्रती ॥५॥**

कुनै व्रत बसेको अवस्थामा पनि स्त्री-सहवास नगर्नू ।

**न दीक्षितः ॥६॥**

कुनै यज्ञमा यज्ञ गराउन नियुक्त भएपछि स्त्री-सहवास नगर्नू ।

**न देवायतनश्मशानशुन्यालयेषु ॥७॥**

मन्दिर, मसान र रित्तो घरमा स्त्री-सहवास नगर्नू ।

**न वृक्षमूलेषु ॥८॥**

वृक्षको फेद (वा झाडी) मा स्त्री-सहवास नगर्नू ।

**न दिवा ॥९॥**

दिउस स्त्री-सहवास नगर्नू ।

**न सन्ध्ययोः ॥१०॥**

साँझमा स्त्री-सहवास नगर्नू ।

**न मलिनाम् ॥११॥**

स्त्री अशुद्ध वा फोहोरी भएको अवस्थामा स्त्री-सहवास नगर्नू ।

**न मलिनः ॥१२॥**

आफू अशुद्ध वा फोहोरी भएको अवस्थामा स्त्री-सहवास नगर्नू ।



**नाभ्यक्ताम् ॥१३॥**

कुनै मलम आदि लेप दलिएकी वा अभिषेक गरिएकी स्त्रीलाई सहवास नगर्नू ।

**नाभ्यक्तः ॥१४॥**

आफैंले कुनै मलम वा लेप दलेको वा अभिषेक लिएको अवस्थामा स्त्री-सहवास नगर्नू ।

**न रोगार्ताम् ॥१५॥**

स्त्री रोगी हुँदा सहवास नगर्नू ।

**न रोगार्तः ॥१६॥**

आफैं रोगी हुँदा स्त्री-सहवास नगर्नू ।

**न हीनाङ्गीं नाधिकाङ्गीं तथैव च वयोऽधिकाम् ।**
**नोपेयाद्गुर्विणीं नारीं दीर्घमायुर्जिजीविषुः ॥१७॥**

कम अङ्ग (सानो) भएकी, धेरै अङ्ग (ठूलो) भएकी, बढी उमेरकी र गर्भिणी स्त्रीलाई लामो समय बाँच्न चाहनेले सम्भोग नगर्नू ।

**॥ समाप्तमिदमेकोनसप्ततितमोऽध्यायः ॥६९॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको
उनन्सत्तरीयौँ अध्याय पूर्ण भयो ।



## सप्ततितमोऽध्यायः
## (सत्तरीयौँ अध्याय)

**नार्द्रपादः सुप्यात् ॥१॥**

चिसो गोडा (धोएको वा भिजेको गोडा नपुछी) नसुत्नू ।

**नोत्तरापरशिराः ॥२॥**

उत्तर र पश्चिमतिर सिरान पारेर नसुत्नू ।

**न नग्नः ॥३॥**

नाङ्गै नसुत्नू ।

**नार्द्रवंशे ॥४॥**



भिजेको वा चिसो बाँस वा यसले बनेको साधनमाथि नसुत्नू ।

**नाकाशे ॥५॥**

खुल्ला आकाशमुनि नसुत्नू ।

**न पालाशे शयने ॥६॥**

पलासको खाटमाथि नसुत्नू ।

**न पञ्चदारुकृते ॥७॥**

पाँचथरी काठ मिसाएर बनाइएको खाटमा नसुत्नू ।

**न गजभग्नकृते ॥८॥**

हात्तीले निमेठोको रुखको काठले बनेको खाटमाथि नसुत्नू ।

**न विद्युद्दग्धकृते ॥९॥**

चटयाङ परेको रुखको काठबाट बनाइएको खाटमाथि नसुत्नू ।

**न भिन्ने ॥१०॥**

टुटफुट भएको खाटमाथि नसुत्नू ।

**नाग्निप्लुष्टे ॥११॥**

आगोले पोलेको काठले बनेको खाटमाथि नसुत्नू ।

**न घटासिक्तद्रुमजे ॥१२॥**

(ठेकी वा) पानीका जार आदि बनाइने दार आदिजस्ता काठको खाटमाथि नसुत्नू ।

**न श्मशानशून्यालयदेवतायतनेषु ॥१३॥**

मसान, सुनसान घर र मठमन्दिरमा नसुत्नू ।

**न चपलमध्ये ॥१४॥**

चकचके वा गोडा चलाइरहनेका बीचमा नसुत्नू ।

**न नारीमध्ये ॥१५॥**

स्त्रीहरूको बीचमा नसुत्नू ।

**न धान्यगोगुरुहुताशनसुराणामुपरि ॥१६॥**

अनाज, गाई, गुरु, अग्नि र देवता माथि नसुत्नू ।

**नोच्छिष्टो न दिवा सुप्यात्सन्ध्ययोर्न च भस्मनि ॥**
**देशे न चाशुचौ नार्द्रे न च पर्वतमस्तके ॥१७॥**

जुठै (वा खाँदै), दिउस, साँझमा, खरानी माथि, अशुद्ध स्थानमा,
चिसो स्थानमा र पर्वतको टुप्पोमा नसुत्नू ।

**॥ समाप्तमिदं सप्ततितमोऽध्यायः ॥७०॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको सत्तरीयौँ अध्याय पूर्ण भयो ।



## एकसप्ततितमोऽध्यायः
## (एकहत्तरौं अध्याय)

**अथ न कं च नावमन्येत ॥१॥**

कसैलाई पनि अपमान (वा तिरस्कार) नगर्नू ।

**न च हीनाधिकाङ्गान्मूर्खान्धनहीनानवहसेत् ॥२॥**

अधिक वा कम अङ्ग हुने, मूर्ख, अन्धो र गरिबलाई खिसी नगर्नू ।

**न हीनान्सेवेत ॥३॥**

(आचरणले) तुच्छहरूको सेवा नगर्नू ।

**स्वाध्यायविरोधि कर्म नाचरेत् ॥४॥**



आफैंले गर्ने वेदको अध्ययनमा भाँजो हाल्ने कामकारवाहीहरू नगर्नू ।

**वयोऽनुरूपं वेषं कुर्यात् ॥५॥**

उमेर अनुसारको लुगा लगाउनू (वस्त्रले वास्तविकतालाई छोप्न नखोज्नू) ।

**श्रुतस्याभिजनस्य धनस्य देशस्य च ॥६॥**

आफ्नो पढाइ, रूप, औकात र देश अनुसारका लुगा लगाउनू ।

**नोद्धतः ॥७॥**

धेर बोझ नबोक्नू ।

**नित्यं शास्त्राद्यवेक्षी स्यात् ॥८॥**

हरेक कुरालाई शास्त्रीय नजरले हेर्ने हुनू ।

**सति विभवे न जीर्णमलद्वासाः स्यात् ॥९॥**

क्षमता भएसम्म मैला वा फाटेका लुगा नलगाउनू ।

**न नास्तीत्यभिभाषेत ॥१०॥**

"छैन, केही पाएको छैन, वा मसँग केही छैन" यस्तो कहिल्यै नभन्नू ।

**निर्गन्धोग्रगन्धि रक्तञ्च माल्यं बिभृयात् ॥११॥**

बास्ना नआउने, घेर बास्ना आउने वा रातो माला नलगाउनू ।

**बिभृयाज्जलजं रक्तमपि ॥१२॥**

जलमा उत्पन्न फूलको भए रातो माला लगाउन हुन्छ ।



**यष्टिञ्च वैणवीम् ॥१३॥**

बाँसको लौरो बोक्नू ।

**कमण्डलुञ्च सोदकम् ॥१४॥**

जलपूर्ण कमण्डलु बोक्नू ।

**कार्पासमुपवीतम् ॥१५॥**

कपासको जनै लगाउनू ।

**रौक्मे च कुण्डले ॥१६॥**

दुवै कानमा सुनका कुण्डल वा मुन्द्रा लगाउनू ।

**नादित्यमुद्यन्तमीक्षेत ॥१७॥**

उदाइरहेका सूर्यलाई नहेर्नू ।

**नास्तं यान्तम् ॥१८॥**

अस्ताइरहेका सूर्यलाई पनि नहेर्नू ।

**न वाससा तिरोहितम् ॥१९॥**

लाइरहेको कपडाको प्वालबाट पनि सूर्यको प्रतिबिम्बलाई नहेर्नू ।

**न चादर्शजलमध्यगतम् ॥२०॥**

ऐना वा जलमा पनि सूर्यको प्रतिबिम्बलाई नहेर्नू ।

**न मध्याह्ने ॥२१॥**



मध्याह्नका सूर्यलाई नहेर्नू ।

**न क्रुद्धस्य गुरोर्मुखम् ॥२२॥**

रिसाइरहेका गुरुको मुखमा पनि नहेर्नू ।

**न तैलोदकयोः स्वां छायाम् ॥२३॥**

तेल वा पानीमा आफ्नो छाया नहेर्नू ।

**न मलवत्यादर्शे ॥२४॥**

मैलो वा (फुटेको) ऐना नहेर्नू ।

**न पत्नीं भोजनसमये ॥२५॥**

खाना खाइरहेकी पत्नीलाई नहेर्नू ।

**न स्त्रियं नग्नाम् ॥२६॥**

नाङ्गी स्त्रीलाई नहेर्नू ।

**न कं च न मेहमानम् ॥२७॥**

मलमूत्र त्याग गरिरहेकालाई पनि नहेर्नू ।

**न चालानभ्रष्टकुञ्जरम् ॥२८॥**

बन्धनबाट फुस्किएका हात्ती (वा अन्य डरलाग्दा जनावर) लाई नहेर्नू ।

**न च विषमस्थो वृषादियुद्धम् ॥२९॥**



आफू विषम परिस्थितिमा हुँदा साँढे आदि जनावर जुधेको पनि नहेर्नू ।

**नोन्मत्तम् ॥३०॥**

पागललाई नहेर्नू ।

**न मत्तम् ॥३१॥**

नसाले मात्तिएकालाई पनि नहेर्नू ।

**नामेध्यमग्नौ प्रक्षिपेत् ॥३२॥**

आगोमा अपवित्र कुरा नहाल्नू (वायु प्रदूषण हुने कुरा नबाल्नू) ।

**नासृक् ॥३३॥**

रगत पनि नफाल्नू ।

**न विषम् ॥३४॥**

विष पनि नहाल्नू ।

**अम्भस्यपि ॥३५॥**

आगोमा फाल्न नहुने भनिएका कुरा पानीमा पनि नफाल्नू ।

**नाग्निं लङ्घयेत् ॥३६॥**

आगोलाई ननाघ्नू ।

**न पादौ प्रतापयेत् ॥३७॥**

आगोमा गोडा नसेकाउनू (हात सेक्नू र तातो हातले गोडालाई तातो बनाउनू) ।



**न कुशेषु परिमृज्यात् ॥३८॥**

कुशले माडेर (वा कुशको सहायताले) शरीरको मयल ननिकाल्नू ।

**न कांस्यभाजने धावयेत् ॥३९॥**

काँसको भाँडामा गोडा नधुनू ।

**न पादं पादेन ॥४०॥**

गोडाले (अल्छी गरी) गोडा नधुनु ।

**न भुवमालिखेत् ॥४१॥**

जमिनमा नलेख्नू (नकोर्नू) ।

**न लोष्टमर्दी स्यात् ॥४२॥**

माटाका डल्ला हातले नफुटाउनू ।

**न तृणच्छेदी स्यात् ॥४३॥**

हातले घाँस चिमोट्ने वा लुछ्ने वा काट्ने काम नगर्नू ।

**न दन्तैर्नखलोमानिच्छिन्दात् ॥४४॥**

दाँतले नङ र रौं नटोक्नू, टुक्रा नपार्नू ।

**द्यूतं वर्जयेत् ॥४५॥**

जुवा नखेल्नू ।

**बालातपसेवाञ्च ॥४६॥**



भर्खर उदाएको कलिलो घाम नताप्नू ।

**वस्त्रोपानहमाल्योपवितान्यन्यधृतानि न धारयेत् ॥४७॥**

अरुले लगाएका कपडा, जुत्ता, माला र जनै नलगाउनू ।

**न शुद्राय मतिं दद्यात् ॥४८॥**

शूद्रलाई उपदेश वा सल्लाह नदिनू ।

**नोच्छिष्टहविषी ॥४९॥**

जुठो कुरा वा होमको प्रसाद शूद्रलाई नदिनू ।

**न तिलान् ॥५०॥**

तिल पनि नदिनू ।

**न चास्योपदिशेद्धर्मम् ॥५१॥**

धर्मको उपदेश पनि नदिनू ।

**न व्रतम् ॥५२॥**

व्रतोपदेश नगर्नू ।

**न संहताभ्यां पाणिभ्यां शिर उदरञ्च कण्डूयेत् ॥५३॥**

दुवै हातले (एकैपटक) आफ्नो टाउको वा पेट नकन्याउनू ।

**न दधिसुमनसी प्रत्याचक्षीत ॥५४॥**



दही र फूल कसैले दिए लिन्न नभन्नू, लिनू ।

**नात्मनः स्रजमपकर्षेत् ॥५५॥**

आफैंले आफूले लगाएको माला ननिकाल्नू (अरु कसैलाई निकाल्न लगाउनू) ।

**सुप्तं न प्रबोधयेत् ॥५६॥**

निदाएका व्यक्ति (आफूले मान्नुपर्ने) लाई नउठाउनू ।

**न रक्तं विरागयेत् ॥५७॥**

आफूप्रति अनुराग राख्नेलाई विरक्त नपार्नू ।

**नोदक्यामभिभाषेत ॥५८॥**

रजस्वला भएकी स्त्रीसँग नबोल्नू ।

**न म्लेच्छान्त्यजान् ॥५९॥**

म्लेच्छ र अन्त्यजसँग नबोल्नू ।

**अग्निदेवब्राह्मणसन्निधौ दक्षिणं पाणिमुद्धरेत् ॥६०॥**

अग्नि, देवता र ब्राह्मण सामुन्ने हुँदा ओढ्नेबाट दाहिने हात बाहिर (अगिल्तिर) निकाल्नू ।

**न परक्षेत्रे चरन्तीं गामाचक्षीत ॥६१॥**

अरुका खेतबारीमा चरिरहेकी गाईका बारेमा जग्गाधनीलाई नभन्नू ।

**न पिबन्तं वत्सकम् ॥६२॥**

बाच्छाबाच्छीले माउको दुध खाइरहेको कुरा नभन्नू ।



**नोद्धतान्प्रहर्षयेत् ॥६३॥**

उद्दण्डतापूर्वक अरुलाई हँसाउने काम नगर्नू ।

**न शूद्रराज्ये निवसेत् ॥६४॥**

शूद्र राजाका देशमा नबस्नू ।

**नाधार्मिकजनाकीर्णे ॥६५॥**

दुराचारीहरूको बाहुल्यता भएको देशमा पनि नबस्नू ।

**न सम्वसेद्वैद्यहीने ॥६६॥**

वैद्यहीन देशमा नबस्नू ।

**नोपसृष्टे ॥६७॥**

महामारी वा विपत्ति परेको देशमा नबस्नू ।

**न चिरं पर्वते ॥६८॥**

लामोसमय पहाड (टाकुरा) मा नबस्नू ।

**न वृथाचेष्टां कुर्यात् ॥६९॥**

प्रयोजनहीन कामकारवाही नगर्नू ।

**न नृत्यगीते ॥७०॥**

नाच्ने र गाउने नगर्नू ।

**नास्फोटनम् ॥७१॥**

आङ बटार्ने वा पड्काउने नगर्नू ।



**नाश्लीलं कीर्तयेत् ॥७२॥**

अश्लील शब्द नबोल्नू ।

**नानृतम् ॥७३॥**

झूट नबोल्नू ।

**नाप्रियम् ॥७४॥**

अप्रिय कुरा नबोल्नू ।

**न कं चिन्मर्मणि स्पृशेत् ॥७५॥**

कसैको मर्ममा (समवेदनशील अङ्ग) नछुनू ।

**नात्मानमवजानीयाद्दीर्घमायुर्जिजीविषुः ॥७६॥**

लामो आयु चाहने भए आफैँले आफूलाई नधिक्कार्नू ।

**चिरं सन्ध्योपासनं कुर्यात् ॥७७॥**

लामो आयु चाहनेले सन्ध्यावन्दन गर्नू ।

**न सर्पशस्त्रैः क्रीडेत् ॥७८॥**

सर्प र हतियारसँग नखेल्नू ।

**अनिमित्ततः खानि न स्पृशेत् ॥७९॥**

बिना प्रयोजन आफ्ना गुप्ताङ्गहरू नछुनू ।

**परस्य दण्डं नोद्यच्छेत् ॥८०॥**



अरुलाई हानी गर्ने इच्छाले लौरो नउभ्याउनू ।

**शास्यं शासनार्थं ताडयेत् ॥८१॥**

आइलाग्ने माथि जाइ लाग्नू ।

**तच्च वेणुदलेन रज्वा वा पृष्ठे ॥८२॥**

बाँसको सिम्किनु वा डोरीले त्यस्ताका ढाडमा हिर्काउनू ।

**देवब्राह्मणशास्त्रमहात्मनां परिवादं परिहरेत् ॥८३॥**

देवता, ब्राह्मण, शास्त्र र सन्तहरुसँग वादविवाद नगर्नू ।

**धर्मविरुद्धौ चार्थ कामौ ॥८४॥**

धर्म विरुद्ध कमाउन र काम गर्नतिर नलाग्नू ।

**लोकविद्विष्टञ्च धर्ममपि ॥८५॥**

लोकलाई अहित गर्ने धर्म (गर्न) तिर पनि नलाग्नू ।

**पर्वसु शान्तिहोमं कुर्यात् ॥८६॥**

पूर्णिमा र औंसी (वा पर्वहरू) मा शान्तिहोम गर्नू ।

**न तृणमपि छिन्द्यात् ॥८७॥**

ब्रह्मचर्यको अवधिभरी (अरु त कुरै छाडौं) घाँस समेत पनि नकाट्नू ।

**अलङ्कृतश्च तिष्ठेत् ॥८८॥**



चन्दन, माला आदि लगाएर बस्ने गर्नू ।

**एवमाचारसेवी स्यात् ॥८९॥**

यसरी उ सदाचारमा रहनू ।

**श्रुतिस्मृत्युदितं सम्यग्साधुभिश्च निषेवितम् ।**
**तमाचारं निषेवेत धर्मकामो जितेन्द्रियः ॥९०॥**

धर्म कमाउन चाहने जितेन्द्रिय पुरुषले श्रुति र स्मृतिले बताएका तथा साधुजनले आचरण गर्ने गरेका सदाचारलाई आफ्नो व्यवहारमा उतार्नू ।

**आचारल्लभते चायुराचारादीप्सितां गतिम् ।**
**आचाराद्धनमक्षय्यमाचाराद्धन्त्यलक्षणम् ॥९१॥**

सदाचारले नै आयु वृद्धि हुन्छ, सदाचारले नै मोक्षको प्राप्ति हुन्छ, सदाचारले नै

ननासिने धन प्राप्त हुन्छ तथा सदाचारले नै दशा हट्दछ ।

**सर्वलक्षणहीनोऽपि यः सदाचारवान्नरः।**
**श्रद्धधानोऽनसूयश्च शतं वर्षाणि जीवति ॥९२॥**

मानिसमा अरु कुनै लक्षण छैन तर सदाचार छ भने पनि उसको मान । सम्मान बढ्दछ र सय वर्षसम्म बाँच्दछ ।

**॥ समाप्तमिदमेकसप्ततितमोऽध्यायः ॥७१॥**



मोहन प्रसाद सापकोटाद्धारा भावानुवाद गरिएको विष्णुस्मृतिको
एकहत्तरौं अध्याय पूर्ण भयो ।



## द्विसप्ततितमोऽध्यायः
## (बहत्तरौं अध्याय)

**दमयमेन तिष्ठेत् ॥१॥**

मनलाई दृढतापूर्वक संयमित बनाउनू (दमन गर्नू) ।

**दमश्चेन्द्रियाणां प्रकीर्तितः ॥२॥**

इन्द्रियहरूलाई बासनामा लिप्त हुन नदिनू भनेको नै मनलाई संयमित बनाउनु (दम) हो ।

**दान्तस्यायं लोकः परश्च ॥३॥**

जसले आफूले आफैंलाई नियन्त्रण गरेको छ, उसले यो लोक र
परलोकमा चाहेको कुरा प्राप्त गर्दछ ।

**नादान्तस्य क्रिया का चित्समृध्यति ॥४॥**



जसले आफूले आफैंलाई नियन्त्रण गरेको छ, उसले गरेको कर्मको कुनै फल पाउँदैन ।

**दमः पवित्रं परमं मङ्गल्यं परमं दमः ।**
**दमेन सर्वमाप्नोति यत्किञ्चिन्मनसेच्छति ॥५॥**

“दम” शुद्धताको परम पवित्र साधन हो । “दम”ले मनले चिताएका सबै कुरा प्राप्त हुन्छन् ।

**दशार्धयुक्तेन रथेन यातो मनोवशेनार्यपथानुवर्तिना ।**
**तं चेद्रथं नापहरन्ति वाजिनस्तथागतं नावजयन्ति शत्रवः ॥६॥**

मनले लगाम समाएका र इन्द्रियरूपी दश वटा घोडा नारिएका रथमा चढेको रथीलाई,
घोडा नियन्त्रित भएसम्म शत्रुहरूले केही लछारपाटो लाउन सक्दैनन् ।

**आपूर्यमाणमचलप्रतिष्ठं समुद्रमापः प्रविशन्ति यद्वत् ।**
**तद्वत्कामा यं प्रविशन्ति सर्वे स शान्तिमाप्नोति न कामकामी ॥७॥**

जसरी सबैतिरका र सबै श्रोतका जल अन्तमा समुद्रमा पुगेर शान्त हुन्छन्, त्यसरी नै मन (र मन मार्फत इन्द्रिय) लाई वशमा राख्ने मानिसले शान्ति प्राप्त गर्दछ, नराख्नेले प्राप्त गर्दैन ।

**॥ समाप्तमिदं द्विसप्ततितमोऽध्यायः ॥७२॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको बहत्तरऔं अध्याय पूर्ण भयो ।



# त्रिसप्ततितमोऽध्यायः
# (त्रिहत्तरऔं अध्याय)

**अथ श्राद्धेप्सुः पूर्वेद्युर्ब्राह्मणानामन्त्रयेत् ॥१॥**

श्राद्धको अघिल्लो दिन ब्राह्मणहरूलाई निम्ता गर्नू ।

**द्वितीयेऽह्नि शुक्लपक्षस्य पूर्वाह्णे कृष्णपक्षस्यापराह्णे विप्रान्सुस्नातान्स्वाचान्तान्यथाभूयो विद्याक्रमेण कुशोत्तरेष्वासनेषूपवेशयेत् ॥२॥**

दोश्रो दिन (श्राद्धका दिन), शुक्लपक्ष भए पूर्वाह्णमा र कृष्णपक्ष भए अपराह्णमा, विधिपूर्वक नुहाई आचमन गरेका ब्राह्मणहरूलाई तिनको विद्वत्ता अनुसार क्रम मिलाएर कुशासनमा राख्नू ।

**द्वौ दैवे प्राङ्मुखौ त्रींश्च पित्र्य उदङ्मुखान् ॥३॥**

देवकर्ममा दुई र पितृकर्ममा तीन ब्राह्मणहरूलाई क्रमशः पूर्व र उत्तर फर्केर बस्ने व्यवस्था मिलाउनू ।

**एकैकमुभयत्र वेति ॥४॥**

अथवा दुवै कर्ममा एक ब्राह्मणलाई मात्र निम्ता गर्नू ।

**आमश्राद्धेषु काम्येषु च प्रथमपञ्चकेनाग्निं हुत्वा ॥५॥**

काँचो अन्नले गरिने वा कुनै चाहना पूर्तिका लागि गरिने श्राद्धमा अग्निलाई पहिले पाँच आहूति हाल्नू ।

**पशुश्राद्धेषु मध्यमपञ्चकेन ॥६॥**

पशु श्राद्धमा (बलि) मा मध्यम पञ्चक होम गर्नू ।

**अमावास्यासूक्तमपञ्चकेन ॥७॥**

औंसीश्राद्धमा अन्तिम पञ्चक होम गर्नू ।

**आग्रहायण्या ऊर्ध्वं कृष्णाष्टकासु च क्रमेणैव प्रथममध्यमोत्तमपञ्चकैः ॥८॥**

आग्रहायणी र अष्टका श्राद्धमा क्रमशः प्रथम, मध्यम र उत्तम पञ्चक होम गर्नू ।

**अन्वष्टकासु च ॥९॥**

अन्वष्टकामा पनि यसै गर्नू ।

**ततो ब्राह्मणानुज्ञातः पितॄनावाहयेत् ॥१०॥**

त्यसपछि ब्राह्मणहरूको अनुमतिले पितृहरूको आवाहन गर्नू ।

**अपयन्त्वसुरा इति द्वाभ्यां तिलैर्यातुधानानां विसर्जनं कृत्वा ॥११॥**

"अपयन्त्वसुरा..." आदि दुई मन्त्रले वरिपरी तील छरी राक्षसहरूको बाटो छेक्नू ।



**एत पितरः सर्वांस्तानग्न आ मे यन्त्वेतद्वः पितर इत्यावाहनं कृत्वा कुशतिलमिश्रेण गन्धोदकेन यास्तिष्ठन्त्यमृता वागिति यन्मे मातेति च पाद्यं निर्वर्त्य निवेद्यार्घ्यं कृत्वा निवेद्य च कुशतिलवस्त्रपुष्पालङ्कारधूपदीपैर्यथा शक्त्या विप्रान्समभ्यर्च्य घृतप्लुतमन्नमादायादित्या रुद्रा वसव इति वीक्ष्याग्नौ करवाणीत्युक्त्वा तत्र विप्रैः कुर्वित्युक्ते आहुतित्रयं दद्यात् ॥१२॥**

" एत पितरः सर्वांस्तानग्न..." आदि चार मन्त्रले पितृ र अग्निको आवाहन गर्नू । कुशतिल मिश्रित जलले " यास्तिष्ठन्त्यमृता..." आदि मन्त्र पढ्दै पाद्य तयार गर्नू । ब्राह्मणलाई अर्घ्य दिनू । यथाशक्य कुश, तिल, वस्त्र, फूल, अलङ्कार, धूप र दीप चढाउनू । त्यसपछि घिउ मिसाइएको अन्न लेराई "रुद्रा वसव इति वीक्ष्याग्नौ करवाणी..." आदि मन्त्रले होम गर्न ब्राह्मणको आज्ञा लिनू । आज्ञा पाएपछि तीन आहुति हाल्नू ।

**ये मामकाः पितर एतद्वः पितरोऽयं यज्ञ इति च हविरनुमन्त्रणं कृत्वा यथोपपन्नेषु पात्रेषु विशेषाद्रजतमयेष्वन्नं नमो विश्वेभ्यो देवेभ्य इत्यन्नमादौ प्राङ्मुखयोर्निवेदयेत् ॥१३॥**

“ ये मामकाः पितर एतद्वः...” आदि मन्त्रले हवि अभिमन्त्रण गर्नू । त्यसपछि उपलब्ध भाँडामा विशेषतः चाँदीको भाँडामा त्यो हवि हाली पूर्वतिर फर्की बसेका ब्राह्मणलाई “नमो विश्वेभ्यो देवेभ्य..” आदि मन्त्र पढ्दै दिनू ।

**पित्रे पितामहाय प्रपितामहाय च नामगोत्राभ्यामुदङ्मुखेषु ॥१४॥**

त्यसपछि पिता, पितामह र प्रपितामहको नाम, गोत्र आदि उच्चारण गर्दै उत्तरतिर पर्केका तीन ब्राह्मणलाई खान दिनू ।

**तददत्सु ब्राह्मणेषु यन्मे प्रकामादहोरात्रैर्यद्वक्रव्यादितिजपेत् ॥१५॥**

ब्राह्मण भोजन भइरहँदा “ यन्मे प्रकामादहोरात्रैः...” आदि मन्त्र पढ्नू ।

**इतिहासपुराणधर्मशास्त्राणि चेति ॥१६॥**

महाभारत, पुराण वा धर्मशास्त्र पढ्नू ।



**उच्छिष्टसन्निधौ दक्षिणाग्रेषु दर्भेषु पृथिवी दर्विरक्षतेत्येकं पिण्डं पित्रे निदध्यात् ॥१७॥**

ब्राह्मण भोजनको जुठो नजिकै दक्षिण फर्काएर राखिएका कुशमाथि “पृथिवी दर्विरक्षते...” मन्त्र पढ्दै एउटा पिण्ड पिताका लागि दिनू ।

**अन्तरीक्षं दर्विरक्षतेति द्वितीयं पितामहाय ॥१८॥**

“अन्तरीक्षं दर्विरक्षते..” आदि मन्त्रले पितामहलाई दोश्रो पिण्ड दिनू ।

**द्यौर्दर्विरक्षतेति तृतीयं प्रपितामहाय ॥१९॥**

“द्यौर्दर्विरक्षते...” मन्त्रले प्रपितामहलाई तेश्रो पिण्ड दिनू ।

**येऽत्र पितरः प्रेता इति वासो देयम् ॥२०॥**

“येऽत्र पितरः प्रेता...” मन्त्रले पिण्डमा वस्त्र चढाउनू ।

**वीरान्नः पितरो धत्त इत्यन्नम्॥२१॥**

"वीरान्नः पितरो धत्त.." मन्त्रले पितृलाई नैवेद्य चढाउनू ।

**अत्र पितरो मादयध्वं यथाभागमावृषयध्वमिति दर्भमूले करावघर्षणम्॥२२॥**

कुशले हातमा लागेका सिता "अत्र पितरो मादयध्वं यथाभागमावृषयध्व..." आदि मन्त्र पढी पिण्डमा खसाल्नू ।

**ऊर्जं वहन्तीरित्यनेन सोदकेन प्रदक्षिणं पिण्डानां विकिरणं कृत्वा अर्घपुष्पधूपालेपनान्नादिभक्ष्यभोज्यानि निवेदयेत्॥२३॥**

"ऊर्जं वहन्ती..." मन्त्रले पिण्डमा जल चढाउनू । त्यसपछि प्रदक्षिणा, अर्घ, फूल, धूप, दीप, चन्दन र नैवेद्य चढाउनू ।

**उदकपात्रं मधुघृततिलैः संयुक्तञ्च॥२४॥**



जलपात्रमा मह, घिउ र तिल मिसाई..।

**भुक्तवत्सु ब्राह्मणेषु तृप्तिमागतेषु मा मे क्षेष्ठेत्यन्नं सतृणमभ्युक्ष्यान्नविकिरमुच्छिष्टाग्रतः कृत्वा तृप्ता भवन्तः सम्पन्नमिति पृष्ट्वोदङ्मुखेष्वाचमनमादौ दत्त्वा ततः प्राङ्मुखेषु दत्त्वा ततश्च सुप्रोक्षितमिति श्राद्धदेशं संप्रोक्ष्य दर्भपाणिः सर्वं कुर्यात्॥२५॥**

भोजन गरिरहेका ब्राह्मणहरू तृप्त भइसकेपछि " मा मे क्षेष्ठे.." मन्त्रले जुठोमा र कुशमा जल छर्कनू । अनि "हजूरहरु सन्तुष्ट हुन भो ? श्राद्ध सकिएको हो त अब ?" भनी सोध्नू । पहिले उत्तर पर्केका र त्यसपछि पूर्व फर्केका ब्राह्मणलाई चुठ्न त्यो जल दिनू । त्यसपछि श्राद्धस्थलमा "सुप्रोक्षितम्..." मन्त्रले लिई जल छर्कनू । यी सबै कार्य गर्दा हातमा कुशको औंठी लगाउनू ।

**ततः प्राङ्मुखाग्रतो यन्मे राम इति प्रदक्षिणं कृत्वा प्रत्येत्य च यथाशक्ति दक्षिणाभिः समभ्यर्च्याभिरमन्तु भवन्त इत्युक्त्वा तैरुक्तोऽभिरताःस्म इति देवाश्च पितरश्चेत्यभिजपेत्॥२६॥**

यसपछि पूर्वाभिमुख ब्राह्मणहरुतिर फर्की "यन्मे राम..." मन्त्र पढ्दै देब्रबाट दाहिने हुँदै प्रदक्षिणा गर्नू र फेरी त्यही बाटो फर्कनू । "अभिरमन्तु भवन्त" मन्त्र पढ्दै जो सकेको दक्षिणा दिनू । ब्राह्मणहरुले "अभिरताःस्म" भनेपछि " देवाश्च पितरश्च.." मन्त्र जजमानले पढ्नू ।

**अक्षय्योदकञ्च नामगोत्राभ्यां दत्त्वा विश्वे देवाः प्रीयन्तामिति**
**प्राङ्मुखेभ्यस्ततः प्राञ्जलिरिदं तन्मनाः सुमना याचेत ॥२७॥**

नाम गोत्र उच्चारण गरी अक्षयोदक दिएपछि "विश्वे देवाः प्रीयन्ताम्" भन्दै पूर्वतिर फर्की हात जोडी शुद्ध मनले ब्राह्मणहरूसँग यी (तलका) आशिर्वाद लिनू ।

**दातारो नोऽभिवर्धन्तां वेदाः सन्ततिरेव च ।**
**श्रद्धा च नो मा व्यगमद्बहु देयं च नोऽस्त्विति ॥२८॥**

हाम्रो कुलमा दानीहरु बढून् । वेद र सन्तानको वृद्धि होस् । श्रद्धा र भाग्यले नछोडोस् । दिनलाई अपुग कहिल्यै नहोस् ।

**तथास्त्विति ब्रूयुः ॥२९॥**



ब्राह्मणहरूले "तथास्तु" भन्नू ।

**अन्नञ्च नो बहु भवेदतिथींश्च लभेमहि ।**
**याचितारश्च नः सन्तु मा च याचिष्म कञ्च न ॥३०॥**

अथवा "हामीसँग प्रसस्त अनाज होस्, अतिथि कहिल्यै नटुटुन्, हामीसँग माग्न आइरहुन्, हामीले कहिल्यै माग्न नपरोस्" भनी आशिर्वाद माग्नू ।

**इत्येताभ्यामाशिषः प्रतिगृह्य ॥३१॥**

यसरी दुई आशिर्वाद ब्राह्मणहरूबाट लिइसकेपछि..।

**वाजे वाज इति ततो ब्राह्मणाँश्च विसर्जयेत् ।**
**पूजयित्वा यथान्यायमनुव्रज्याभिवाद्य च ॥३२॥**

यसपछि " वाजे वाज इति..." मन्त्र पढ्दै परम्परा र रीतिरिवाज अनुसार गच्छे अनुसार पूजा

गरी देश, गाउँ वा घरपरिसरको सीमानासम्म पुऱ्याई ब्राह्मणहरूलाई बिदा गरेर फर्कनू ।

## ॥ समाप्तमिदं त्रिसप्ततितमोऽध्यायः ॥७३॥



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको त्रिहत्तरऔँ अध्याय पूर्ण भयो ।



# चतुःसप्ततितमोऽध्यायः
# (चौहत्तरऔँ अध्याय)

**अष्टकासु दैवपूर्वं शाकमांसापूपैः श्राद्धं कृत्वा त्वन्वष्टकास्वष्टकावद्वह्नौ दैवपूर्वमेवं हुत्वा मात्रे पितामह्यै प्रपितामह्यै च पूर्ववद्ब्राह्मणान्भोजयित्वा दक्षिणाभिश्चाभ्यर्च्यानुव्रज्य विसर्जयेत् ॥१॥**

प्रत्येक अष्टकामा पहिले देवताको सागपात, मासु र पक्वान्नले श्राद्ध गरि सकेपछि उसले प्रत्येक अन्वष्टकामा पनि पहिले देवतालाई आहूति हाली आमा, हजूरआमा र बूढी हजूरआमाको श्राद्ध गर्नू र पहिले बताएझैं ब्राह्मणलाई भोजन गराई, दक्षिणा दिई, अर्चना गरी आशिष लिई श्राद्ध विसर्जन गर्नू ।

**ततः कर्षूः कुर्यात् ॥२॥**

त्यसपछि कर्षू बनाउनू ।

**तन्मूले प्रागुदगग्न्युपसमाधानं कृत्वा पिण्डनिर्वपणम् ॥३॥**



कर्षूको खाल्टोमा उत्तरतिरबाट आगोका फिलिङ्गा दक्षिणतिर गुडाई त्यहाँ पिण्ड राख्नू ।

**कर्षूत्रयमूले पुरुषाणां कर्षूत्रयमूले स्त्रीणाम् ॥४॥**

एउटा कर्षूको फेदतिर तीन पुरुष पितृ र अर्को कर्षूको फेदतिर तीन स्त्री पितृका लागि पिण्ड दिनू ।

**पुरुषकर्षूत्रयं सान्नेनोदकेन पूरयेत् ॥५॥**

पुरुष कर्षू त्रयमा अन्नमिश्रित जल हाली भर्नू ।

**स्त्रीकर्षूत्रयं सान्नेन पयसा ॥६॥**

स्त्री कर्षू त्रयमा दूधमिश्रित अन्नले भर्नू ।

**दध्ना मांसेन पयसा प्रत्येकं कर्षूत्रयम् ॥७॥**

अनि सबै कर्षूलाई दही, मासु र दूधले भर्नू ।

**पूरयित्वा जपेदेतद्भवद्भ्यो भवतीभ्योऽस्तु चाक्षयम् ॥८॥**

यसरी कर्षू भरेपछि "भवद्भ्यो भवती भ्यो..." भन्ने मन्त्र पढ्नू ।

**॥ समाप्तमिदं चतुःसप्ततितमोऽध्यायः ॥७४॥**



मोहन प्रसाद सापकोटाद्धारा भावानुवाद गरिएको विष्णुस्मृतिको
चौहत्तरऔं अध्याय पूर्ण भयो ।



## पञ्चसप्ततितमोऽध्यायः
## (पचहत्तरौँ अध्याय)

**पितरि जीवति यः श्राद्धं कुर्यात्स येषां पिता कुर्यात्तेषां कुर्यात्॥१॥**

पिता जीवित हुनेले श्राद्ध गर्दा पिताले जसजसको श्राद्ध गर्दछन् तिनको पनि श्राद्ध गर्नू ।

**पितरि पितामहे च जीवति येषां पितामहः ॥२॥**

पिता र हजूरबा जीवित हुनेले श्राद्ध गर्दा हजूरबाले जसजसको श्राद्ध गर्दछन् तिनको पनि श्राद्ध गर्नू ।

**पितरि पितामहे प्रपितामहे च जीवति नैव कुर्यात्॥३॥**

पिता, हजूरबा र कुप्राबा (तीनै जना) जीवित हुनेले श्राद्ध नगर्नू ।

**यस्य पिता प्रेतः स्यात्स पित्रे पिण्डं निधाय पितामहात्परं द्वाभ्यां दद्यात्॥४॥**



पिता जीवित नहुने तर हजूरबा जीवित हुनेले श्राद्ध गर्दा पितालाई पिण्ड दिएपछि हजूरबाभन्दा माथिका दुई पुस्तालाई पिण्ड दिनू ।

**यस्य पिता पितामहश्च प्रेतौ स्यातां स ताभ्यां पिण्डौ दत्त्वा पितामहपितामहाय दद्यात्॥५॥**

पिता र हजूरबा जीवित नहुने तर कुप्राबा जीवित हुनेले श्राद्ध गर्दा पिता र हजूरबालाई पिण्ड दिएपछि हजूरबाका हजूरबालाई पिण्ड दिनू ।

**यस्य पितामहः प्रेतः स्यात्स तस्मै पिण्डं निधाय प्रपितामहात्परं द्वाभ्यां दद्यात्॥६॥**

हजूरबा जीवित नहुने तर पिता र कुप्राबा जीवित हुनेले श्राद्ध गर्दा हजूरबालाई पिण्ड दिएपछि कुप्राबा माथिका दुई पूस्तालाई पिण्ड दिनू ।

**मातामहानामप्येवं श्राद्धं कुर्याद्विचक्षणः ।**
**मन्त्रोहेण यथान्यायं शेषाणां मन्त्रवर्जितम्॥७॥**

यही विधिले समन्त्र विद्वानले मातामह आदिको पनि श्राद्ध गर्नू, अन्य नातेदारको बिना मन्त्र गर्नू ।

**॥ समाप्तमिदं पञ्चसप्ततितमोऽध्यायः ॥७५॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको पचहत्तरऔं अध्याय पूर्ण भयो ।



## षट्सप्ततितमोऽध्यायः
## (छयहत्तरौँ अध्याय)

**अमावस्यास्तिस्रोऽष्टकास्तिस्रोऽन्वष्टका माघी प्रौष्ठपद्यूर्ध्वं**
**कृष्णत्रयोदशी व्रीहियवपावकौ चेति ॥१॥**

औँसी, तीन अष्टका, तीन अन्वष्टका, मघा, प्रौष्ठपदी कृष्ण त्रयोदशी र
हिउँद र वर्षाका अन्न भित्र्याउने बेलामा पावक श्राद्ध गर्नू ।

**एताँस्तु श्राद्धकालान्वै नित्यानाह प्रजापतिः ।**
**श्राद्धमेतेष्वकुर्वाणो नरकं प्रतिपद्यते ॥२॥**

यिनै दिनलाई श्राद्ध गर्ने दिन भनी प्रजापतिले बताउनु भएको छ,
यिनमा श्राद्ध नगर्दा नरकको प्राप्ति हुन्छ ।

**॥ समाप्तमिदं षट्सप्ततितमोऽध्यायः ॥७६॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको छयहत्तरौँ अध्याय पूर्ण भयो ।

## सप्तसप्ततितमोऽध्यायः
## (सतहत्तरौं अध्याय)

**आदित्यसङ्क्रमणम् ॥१॥**

सूर्य सङ्क्रान्तिमा..।

**विषुवद्द्वयम् ॥२॥**

दुई विषुवत् (वैशाख र कार्तिक) सङ्क्रान्तिमा,.. ।

**विशेषेणायनद्वयम् ॥३॥**

विशेष गरी दुई अयनको (साउने र माघे) सङ्क्रान्तिमा, .. ।

**व्यतीपातः ॥४॥**



व्यतीपात योगमा,.. ।

**जन्मर्क्षम् ॥५॥**

जन्मनक्षत्रमा,..।

**अभ्युदयश्च ॥६॥**

र अभ्युदयकालमा ।

**एताँस्तु श्राद्धकालान्वै काम्यानाह प्रजापतिः ।**
**श्राद्धमेतेषु यद्दत्तं तदानन्त्याय कल्प्यते ॥७॥**

यिनै श्राद्ध गर्ने समय हुन् भनेर प्रजापतिले बताउनु भएको छ । यी श्राद्धमा जे दिइन्छ त्यो अनन्त फलदायी हुन्छ ।

**सन्ध्यारात्र्योर्न कर्तव्यं श्राद्धं खलु विचक्षणैः ।**
**तयोरपि च कर्तव्यं यदि स्याद्राहुदर्शनम् ॥८॥**

बुद्धिमानले दुवै सन्ध्यामा र रातमा कुनै पनि हालतमा श्राद्ध नगर्नू ।
तर, यदि ग्रहणकाल छ भने गर्न हुन्छ ।

**राहुदर्शनदत्तं हि श्राद्धमाचन्द्रतारकम् ।**
**गुणवत्सर्वकामीयं पितृणामुपतिष्ठते ॥९॥**

ग्रहणमा गरिएको श्राद्धले पितृहरु चन्द्र, तारा रहेसम्म प्रसन्न हुन्छन् । यो श्राद्ध गर्नेको सबै चाहना पूरा हुन्छ ।

**॥ समाप्तमिदं सप्तसप्ततितमोऽध्यायः ॥७७॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको सतहत्तरौं अध्याय पूर्ण भयो ।



## ॥ अथाष्टसप्ततितमोऽध्यायः ॥
## (अठहत्तरौं अध्याय)

**सततमादित्येऽह्नि श्राद्धं कुर्वन्नारोग्यमाप्नोति ॥१॥**

आइतवार गरिने श्राद्धले अनवरतको आरोग्यता पाइन्छ ।

**सौभाग्यं चान्द्रे ॥२॥**

सोमवारकोले सौभ्याग्य पाइन्छ ।

**समरविजयं कौजे ॥३॥**

मङ्गलबारको युद्धमा विजय पाइन्छ ।

**सर्वान् कामान् बौधे ॥४॥**



बुधबारकोले सबै चाहना पूरा हुन्छन् ।

**विद्यामभीष्टाञ्जैवे ॥५॥**

बिहीबारकोले चाहेको विद्या पाइन्छ ।

**धनं शौक्रे ॥६॥**

शुक्रबारकोले धन पाइन्छ ।

**जीवितं शनैश्चरे ॥७॥**

शनिबारकोले दीर्घायू पाइन्छ ।

**स्वर्गं कृत्तिकासु ॥८॥**

कृत्तिका नक्षत्रमा गरिने श्राद्धले स्वर्ग पाइन्छ ।

**अपत्यं रोहिणीषु ॥९॥**

रोहिणी नक्षत्रमा गरिने श्राद्धले सन्तान सुख पाइन्छ ।

**ब्रह्मवर्चस्यं सौम्ये ॥१०॥**

मृगशिरा नक्षत्रमा गरिने श्राद्धले ब्रह्मशक्ति पाइन्छ ।

**कर्मसिद्धिं रौद्रे ॥११॥**

आर्द्रा नक्षत्रमा गरिने श्राद्धले कर्म सिद्धि हुन्छ ।

**भुवं पुनर्वसौ ॥१२॥**

पुनर्वसु नक्षत्रमा गरिने श्राद्धले जमिन पाइन्छ ।



**पुष्टिं पुष्ये ॥१३॥**

पुष्य नक्षत्रमा गरिने श्राद्धले समृद्धि पाइन्छ ।

**श्रियं सार्पे ॥१४॥**

अश्लेषा नक्षत्रमा गरिने श्राद्धले समृद्धि एवं सम्पत्ति पाइन्छ ।

**सर्वान्कामान्पैत्र्ये ॥१५॥**

मघा नक्षत्रमा गरिने श्राद्धले सबै चाहना पूरा हुन्छन् ।

**सौभाग्यं भाग्ये ॥१६॥**

पूर्वफाल्गुनी नक्षत्रमा गरिने श्राद्धले सौभाग्य पाइन्छ ।

**धनमार्यमणे ॥१७॥**

उत्तराफाल्गुनी नक्षत्रमा गरिने श्राद्धले धन पाइन्छ ।

**ज्ञातिश्रैष्ठ्यं हस्ते ॥१८॥**

हस्ता नक्षत्रमा गरिने श्राद्धले आफन्तमा मानसम्मान पाइन्छ ।

**रूपवतः सुताँस्त्वाष्ट्रे ॥१९॥**

चित्रा नक्षत्रमा गरिने श्राद्धले रुपवान पुत्र पाइन्छ ।

**वाणिज्यसिद्धिं स्वातौ ॥२०॥**

स्वाती नक्षत्रमा गरिने श्राद्धले ब्यापारमा सिद्धि पाइन्छ ।

**कनकं विशाखासु ॥२१॥**



विशाषा नक्षत्रमा गरिने श्राद्धले सुन पाइन्छ ।

**मित्राणि मैत्रे ॥२२॥**

अनुराधा नक्षत्रमा गरिने श्राद्धले मित्र पाइन्छ ।

**राज्यं शाक्रे ॥२३॥**

ज्येष्ठा नक्षत्रमा गरिने श्राद्धले राज्य पाइन्छ ।

**कृषिं मूले ॥२४॥**

मूल नक्षत्रमा गरिने श्राद्धले कृषिफल पाइन्छ ।

**समुद्रयानसिद्धिमाप्ये ॥२५॥**

पूर्वाषाढा नक्षत्रमा गरिने श्राद्धले समुद्र यान पाइन्छ ।

**सर्वान्कामान्वैश्वदेवे ॥२६॥**

उत्तराषाढा नक्षत्रमा गरिने श्राद्धले सबै चाहना पूरा हुन्छ ।

**श्रैष्ठ्यमभिजिति ॥२७॥**

अभिजित नक्षत्रमा गरिने श्राद्धले श्रेष्ठता पाइन्छ ।

**सर्वान्कामाञ्छ्रवणे ॥२८॥**

श्रवण नक्षत्रमा गरिने श्राद्धले सबै चाहना पूरा हुन्छ ।

**लवणं वासवे ॥२९॥**



धनिष्ठा नक्षत्रमा गरिने श्राद्धले नुन पाइन्छ ।

**आरोग्यं वारुणे ॥३०॥**

शतभिषा नक्षत्रमा गरिने श्राद्धले आरोग्यता पाइन्छ ।

**कुप्यद्रव्यमाजे ॥३१॥**

पूर्वभाद्रपदा नक्षत्रमा गरिने श्राद्धले तामाका भाँडाकुँडा पाइन्छ ।

**गृहमाहिर्बुध्न्ये ॥३२॥**

उत्तरभाद्रपदा नक्षत्रमा गरिने श्राद्धले आवास (घर) पाइन्छ ।

**गाः पौष्णे ॥३३॥**

पुष्य नक्षत्रमा गरिने श्राद्धले गाईहरू पाइन्छ ।

**तुरङ्गमाश्विने ॥३४॥**

अश्विनी नक्षत्रमा गरिने श्राद्धले घोडा पाइन्छ ।

**जीवितं याम्ये ॥३५॥**

भरणी नक्षत्रमा गरिने श्राद्धले दीर्घायू पाइन्छ ।

**गृहं सुरूपाः स्त्रियः प्रतिपदि ॥३६॥**

परेवा तिथिमा गरिने श्राद्धले गृह र सुन्दर स्त्री पाइन्छ ।

**कन्यां वरदां द्वितीयायाम् ॥३७॥**

द्वितीया तिथिमा गरिने श्राद्धले सुन्दरी पुत्री र सुन्दर ज्वाइँ पाइन्छ ।



**सर्वान्कामाँस्तृतीयायाम् ॥३८॥**

तृतीया तिथिमा गरिने श्राद्धले सबै कामना पूरा हुन्छ ।

**पशूँश्चतुर्थ्याम् ॥३९॥**

चतुर्थी तिथिमा गरिने श्राद्धले घरपालुवा पशु पाइन्छ ।

**सुरूपान्सुतान् पञ्चम्याम् ॥४०॥**

पञ्चमी तिथिमा गरिने श्राद्धले सुन्दर पुत्रहरू पाइन्छ ।

**द्यूतविजयं षष्ठ्याम् ॥४१॥**

षष्ठी तिथिमा गरिने श्राद्धले जुवामा विजय दिन्छ ।

**कृषिं सप्तम्याम् ॥४२॥**

सप्तमी तिथिमा गरिने श्राद्धले कृषिफल पाइन्छ ।

**वाणिज्यमष्टम्याम् ॥४३॥**

अष्टमी तिथिमा गरिने श्राद्धले ब्यापारफल पाइन्छ ।

**पशून्नवम्याम् ॥४४॥**

नवमी तिथिमा गरिने श्राद्धले घरपालुवा पशु पाइन्छ ।

**वाजिनो दशम्याम् ॥४५॥**

दशमी तिथिमा गरिने श्राद्धले घोडा पाइन्छ ।

**ब्रह्मवर्चस्विनः पुत्रानेकादश्याम् ॥४६॥**



एकादशी तिथिमा गरिने श्राद्धले ब्रह्मतेज भएका पुत्रहरू पाइन्छ ।

**कनकरजतं द्वादश्याम् ॥४७॥**

द्वादशी तिथिमा गरिने श्राद्धले सुन र चाँदी पाइन्छ ।

**सौभाग्यं त्रयोदश्याम् ॥४८॥**

त्रयोदशी तिथिमा गरिने श्राद्धले सौभाग्य पाइन्छ ।

**सर्वकामान्पञ्चदश्याम् ॥४९॥**

पूर्णिमा तिथिमा गरिने श्राद्धले सबै चाहना पूरा हुन्छन् ।

**शस्त्रहतानां श्राद्धकर्मणि चतुर्दशी शस्ता ॥५०॥**

हतियारबाट मारिनेको श्राद्ध चतुर्दशी तिथिमा गर्नू उत्तम हुन्छ ।

**अपि पितृगीते गाथे भवतः ॥५१॥**

यस सम्बन्धमा यी दुई गाथा पितृहरुले गाउने गर्दछन् :-

**अपि जायेत सोऽस्माकं कुले कश्चिन्नरोत्तमः ।**
**प्रावृट्कालेऽसिते पक्षे त्रयोदश्यां समाहितः ॥५२॥**

हाम्रो कुलमा कुनै त्यस्तो उत्तम सन्तान जन्मेला र ! जसले वर्षा ऋतुका शुक्लपक्षका त्रयोदशीमा संयमित भई श्राद्ध गरोस् । वा यस्तो सन्तान जसले...।

**मधूत्कटेन यः श्राद्धं पायसेन समाचरेत् ।**
**कार्त्तिकं सकलं मासं प्राक्छाये कुञ्जरस्य च ॥५३॥**

मह, दूध मिश्रित खीरले कार्तिक महिनाभर अपराह्नमा
(हात्तिको छायाँ पूर्वतिर लागेपछि) श्राद्ध गरोस् ।



**॥ समाप्तमिदमष्टसप्ततितमोऽध्यायः ॥७८॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको अठहत्तरौं अध्याय पूर्ण भयो ।



## एकोनासीतितमोऽध्यायः
## (उनन्असीयौं अध्याय)

**अथ न नक्तं गृहीतेनोदकेन श्राद्धं कुर्यात् ॥१॥**

रातमा लेराइएको बासी पानीले श्राद्ध नगर्नू ।

**कुशाभावे कुशस्थाने काशान्दूर्वां वा दद्यात् ॥२॥**

कुश नहुँदा वा नपाईँदा काँस वा दूबोले श्राद्ध गर्नू ।

**वासोऽर्थे कार्पासोत्थं सूत्रम् ॥३॥**

वस्त्रका लागि कपासको (कपासले बुनेको) डोरो प्रयोग गर्नू ।

**दशां विवर्जयेद्यद्यप्यहतवस्त्रजा स्यात् ॥४॥**



नलाइएको भएपनि कपडाको फेटा (वा धजो) प्रयोग नगर्नू ।

**उग्रगन्धीन्यगन्धीनि कण्टकिजानि रक्तानि च पुष्पाणि ॥५॥**

धेरै गन्ध आउने, गन्धै नआउने, काँडादार वृक्षमा फुल्ने र राता फूलको प्रयोग नगर्नू ।

**शुक्लानि सुगन्धीनि कण्टकिजान्यपि जलजानि रक्तान्यपि दद्यात् ॥६॥**

सेता र हल्का बास्ना आउने काँडादार बोटका र जलमा उत्पन्न हुने राता फूल पनि प्रयोग गर्नू ।

**वसां मेदश्च दीपार्थे न दद्यात् ॥७॥**

मासी वा बोसो बत्ती बाल्न प्रयोग नगर्नू ।

**घृतं तैलं वा दद्यात् ॥८॥**

घिउ वा तेल प्रयोग गर्नू ।

**जीवजं सर्वधूपार्थे न दद्यात्॥९॥**

जीवजन्य सबै कुरा धूपमा प्रयोग नगर्नू ।

**मधुघृतसंयुक्तं गुग्गुलुं दद्यात्॥१०॥**

मह र घिउ मिसाइएको गोकुलधूप दिनू ।

**चन्दनकुङ्कुमकर्पूरागुरुपद्मकान्यनुलेपनार्थे॥११॥**

लेपनका लागि चन्दन, कुङ्कुम, कपूर, अगर र पद्मक (?) प्रयोग गर्नू ।

**न प्रत्यक्षलवणं दद्यात्॥१२॥**

पकाइसकेको कुरामा पुनः नुन नहाल्नू ।



**हस्ते न च घृतव्यञ्जनादि॥१३॥**

नाङ्गो हातले घिउ र व्यञ्जन नदिनू ।

**तैजसानि पात्राणि दद्यात्॥१४॥**

धातुका भाँडा प्रयोग गर्नू ।

**विशेषतो राजतानि॥१५॥**

विशेषतः (सके) चाँदीका भाँडा प्रयोग गर्नू ।

**खड्गकुतपकृष्णाजिनतिलसिद्धार्थकाक्षतानि च**
**पवित्राणि रक्षोघ्नानि च निदध्यात्॥१६॥**

खगौतो, च्याङ्ग्राका रौँले बुनेका राडी, कृष्णसार मृगको छाला, सग्ला अक्षता

तथा अन्य राक्षसलाई भगाउने पवित्र वस्तु प्रयोग गर्नू ।

**पिप्पलीमुकुन्दकभूस्तृणशिग्रुसर्षपसुरसासर्जकसुवर्चलकूष्माण्डा-लाबुवार्ताकुपालक्योपोदकीतण्डुलीयककुसुम्भपिण्डालुकमहिषीक्षीराणि वर्जयेत् ॥१७॥**

पिप्ला, पालुङ्गो (वा परबरजस्तो एक फल), भूतृण (?), सैजन, सर्सिउँ, फ्याक्से कन्द, विजयसाल, सोचर (कालो) नुन, कुभिण्डो, लौका, सेतोबिही, पालुङ्गो, पवै, लुँडे, कुसुम वा फूल विशेष ?, पिँडालु र भैंसीको दूध श्राद्धमा बर्जित छ ।

**राजमाषमसूरपर्युषितकृतलवणानि च ॥१८॥**

राजमाष (राज्मा ?), मसुरो, बासी खानेकुरा र कृत्रिम नुन पनि श्राद्धमा प्रयोग नगर्नू ।

**कोपं परिहेत् ॥१९॥**

श्राद्धमा नरिसाउनू ।



**नाश्रु पातयेत् ॥२०॥**

आँशु नचुहाउनू ।

**न त्वरां कुर्यात् ॥२१॥**

हतार नगर्नू ।

**घृतादिदाने तैजसानि पात्राणि खड्गपात्राणि फल्गुपात्राणि च प्रशस्तानि ॥२२॥**

घिउ आदि कुरा दान गर्न धातुका, गैँडाका खाग (आदि)बाट बनेका वा काठे डुम्रीका भाँडा उपयुक्त हुन्छन् ।

**अत्र च श्लोको भवति ॥२३॥**

यस सम्बन्धमा यस्तो श्लोक पाइन्छ- ।

**सौवर्णराजताभ्यां च खाड्गेनौदुम्बरेण च ।**
**दत्तमक्षय्यतां याति फल्गुपात्रेण चाप्यथ ॥२४॥**

सुन, चाँदी, खाग र डुम्री वा काठेडुम्रीका भाँडामा जे दिइन्छ त्यो कहिल्यै क्षय हुँदैन ।

**॥ समाप्तमिदमेकोनाशीतितमोऽध्यायः ॥७९॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको
उनान्असीयौँ अध्याय पूर्ण भयो ।



# अशीतितमोऽध्यायः
# (असीयौं अध्याय)

**तिलैर्व्रीहियवैर्माषैरद्भिर्मूलफलैः शाकैः श्यामाकैः प्रियङ्गुभिर्नीवारैर्मुद्गैर्गोधूमैश्च मासं प्रीयन्ते ॥१॥**

तील, चामल, जौ, माष, जल, कन्दमूल, फलफूल, सागपात, सावाँ धान, कागुनो, नाभो धान, मुगी र गहुँले पितृहरू एक महिनासम्म तृप्त हुन्छन् ।

**द्वौ मासौ मत्स्यमांसेन ॥२॥**

माछाको मासुले दुई महिना तृप्त हुन्छन् ।

**त्रीन्हारिणेन ॥३॥**

हरिणको मासुले तीन महिना तृप्त हुन्छन् ।



**चतुरश्चौरभ्रेण ॥४॥**

भेडाको मासुले चार महिना तृप्त हुन्छन् ।

**पञ्च शाकुनेन ॥५॥**

खान योग्य चराको मासुले पाँच महिना तृप्त हुन्छन् ।

**षट्छागेन ॥६॥**

बोकाको मासुले छ महिना तृप्त हुन्छन् ।

**सप्त रौरवेण ॥७॥**

रौरव नामक मृगको मासुले सात महिना तृप्त हुन्छन् ।

**अष्टौ पार्षतेन ॥८॥**

जरोयोको मासुले आठ महिना तृप्त हुन्छन् ।

**नव गावयेन ॥९॥**

गाईको मासुले नौ महिनासम्म तृप्त हुन्छन् ।

**दश माहिषेण ॥१०॥**

भैंसीको मासुले दश महिना तृप्त हुन्छन् ।

**एकादश तूपरेणाजेन ॥११॥**

सिङ नउम्रेको बोकाको मासुले एघार महिना तृप्त हुन्छन् ।

**सम्वत्सरं गव्येन पयसा तद्विकारैर्वा ॥१२॥**



गाईको दूध र त्यसले बनेका पदार्थबाट एक वर्षसम्म तृप्त हुन्छन् ।

**अत्र पितृगीता गाथा भवति ॥१३॥**

यस बारेमा यस्तो पितृगाथा पाइन्छ ।

**कालशाकं महाशल्कं मांसं वार्ध्रीणसस्य च ।**
**विषाणवर्ज्या ये खड्गास्तौँस्तु भक्षामहे सदा ॥१४॥**

कालशाक ?, महाशल्क ?, वार्ध्रीणस र खाग नभएको गैंडाको मासु हामी सधैं ग्रहण गर्दछौं ।

**॥ समाप्तमिदमशीतितमोऽध्यायः ॥८०॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको असीयौं अध्याय पूर्ण भयो ।



# एकाशीतितमोऽध्यायः
# (एकाशीयौं अध्याय)

**नान्नमासनमारोपयेत् ॥१॥**

पकाइएको अन्न बस्ने आसन माथि नराख्नू ।

**न पदा स्पृशेत् ॥२॥**

पकाइएको अन्नलाई लात्त (गोडा) ले नछुनू ।

**नावक्षुतं कुर्यात् ॥३॥**

पकाइएको अन्नमा पर्नेगरी हाच्छिउँ नगर्नू ।

**तिलैः सर्षपैर्वा यातुधानान्विसर्जयेत् ॥४॥**



तिल वा सर्सिउँ छर्केर राक्षस आदिलाई भगाउनू ।

**सम्वृते न श्राद्धं कुर्यात् ॥५॥**

वन्दस्थलमा श्राद्ध नगर्नू ।

**न रजस्वलां पश्येत् ॥६॥**

श्राद्धकर्मलाई रजस्वला भएकी स्त्रीले नहेरुन् ।

**न श्वानम् ॥७॥**

श्राद्धकर्मलाई कुकुरले नहेरोस् ।

**न विड्वराहम् ॥८॥**

श्राद्धकर्मलाई सुँगुरले नहेरोस् ।

**न ग्रामकुक्कुटम् ॥९॥**

श्राद्धकर्मलाई कुखुराले नहेरोस् ।

**प्रयत्नाच्छ्राद्धमजस्य दर्शयेत् ॥१०॥**

श्राद्धकर्मलाई बोकालाई प्रयत्नपूर्वक देखाउनू ।

**अश्नीयुर्ब्राह्मणाश्च वाग्यताः ॥११॥**

श्राद्धकर्ममा संलग्न ब्राह्मणहरूले नबोली खानू ।

**न वेष्टितशिरसः ॥१२॥**

श्राद्धकर्ममा नियुक्त ब्राह्मणले टाउको नछोपी खानू ।



**न सोपानत्काः ॥१३॥**

जुत्ता नलगाई खानू ।

**न पीठोपहितपादाः ॥१४॥**

कतै स्टुल आदिमा गोडा राखेर नखानू ।

**न हीनाङ्गाधिकाङ्गाः श्राद्धं पश्येयुः ॥१५॥**

हीनाङ्ग र अधिकाङ्ग भएकालाई श्राद्धकर्म नदेखाउनू ।

**न शूद्राः ॥१६॥**

शूद्रलाई नदेखाउनू ।

**न पतिताः ॥१७॥**

पतितलाई नदेखाउनू ।

**तत्कालं ब्राह्मणं ब्राह्मणानुमतेन वा भिक्षुकं भोजयेत् ॥१८॥**

यति श्राद्धकालमा कुनै भिक्षुक वा याचक आए ब्राह्मणको अनुमतिमा
तिनलाई केही दिनू वा खुवाउनू ।

**हविर्गुणान्न ब्राह्मणा ब्रूयुर्दात्रा पृष्टाः ॥१९॥**

जजमानले सोधे पनि श्राद्धमा अर्पण गरिएका कुराको गुणस्तरका
सम्बन्धमा ब्राह्मणहरूले केही नभन्नू ।

**यावदुष्णं भवत्यन्नं यावद्भुञ्जन्ति वाग्यताः ।
तावदश्नन्ति पितरो यावन्नोक्ता हविर्गुणाः ॥२०॥**

जबसम्म खाना तातो रहन्छ, जबसम्म ब्राह्मणहरू चूपचाप खाना खाइरहन्छन्, जबसम्म
श्राद्धमा ब्राह्मणहरूलाई अर्पण गरिएका कुराको गुणस्तरका बारेमा ब्राह्मणहरू
केही बोल्दैनन् तबसम्म पितृहरू खाइरहन्छन् ।



**सार्ववर्णिकमन्नाद्यं सन्नीयाप्लाव्य वारिणा ।
समुत्सृजेद्भुक्तवतामग्रतो विकिरन्भुवि ॥२१॥**

ब्राह्मण भोजन पछि तिनले खाएर बाँकी बचेको भाग तिनकै सामु भुइँमा
फिँजाउनू र त्यसमाथि जल सेचन गर्नू ।

**असंस्कृतप्रमीतानां त्यागिनां कुलयोषिताम् ।
उच्छिष्टं भागधेयं स्याद्दर्भेषु विकिरश्च यः ॥२२॥**

संस्कारहीन मरणबाट, अकाल मरणबाट वा कुलमा महिलाबाट बिछडिएका पितृ वा प्रेतका
लागि यो लगायतको कुशको सहायताले छरिएको शेष (जुठो) अन्न भोजन हुन्छ ।

**उच्छेषणं भूमिगतमजिह्मस्याशठस्य च ।
दासवर्गस्य तत्पित्र्ये भागधेयं प्रचक्षते ॥२३॥**

पितृको नाम लिई जुन भाँडाबाट अन्न भुइँमा खसालिन्छ त्यो नोकरचाकर र तिनका पितृको भाग भनी सम्झनू ।

**॥ समाप्तमिदमेकाशीतितमोऽध्यायः ॥८१॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको एकासीयौं अध्याय पूर्ण भयो ।



# द्व्यशीतितमोऽध्यायः
## (बयासीयौं अध्याय)

**दैवे कर्मणि ब्राह्मणं न परीक्षेत ॥१॥**

देवकर्ममा ब्राह्मणको परीक्षा नलिनू ।

**प्रयत्नात्पित्र्ये परीक्षेत ॥२॥**

पितृकर्ममा प्रयत्नपूर्वक परीक्षा लिनू ।

**हीनाधिकाङ्गान्विवर्जयेत् ॥३॥**

कम वा बढी अङ्ग भएकालाई छाड्नू ।

**विकर्मस्थांश्च ॥४॥**



वेदले भनेको भन्दा बाहेकका कर्म गर्नेलाई पनि छाड्नू ।

**वैडालव्रतिकान् ॥५॥**

विडालव्रतीलाई छाड्नू ।

**वृथालिङ्गिनः ॥६॥**

ढोँगीलाई छाड्नू ।

**नक्षत्रजीविनः ॥७॥**

ज्योतिषीलाई छाड्नू ।

**देवलकाँश्च ॥८॥**

मन्दिरको प्रसादमा बाँच्नेलाई पनि छाड्नू ।

**चिकित्सकान् ॥९॥**

वैद्यलाई छाड्नू ।

**अनूढापुत्रान् ॥१०॥**

अविवाहिता कन्याका पुत्रलाई छाड्नू ।

**तन्पुत्रान् ॥११॥**

तिनका पुत्रलाई पनि छाड्नू ।

**बहुयाजिनः ॥१२॥**

सामूहिक यज्ञ गराउनेलाई छाड्नू ।



**ग्रामयाजिनः ॥१३॥**

गाउँको यज्ञ गराउनेलाई पनि छाड्नू ।

**शुद्रयाजिनः ॥१४॥**

शूद्रको यज्ञ गराउनेलाई छाड्नू ।

**अयाज्ययाजिनः ॥१५॥**

वेदले यज्ञ नगराउनू भनिएकाहरुको यज्ञ गराउनेहरूलाई छाड्नू ।

**व्रात्यान् ॥१६॥**

व्रात्यलाई छाड्नू ।

**तद्याजिनः ॥१७॥**

व्रात्यको यज्ञ गराउनेलाई पनि छाड्नू ।

**पर्वकारान् ॥१८॥**

शास्त्रीय बिदामा (वा पर्वमा) कामगर्नेलाई पनि छाड्नू ।

**सूचकान् ॥१९॥**

दूत वा जासूसलाई पनि छाड्नू ।

**भृतकाध्यापकान् ॥२०॥**

पैसा लिएर वेद पढाउनेलाई छाड्नू ।

**भृतकाध्यापितान् ॥२१॥**



पैसा तिरेर वेद पढ्नेलाई पनि छाड्नू ।

**शूद्रान्नपुष्टान् ॥२२॥**

शूद्रको अन्नले पुष्ट भएकाहरुलाई छाड्नू ।

**पतितसंसर्गान् ॥२३॥**

पतितको सङ्गत गर्नेलाई छाड्नू ।

**अनधीयानान् ॥२४॥**

पढ्न नहुने दिन वेद पढ्नेलाई छाड्नू ।

**सन्ध्योपासनभ्रष्टान् ॥२५॥**

सन्ध्यावन्दन नगर्नेलाई छाड्नू ।

**राजसेवकान् ॥२६॥**

राजाका सेवकलाई छाड्नू ।

**नग्नान् ॥२७॥**

“नग्न” लाई छाड्नू ।

**पित्रा विवदमानान् ॥२८॥**

बाबुसँग विवाद गर्नेलाई छाड्नू ।

**पितृमातृगुर्वग्निस्वाध्यायत्यागिनश्चेति ॥२९॥**



बाउ, आमा, गुरु, होम र वेदाध्ययन त्याग गर्नेलाई छाड्नू ।

**ब्राह्मणापसदा ह्येते कथिताः पङ्क्तिदूषकाः ।**
**एतान्विवर्जयेद्यत्नाच्छ्राद्धकर्मणि पण्डितः ॥३०॥**

यस्ता ब्राह्मणलाई पङ्क्तिदूषक भनिएको छ, इनलाई श्राद्धमा प्रयत्नपूर्वक सहभागी नगराउनू ।

**॥ समाप्तमिदं द्व्यशीतितमोऽध्यायः ॥८२॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको बयासीयौँ अध्याय पूर्ण भयो ।



# त्र्यशीतितमोऽध्यायः
# (त्रियासीयौँ अध्याय)

**अथ पङ्क्तिपावनाः ॥१॥**

अब पङ्क्तिपावनका बारेमा भन्दछु ।

**त्रिणाचिकेतः ॥२॥**

त्रिणाचिकेत, ।

**पञ्चाग्निः ॥३॥**

पञ्चयज्ञ गर्ने, ।

**ज्येष्ठसामगः ॥४॥**



ज्येष्ठसाम पढेका, ।

**वेदपारगः ॥५॥**

वेद पढेजानेका, ।

**वेदाङ्गस्याप्येकस्य पारगः ॥६॥**

वेदका कुनै एक अङ्गमा पोख्त भएका, ।

**पुराणेतिहासव्याकरणपारगः ॥७॥**

पुराण, महाभारत वा व्याकरणमा पोख्त, ।

**धर्मशास्त्रस्याप्येकस्य पारगः ॥८॥**

कुनै एक धर्मशास्त्रमा पोख्त, ।

**तीर्थपूतः ॥९॥**

तीर्थ घुमेर पवित्र भएका,

**यज्ञपूतः ॥१०॥**

यज्ञ गरेर पवित्र भएका, ।

**तपःपूतः ॥११॥**

तपस्या गरेर पवित्र भएका, ।

**सत्यपूतः ॥१२॥**

सत्यमा रहेर पवित्र भएका, ।



**मन्त्रपूतः ॥१३॥**

मन्त्र जपेर शुद्ध भएका, ।

**गायत्रीजपनिरतः ॥१४॥**

नित्य गायत्री मन्त्र जप गर्ने, ।

**ब्रह्मदेयानुसन्तानः ॥१५॥**

वेदपढ्नेका कुलमा उत्पन्न, ।

**त्रिसुपर्णः ॥१६॥**

त्रिसुपर्ण मन्त्र पढेका, ।

**जामाता ॥१७॥**

ज्वाइँ, ।

**दौहित्रश्चेति पात्रम् ॥१८॥**

र छोरीको छोरो-यी पात्र ।

**विशेषेण च योगिनः ॥१९॥**

अभ्फ विशेषतः योगिजन  श्राद्धमा पङ्क्तिपावन हुन्छन् ।

**अत्र पितृगीता गाथा भवति ॥२०॥**

यस सम्बन्धमा पितृहरू यस्तो गाथा गाउँदछन् ।

**अपि स स्यात्कुलेऽस्माकं भोजयेद्यस्तु योगिनम् ।**

**विप्रं श्राद्धे प्रयत्नेन येन तृप्यामहे वयम् ॥२१॥**

हाम्रो कुलमा कुनै यस्तो पुरुष पनि जन्मिएला की जसले श्राद्धमा प्रयत्नपूर्वक
ब्राह्मण योगीलाई लेराएर श्राद्धमा खुवाउला र हामी तृप्त हुन पाउँला ! ।

**॥ समाप्तमिदं त्र्यशीतितमोऽध्यायः ॥८३॥**



मोहन प्रसाद सापकोटाद्धारा भावानुवाद गरिएको विष्णुस्मृतिको त्रियासीयौं अध्याय पूर्ण भयो ।



# चतुरशीतितमोऽध्यायः
# (चौरासीयौं अध्याय)

**न म्लेच्छविषयेश्राद्धं कुर्यात् ॥१॥**

म्लेच्छका देशमा श्राद्ध नगर्नू ।

**न गच्छेन्म्लेच्छविषयम् ॥२॥**

म्लेच्छ देशमा नजानू ।

**परनिपानेष्वपः पीत्वा तत्साम्यमुपगच्छतीति ॥३॥**

त्यस्ताका देशमा गई त्यहाँको पानी पिएपछि उ ती सरह हुन्छ ।

**चातुर्वर्ण्यव्यवस्थानं यस्मिन्देशे न विद्यते ।**
**स म्लेच्छदेशो विज्ञेय आयावर्तस्ततः परः ॥४॥**



जुन देशमा चतुर्वर्णको व्यवस्था छैन, त्यो म्लेच्छ देश भनेर जान,
जहाँ हुन्छ त्यो आर्यावर्त हो ।

**॥ समाप्तमिदं चतुरशीतितमोऽध्यायः ॥८४॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिका चौरासीयौं अध्याय पूर्ण भयो ।



# पञ्चाशीतितमोऽध्यायः
# (पचासीयौं अध्याय)

**अथ पुष्करेष्वक्षयं श्राद्धम् ॥१॥**

पुष्करक्षेत्रमा गरिएको श्राद्धको फल अक्षय हुन्छ ।

**जप्यहोमतपांसि च ॥२॥**

त्यहाँ गरिएका जप, होम र तप पनि ऋषय फलदायक हुन्छन् ।

**पुस्करे स्नानमात्रात्सर्वपापेभ्यः पूतो भवति ॥३॥**

पुष्करमा नुहाए मात्र पनि सबै पापबाट मुक्त हुन्छ ।

**एवमेव गयाशीर्षे ॥४॥**



यस्तै फल गशाशीर्षमा पनि पाइन्छ ।

**वटे ॥५॥**

वटक्षेत्रमा पनि पाइन्छ ।

**अमरकण्टकपर्वते ॥६॥**

अमरकण्टक पर्वतमा पनि पाइन्छ ।

**वराहपर्वते ॥७॥**

वराहपर्वतमा पनि पाइन्छ ।

**यत्र क्वचन नर्मदातीरे ॥८॥**

नर्मदाको तीर जहाँसुकै पनि पाइन्छ ।

**यमुनातीरे ॥९॥**

यमुनाको तीरमा पनि पाइन्छ ।

**गङ्गायां विशेषतः ॥१०॥**

विशेष गरी गङ्गामा पनि पाइन्छ ।

**कुशावर्ते ॥११॥**

कुशावर्तमा पाइन्छ ।

**बिन्दुके ॥१२॥**

बिन्दुकमा पाइन्छ ।



**नीलपर्वते ॥१३॥**

नीलपर्वतमा पाइन्छ ।

**कनखले ॥१४॥**

कनखलमा पाइन्छ ।

**कुब्जाम्रे ॥१५॥**
कुब्जाम्रमा पाइन्छ ।

**भृगुतुङ्गे ॥१६॥**

भृगुतुङ्गमा पाइन्छ ।

**केदारे ॥१७॥**

केदारनाथमा पाइन्छ ।

**महालये ॥१८॥**

महालयमा पाइन्छ ।

**नडन्तिकायाम् ॥१९॥**

नडन्तिकामा पाइन्छ ।

**सुगन्धायाम् ॥२०॥**

सुगन्धामा पाइन्छ ।

**शाकम्भर्याम् ॥२१॥**



शाकम्भरीमा पाइन्छ ।

**फल्गुतीर्थे ॥२२॥**

फल्गुतीर्थमा पाइन्छ ।

**महागङ्गायाम् ॥२३॥**

महागङ्गामा पाइन्छ ।

**त्रिहलिकाग्रामे ॥२४॥**

त्रिहलिकाग्राममा पाइन्छ ।

**कुमारधारायाम् ॥२५॥**

कुमारधारामा पाइन्छ ।

**प्रभासे ॥२६॥**

प्रभासमा पाइन्छ ।

**यत्र क्वचन सरस्वत्यां विशेषतः ॥२७॥**

सरस्वतीको कुनै पनि भागमा पाइन्छ ।

**गङ्गाद्वारे प्रयागे च गङ्गासागरसङ्गमे ।**
**सततं नैमिषारण्ये वाराणस्यां विशेषतः ॥२८॥**

हरिद्वार, प्रयाग, गङ्गासागर र नैमिषारण्यमा र विशेषतः बनारसमा पाइन्छ ।

**अगस्त्याश्रमे ॥२९॥**

अगस्त्यको आश्रममा पाइन्छ ।



**कण्वाश्रमे ॥३०॥**

कण्वाश्रममा पाइन्छ ।

**कौशिक्याम् ॥३१॥**

कोशीमा पाइन्छ ।

**सरयूतीरे ॥३२॥**

सरयूका किनारमा पाइन्छ ।

**शोणस्य ज्योतिषायाश्च सङ्गमे ॥३३॥**

शोण र ज्योतिषको दोभानमा पाइन्छ ।

**श्रीपर्वते ॥३४॥**

श्रीपर्वतमा पाइन्छ ।

**कालोदके ॥३५॥**

कालोदकमा पाइन्छ ।

**उत्तरमानसे ॥३६॥**

उत्तरमानसमा पाइन्छ ।

**वडवायाम् ॥३७॥**

वाडवामा पाइन्छ ।

**मतङ्गवाप्याम् ॥३८॥**


मातङ्गवापिमा पाइन्छ ।

**सप्तार्षे ॥३९॥**

सप्तार्षमा पाइन्छ ।

**विष्णुपदे ॥४०॥**

विष्णुपदमा पाइन्छ ।

**स्वर्गमार्गपदे ॥४१॥**

स्वर्गमार्गपदमा पाइन्छ ।

**गोदावर्याम् ॥४२॥**

गोदावरीमा पाइन्छ ।

**गोमत्याम् ॥४३॥**

गोमतीमा पाइन्छ ।

**वेत्रवत्याम् ॥४४॥**

वेत्रवतीमा पाइन्छ ।

**विपाशायाम् ॥४५॥**

विपाशामा पाइन्छ ।

**वितस्तायाम् ॥४६॥**

वितस्तामा पाइन्छ ।

**शतद्रुतीरे ॥४७॥**



शतद्रुका तीरमा पाइन्छ ।

**चन्द्रभागायाम् ॥४८॥**

चन्द्रभागामा पाइन्छ

**ईरावत्याम् ॥४९॥**

ईरावतीमा पाइन्छ ।

**सिन्धोस्तीरे ॥५०॥**

सिन्धुका तीरमा पाइन्छ ।

**दक्षिणे पञ्चनदे ॥५१॥**

दक्षिणी पञ्चनदमा पाइन्छ ।

**औसजे ॥५२॥**

औसजमा पाइन्छ

**एवमादिष्वथान्येषु तीर्थेषु ॥५३॥**

यी र अन्य यस्तै तीर्थहरूमा ।

**सरिद्वरासु ॥५४॥**

पवित्र नदीका किनारमा ।

**सर्वेष्वपि स्वभावेषु ॥५५॥**

सबै दैवी शक्तिको जन्मस्थलमा ।



**पुलिनेषु ॥५६॥**

बगरमा ।

**स्रवणेषु ॥५७॥**

झरनाको नजिक

**पर्वतेषु ॥५८॥**

पर्वतहरूमा ।

**निकुञ्जेषु ॥५९॥**

निकुञ्जहरूमा ।

**वनेषु ॥६०॥**

वनहरूमा ।

**उपवनेषु ॥६१॥**

उपवनहरूमा ।

**गोमयेनोपलिप्तेषु गृहेषु ॥६२॥**

गोबर लिपेको घरहरूमा र ।

**मनोज्ञेषु ॥६३॥**

मन हर्ने स्थलमा पाइन्छ ।

**अत्र च पितृगीता गाथा भवन्ति ॥६४॥**

यससम्बन्धमा पितृगीता यसरी गाइन्छ ।



**कुलेऽस्माकं स जन्तुः स्याद्यो नो  दद्याज्जलाञ्जलीन् ।**
**नदीषु बहुतोयासु शीतलासु विशेषतः ॥६५॥**

"हाम्रो कुलमा यस्तो सन्तान पनि जन्मिएला कि जसले धेरे पानी हुने हिमालबाट बहँदै आएको नदीमा हाम्रा लागि जलाञ्जली देओस्" ।

**अपि जायेत सोऽस्माकं कुले कश्चिन्नरोत्तमः ।**
**गयाशीर्षे वटे श्राद्धं यो नः कुर्यात्समाहितः ॥६६॥**

"हाम्रो कुलमा यस्तो सन्तान पनि जन्मिएला कि जसले गयाशीर वा वटक्षेत्रमा शुद्ध र पवित्र मनले हाम्रा लागि श्राद्ध गरोस्" ।

**एष्टव्या बहवः पुत्रा यद्येकोऽपि गयां व्रजेत् ।**
**यजेत वाऽश्वमेधेन नीलं वा वृषमुत्सृजेत् ॥६७॥**

धेरै सन्तानमध्येको एउटा सन्तानले पनि यदि गयामा गएर श्राद्ध गर्दछ वा नीलवृष

दान गर्दछ भने उसले अश्वमेध यज्ञ गरेको फल प्राप्त गर्दछ ।



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको पचासीयौँ अध्याय पूर्ण भयो ।



## षडशीतितमोऽध्यायः
## (छयासीऔं अध्याय)

**अथ वृषोत्सर्गः ॥१॥**

अब वृषोत्सर्गका बारेमा बताउँदछु ।

**कार्त्तिक्यामाश्वयुज्यां वा ॥२॥**

कार्तिक वा आश्विनको पूर्णिमामा ।

**तत्रादावेव वृषभं परीक्षेत ॥३॥**

यो कार्य गर्नू अघि साँढेको परीक्षा (जाँचपडताल) गर्नू ।

**जीवद्वत्सायाः पयस्विन्याः पुत्रम् ॥४॥**



त्यो साँढे जीवित लैनू गाईको बाँचिरहने खालको साँढेमध्येको हुनु पर्दछ ।

**सर्वलक्षणोपेतम् ॥५॥**

त्यो साँढेमा सबै लक्षण हुनुपर्दछ ।

**नीलम् ॥६॥**

त्यो नीलवृष हुनु पर्दछ ।

**लोहितं वा मुखपुच्छपादशृङ्गशुक्लम् ॥७॥**

वा रातो रङको तर मुख, पुच्छर र खुट्टा सेतो भएको हुनु पर्दछ ।

**यूथस्याच्छादकम् ॥८॥**

आफ्नो बथानलाई संरक्षण गरिरहेको हुनुपर्दछ ।

**ततो गवां मध्ये सुसमिद्धमग्निं परिस्तीर्य पौष्णं चरुं पयसा श्रपयित्वा पूषा गा अन्वेतु न इह रतिरिति च हुत्वा वृषमयस्कारस्त्वङ्कयेत् ॥९॥**

त्यसपछि गाई बीचमा विधिपूर्वक अग्नि जगाई, कुश छरी,
खीर पकाएर "पूषा गाा..." मन्त्रले होम हाल्नू र साँढेलाई डाम्नू ।

**एकस्मिन्पार्श्वे चक्रेणापरस्मिन्पार्श्वे शूलेन ॥१०॥**

डाम्दा एकातिर चक्रले र अर्कोतिर त्रिशूलले डाम्नू ।

**अङ्कितं च हिरण्यवर्णा इति चतसृभिः शं नो देवीरिति च स्नापयेत् ॥११॥**

डामि सकेपछि "हिरण्यवर्ण.." आदि चार मन्त्रले र "शं नो देवी.."
मन्त्रले साँढेलाई नुहाइ दिनू ।



**स्नातमलङ्कृतं स्नातालङ्कृताभिश्चतसृभिर्वत्सतरीभिः सार्धमानीय रुद्रान्पुरुषसूक्तं कूष्माण्डीश्च जपेत् ॥१२॥**

नुहाइ दिएपछि वस्त्रालङ्कारले सिँगारी यसैगरी नुहाएर सिँगारिएका चार गाईसँगै साँढेलाई नजिकै लेराउनू । यतिबेला रुद्र, पुरुषसूक्त र कूष्माण्डी मन्त्र पढ्नू ।

**पिता वत्सनामिति वृषभस्य दक्षिणे कर्णे पठेत् ॥१३॥**

त्यसपछि साँढेको दाहिने कानमा "पिता वत्सना..." मन्त्र पढेर सुनाउनू ।

**इमञ्च ॥१४॥**

अनि यी मन्त्र पनि ।

**वृषो हि भगवान्धर्मश्चतुष्पादः प्रकीर्तितः ।**
**वृणोमि तमहं भक्त्या स मे रक्षतु सर्वतः ॥१५॥**

साँढे नै चारखुट्टेकारूपमा धर्म भगवान् हुन् । यसैले मैले पूजाको साधनकारूपमा यिनलाई छानेको छु । यिनलै मलाई पूर्णरूपमा संरक्षण गरुन् ।

**एवं युवानं पतिं वो ददामि तेन क्रीडन्तीश्चरत प्रियेण ।**
**मा हास्महि प्रजया मा तनूभिर्मा रधाम द्विषते सोम राजन्॥१६॥**

यी जवान साँढेलाई हे गाईहरू मैले पतिकारूपमा समर्पण गरेको छु । हजूरहरू निर्धक्कसँग प्रेमपूर्वक विचरण गर्नू होस् । हे राजा सोम ! हामीमा सन्तानको कमी नहोस्, हाम्रो आयु लामो होस् र शत्रुबाट हामीले पीडित हुन नपरोस् ।

**वृषं वत्सतरीयुक्तमैशान्यां कारयेद्दिशि ।**
**होतुर्वस्त्रयुगं दद्यात्सुवर्णं कांस्यमेव च॥१७॥**

त्यसपछि त्यो साँढेलाई गाई चार बाच्छी सहित पूर्वोत्तर दिशामा धपाउँदै लैजानू । एक जोर लुगा, सुन, काँसका भाँडा दान गर्नू ।

**अयस्कारस्य दातव्यं वेतनं मनसेप्सितम् ।**

**भोजनं बहुसर्पिष्कं ब्राह्मणाँश्चात्र भोजयेत्॥१८॥**

लोहकारले यसअवसरमा जेजति पारिश्रमिक माग्दछ दिनू । ब्राह्मणहरूलाई धेरै घिउ हालिएको भोजन खुवाउनू ।

**उत्सृष्टो वृषभो यस्मिन्पिबत्यथ जलाशये ।**
**जलाशयं तत्सकलं पितॄँस्तस्योपतिष्ठति॥१९॥**

यसपछि डामेर स्वतन्त्र छाडिएको त्यो साँढेले जुनसुकै पोखरी वा तलाउमा गएर पानी पिउँदछ, त्यो पूरै पवित्र हुन्छ र छाड्नेका पितृ त्यहाँ उपस्थित हुन्छन् ।

**श्रृङ्गेणोल्लिखते भूमिं यत्र क्वचन दर्पितः॥**
**पितृणामन्नपानं तत्प्रभूतमुपतिष्ठति॥२०॥**

यस्तो साँढेले जहाँको जमिन गएर बलको गर्बगर्दै सिङले खोस्रन्छ, त्यो जमिनबाट पितृलाई सन्तुष्ट पार्ने गरी प्रशस्त अन्नपात उब्जनी आउँदछ ।

## ॥ समाप्तमिदं षडशीतितमोऽध्यायः ॥८६॥



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको छयासीयौं अध्याय पूर्ण भयो ।



# सप्ताशीतितमोऽध्यायः
# (सतासीयौं अध्याय)

**अथ वैशाख्यं पौर्णमास्यां कृष्णमृगाजिनं सुवर्णश्रृङ्गं रौप्यखुरं मौक्तिकलाङ्गूलभूषितं कृत्वा आविके च वस्त्रे प्रसारयेत् ॥१॥**

वैशाख पूर्णिमाका दिन उनको वस्त्रमाथि सुनमा सुन, खुरमा चाँदी र पुच्छरमा मोतीका मालाले सुसज्जित कालो मृगको छाला फिँजाएर राख्नू ।

**ततस्तिलैः प्रच्छादयेत् ॥२॥**

मृगचर्मले नढाकेको उनको वस्त्रलाई तिलले ढाक्नू ।

**सुवर्णनाभिं च कुर्यात् ॥३॥**

सुनको नाइटो बनाउनू ।



**अहतेन वासोयुगेन प्रच्छादयेत् ॥४॥**

नयाँ एक जोर वस्त्रले त्यो  छाला पूरै ढाक्नू ।

**सर्वगन्धरत्नैश्चालङ्कृतं कुर्यात् ॥५॥**

यसमाथि सबैखालका सुगन्ध, रत्न र अलङ्कार राखेर सजाउनू ।

**चतसृषु दिक्षु चत्वारि तैजसानि पात्राणि क्षीरदधिमधुघृतपुर्णानि निधायाहिताग्नये ब्राह्मणायालंकृताय वासोयुगेन प्रच्छादिताय दद्यात् ॥६॥**

यसपछि चार दिशामा पूर्वबाट क्रमशः तामा, चाँदी, काँस र सुनका क्रमशः दूध, दही, मह र घिउले भरिएका भाँडा राखी कुनै अग्निहोत्री ब्राह्मणलाई एक जोर कपडा सहित त्यो छाला दान गर्नू ।

**अत्र च गाथा भवन्ति ॥७॥**

यस सम्बन्धमा यस्था गाथा गाइन्छ ।

**यस्तु कृष्णाजिनं दद्यात्सखुरं श्रृङ्गसंयुतम् ।**
**तिलैः प्रच्छाद्य वासोभिः सर्वरत्नैरलङ्कृताम् ॥८॥**

जसले खुर र सिङ सहितको कृष्णमृगचर्म तिल र वस्त्रले छोपी, सबै खाले रत्नले सजाएर दान गर्दछ...।

**ससमुद्रगुहा तेन सशैलवनकानना ।**
**चतुरन्ता भवेद्दत्ता पृथिवी नात्र संशयः ॥९॥**

उसले चारैतिर समुद्र, गुफा, पर्वत, वन, उपवन सहितको पृथ्वी दान गरेको फल प्राप्त गर्दछ ।

**कृष्णाजिने तिलान्कृत्वा हिरण्यं मधुसर्पिषी ।**
**ददाति यस्तु विप्राय सर्वं तरति दुष्कृतम् ॥१०॥**

जसले तिल, सुन, मह, घिउ राखेर कृष्णमृगचर्म सबै ब्राह्मणलाई दान गर्दछ, उसका दुष्कर्म नाश हुन्छन् ।



**॥ समाप्तमिदं सप्ताशीतितमोऽध्यायः ॥८७॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको सतासीयौं अध्याय पूर्ण भयो ।



## अष्टाशीतितमोऽध्यायः
## (अठासीयौं अध्याय)

**अथ प्रसूयमाना गौः पृथिवी भवति ॥१॥**

ब्याउन लागेकी गाई पृथ्वी समान हुन्छिन् ।

**तामलङ्कृतां ब्राह्मणाय दत्त्वा पृथिवीदानफलमाप्नोति ॥२॥**

यस्ती गाईलाई सिँगारेर ब्राह्मणलाई दिँदा पृथ्वी दान गरेको फल पाइन्छ ।

**अत्र गाथा भवति ॥३॥**

यस सम्बन्धमा यस्तो गाथा गाइन्छ ।

**सवत्सारोमतुल्यानि युगान्युभयतोमुखीम् ।**
**दत्त्वा स्वर्गमवाप्नोति श्रद्दधानः समाहितः ॥४॥**



बियाउन लागेको गाई र बाच्छाका शरीरमा जति रौं हुन्छन् त्यस्ती गाईलाई श्रद्धापूर्वक दान गर्ने व्यक्ति त्यति नै युगसम्म स्वर्गमा बस्न पाउँदछ ।

**॥ समाप्तमिदमष्टाशीतितमोऽध्यायः ॥८८॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको अठासीयौं अध्याय पूर्ण भयो ।



# एकोननवतितमोऽध्यायः
# (उनान्नब्बेऔं अध्याय)

**मासः कार्त्तिकोऽग्निदैवत्यः ॥१॥**

कार्तिक महिना अग्नि देवताको महिना हो ।

**अग्निश्च सर्वदेवानां मुखम् ॥२॥**

अग्नि नै सबै देवताको मुख हो ।

**तस्मात्तु कार्त्तिकं मासं बहिःस्नायी गायत्रीजपनिरतः सकृदेव हविष्याशी संवत्सरकृतात्पापात्पूतो भवति ॥३॥**

त्यसैले कार्तिक महिनामा बाहिर नुहाएर, गायत्री जप गर्दै, संयमतापूर्वक होम गर्नाले वर्ष दिनसम्म गरेका पाप नाश भई पवित्र हुन्छ ।



**कार्त्तिकं सकलं मासं नित्यस्नायी जितेन्द्रियः ।**
**जपन्हविष्यभुग्दान्तः सर्वपापैः प्रमुच्यते ॥४॥**

कार्तिक महिनाभरी दिनहुँ नुहाएर, गायत्री जप गर्दै जितेन्द्रिय भई होम गरेको अन्न खानाले सबै पापबाट मुक्त हुन्छ ।

**॥ समाप्तमिदमेकोननवतितमोऽध्यायः ॥८९॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको उनान्नब्बेऔं अध्याय पूर्ण भयो ।



# नवतितमोऽध्यायः
## (नब्बेऔं अध्याय)

**मार्गशीर्षशुक्लपञ्चदश्यां मृगशिरसा युक्तायां चूर्णितलवणस्य सुवर्णनाभं प्रस्थमेकं चन्द्रोदये ब्राह्मणाय प्रदापयेत्॥१॥**

मंसिर महिनाको मृगशिरा नक्षत्रले युक्त पूर्णिमामा चन्द्रोदयका बेलामा बीचमा सुन राखी एक पसर (प्रस्थ) धुलो नुनले भरिएको पात्र दान गर्नू ।

**अनेन कर्मणा रूपसौभाग्यवानभिजायते॥२॥**

यसो गर्नाले रूपवान् र सौभाग्यवान् हुन्छ ।

**पौषी चेत्पुष्ययुक्ता स्यात्तस्यां गौरसर्षपकल्कोद्वर्तितशरीरो गव्यघृतपूर्णकुम्भेनाभिषिक्तः सर्वौषधिभिः सर्वगन्धेः सर्वबीजैश्चस्नातो घृतेन भगवन्तं वासुदेवं स्नापयित्वा गन्धपुष्पधूपदीपनैवेद्यादिभिश्चाभ्यर्च्य वैष्णवैः शाक्रैर्बार्हस्पत्यैश्च मन्त्रैः पावके हुत्वा ससुवर्णेन घृतेन ब्राह्मणान्स्वस्ति वाचयेत्॥३॥**

पुष्य नक्षत्रले युक्त पुस महिनाको पूर्णिमामा शरीरमा सेतो सर्सिउँ दल्नू, गाईको घिउ हालिएको जलघडाले नुहाउनू, सबै थरी जडीबूटी, सबै खालका अत्तरादि र सबै खालका बीज शरीरमा दल्नू र नुहाऊ । भगवान् वासुदेवलाई घृतस्नान गराउनू र चन्दन, फूल, धूप, दीप, नैवेद्य आदि चढाई पूजा गर्नू । विष्णु, इन्द्र र बृहस्पतिका वेदमन्त्र पढी होम गर्नू अनि सुन र घिउ लिन लगाई ब्राह्मणहरूबाट स्वस्तिवाचन गर्न लगाउनू ।

**वासोयुगं कर्त्रे दद्यात्॥४॥**

गराउनेलाई एक जोर वस्त्र दिनू ।

**अनेन कर्मणा पुष्यते॥५॥**

यसो गर्दा पुष्टि मिल्दछ ।

**माघी मघायुता चेत्तस्यां तिलैः श्राद्धं कृत्वा पूतो भवति ॥६॥**

माघ महिनाको मघा नक्षत्रले युक्त पूर्णिमामा तिलले श्राद्ध गर्नाले पवित्र हुन्छ ।

**फाल्गुनी फल्गुनीयुता चेत्स्यात्तस्यां ब्राह्मणाय सुसंस्कृतं स्वास्तीर्णं शयनं निवेद्य भार्यां मनोज्ञां रूपवतीं द्रविणवतीं चाप्नोति ॥७॥**

फागुन महिनाको उत्तराफाल्गुनी नक्षत्रले युक्त पूर्णिमामा उत्तम सिरक, डस्ना आदि सहितको पलङ ब्राह्मणलाई दान गर्नाले मनले चिताएकी, रुपवती र धनप्रदायक लक्षणकी पत्नी प्राप्त हुन्छ ।

**नार्यपि भर्तारम् ॥८॥**

स्त्रीले यसो गर्दा यस्तै लक्षणको पति प्राप्त हुन्छ ।

**चैत्री चित्रायुता चेत्तस्यां चित्रवस्त्रप्रदानेन सौभाग्यमाप्नोति ॥९॥**



चित्रा नक्षत्रले युक्त चैत महिनाको पूर्णिमामा बुट्टे वस्त्र दान गर्नाले सौभाग्य प्राप्त हुन्छ ।

**वैशाखी विशाखायुता चेत्तस्यां ब्राह्मणसप्तकं क्षौद्रयुक्तैस्तिलैः सन्तर्प्य धर्मराजानं प्रीणयित्वा पापेभ्यः पूतो भवति ॥१०॥**

विशाखा नक्षत्रले युक्त वैशाख पूर्णिमामा सात जना ब्राह्मणलाई मह मिसाइएको तिल दान गरी धर्मराजलाई तृप्त पार्नाले पाप नष्ट भई पवित्र हुन्छ ।

**ज्यैष्ठी ज्येष्ठायुता चेत्स्यात्तस्यां छत्रोपानहप्रदानेन गवाधिपत्यं प्राप्नोति ॥११॥**

ज्येष्ठा नक्षत्रले युक्त जेठ महिनाको पूर्णिमामा छाता र एक जोर जुत्ता दान गर्नाले गाइवस्तुको आधिपत्य प्राप्त हुन्छ ।

**आषाढ्यामषाढायुक्तायामन्नपानदानेन तदेवाक्षय्यमाप्नोति ॥१२॥**

आषाढा नक्षत्रले युक्त आषाढ पूर्णिमामा अन्न र पेय दान गर्नाले त्यो अक्षय हुन्छ ।

**श्रावण्यां श्रवणयुक्तायां जलधेनुं सान्नां वासोयुगाच्छादितां दत्त्वा स्वर्गमाप्नोति ॥१३॥**

श्रवण नक्षत्रले युक्त श्रावण पूर्णिमामा वस्त्रले ढाकिएकी लैनू गाई अन्न सहित दान गर्नाले स्वर्ग पाइन्छ ।

**प्रौष्ठपद्यां प्रौष्ठपद्युक्तायां गोदानेन सर्वपापविनिर्मुक्तो भवति ॥१४॥**

उत्तरभाद्रपदाले युक्त भदौको पूर्णिमामा गाई दान गर्नाले सबै पापबाट मुक्त हुन्छ ।

**आश्वयुज्यामश्विनीगते चन्द्रमसि घृतपूर्णं भाजनं सुवर्णयुतं विप्राय दत्त्वा दीप्ताग्निर्भवति ॥१५॥**

आश्विन महिनाको अश्विनी नक्षत्रले युक्त पूर्णिमामा घिउले भरिएको भाँडो सुनसहित ब्राह्मणलाई दान गर्दा अद्भूतको पाचन शक्ति (वा तेज) प्राप्त हुन्छ ।

**कार्त्तिकी कृत्तिकायुता चेत्स्यात्तस्यां सितमुक्षाणमन्यवर्णं वा शशाङ्कोदये सर्वसस्यरत्नगन्धोपेतं दीपमध्ये ब्राह्मणाय दत्त्वा कान्तारभयं न पश्यति ॥१६॥**



कार्तिक महिनाको कृत्तिका नक्षत्रले युक्त पूर्णिमामा सेतो वा त्यससँगै अरु रङ्गको साँढे, सबै खाले अनाज, जुहारात, अत्तरादि, दीप सहित ब्राह्मणलाई दान गर्नाले जोखिमपूर्ण जीवन यात्रामा कहिल्यै डर आइ पर्दैन ।

**वैशाखशुक्लतृतीयायामुपोषितोऽक्षतैर्वासुदेवमभ्यर्च्य तानेव हुत्वा दत्त्वा च सर्वपापेभ्यः पूतो भवति ॥१७॥**

वैशाख शुक्ल तृतीयामा उपवास बसी भगवान वासुदेवलाई सग्ला (१०८) जौ चढाउनाले, होम गर्नाले र ब्राह्मणलाई दान गर्नाले सबै पाप पखालिई पवित्र हुन्छ ।

**यच्च तस्मिन्नहनि प्रयच्छति तदक्षय्यमाप्नोति ॥१८॥**

अथवा त्यो दिन जे दान दिइन्छ त्यो अक्षय हुन्छ ।

**पौष्यां समतीतायां कृष्णपक्षाद्वादश्यां सोपवासस्तिलैः स्नातस्तिलोदकं**
**दत्त्वा तिलैर्वासुदेवमभ्यर्च्य तानेव हुत्वा दत्त्वा**
**भुक्त्वा च पापेभ्यः पूतो भवति ॥१९॥**

पुसको कृष्ण द्वादशीका दिन उपवास बसी तिल र जलले नुहाई तिलजलले पितृलाई तर्पण गरी
तिलले नै भगवान वासुदेवको पूजा , दान र होम गर्नाले र बचेको
खानाले पापबाट मुक्त हुन्छ ।

**माघ्यां समतीतायां कृष्णद्वादश्यां सोपवासः श्रवणं प्राप्य**
**वासुदेवाग्रतो महावर्तिद्वयेन दीपद्वयं दद्यात् ॥२०॥**

माघकृष्ण द्वादशीका दिन उपवास बसी श्रवण नक्षत्र लागेपछि
दुई जोर बत्ती भगवान् वासुदेवका लागि बालि दिनू ।

**दक्षिणपार्श्वे महारजनरक्तेन समग्रेण वाससा घृततुलामष्टाधिकां दत्त्वा ॥२१॥**

दाहिनेतिर भगवान् वासुदेवको प्रतिमा, एक सय आठ घिउका बत्ती सहितका

पाला, केसरीले रङ्गाइएको एउटा सग्लो कपडा तथा.. ।

**वामपार्श्वे तिलतैलतुलां साष्टां दत्त्वा श्वेतेन समग्रेण वाससा ॥२२॥**

देब्रेतिर तिलको तेलले भिजाइएका एक सय आठ पाला र सेतो एउटै वस्त्र राख्नू ।

**एतत्कृत्वा यस्मिन्राष्टेऽभिजायते यस्मिन्देशे यस्मिन्कुले तत्रोज्वलो भवति ॥२३॥**

यसरी दीप बाल्नाले जुन देशमा, जुन नगरमा र जुन कुलमा
उ जन्मेको छ (वा जन्मने छ) त्यो सबै प्रकाशित हुन्छ ।

**आश्विनं सकलं मासं ब्राह्मणेभ्यः प्रत्यहं घृतं प्रदायाश्विनौ**
**प्रीणयित्वा रूपभाग्भवति ॥२४॥**

आश्विन महिनाभरी दिनहुँ ब्राह्मणलाई घिउ दान गर्नाले अश्विनीकुमार
प्रसन्न भई उसलाई सुन्दर रूप दिनेछन् ।

**तस्मिन्नेव मासि प्रत्यहं गोरसैर्ब्राह्मणान्भोजयित्वा राज्यभाग्भवति ॥२५॥**

त्यही महिनामा दिनहुँ गोरसले ब्राह्मणलाई भोजन गराउनाले
राज्य (वा अशोचनीय समृद्धि) प्राप्त हुन्छ ।

**प्रतिमासं रेवतीयुते चन्द्रमसि मधुघृतयुतं रेवतीप्रीत्यै परमान्नं
ब्राह्मणान्भोजयित्वा रेवतीं प्रीणयित्वा रूपस्य भागी भवति ॥२६॥**

हरेक महिना रेवती नक्षत्रमा चन्द्रमा गएका दिन मह, घिउ र खीरले ब्राह्मणभोजन गराउँदा
रेवती प्रसन्न भई रुपवान् बनाइ दिने छिन् ।

**माघे मासेऽग्निं प्रत्यहं तिलैर्हुत्वा सघृतं कुल्माषं
ब्राह्मणान्भोजयित्वा दीप्ताग्निर्भवति ॥२७॥**

माघ महिनाभरी दिनहुँ तिलले हवन गरी तीन ब्राह्मणलाई
घिउखट्टे खुवाए पाचकाग्नि (वा तेज) वृद्धि हुन्छ ।



**सर्वां चतुर्दशीं नदीजले स्नात्वा धर्मराजानं
पूजयित्वा सर्वपापेभ्यः पूतो भवति ॥२८॥**

सबै चतुर्दशीका दिन नदीमा नुहाई धर्मराजको पूजा गरे सबै पाप नाश भई पवित्र हुन्छ ।

**यदीच्छेद्विपुलान्भोगांश्चन्द्रसूर्यग्रहोपगान् ।
प्रातःस्नायी भवेन्नित्यं द्वौ मासौ माघफाल्गुनौ ॥२९॥**

चन्द्रसूर्य ग्रहणको पूर्ण फल चाहनेले माघ र फागुन दुई महिना दिनहुँ बिहान नुहाउनू ।

**॥ समाप्तमिदं नवतितमोऽध्यायः ॥९०॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको नब्बेऔं अध्याय पूर्ण भयो ।



## एकनवतितमोऽध्यायः
## (एकान्नब्बेऔं अध्याय)

**अथ कूपकर्तुस्तत्प्रवृत्ते पानीये दुष्कृतस्यार्धं विनश्यति ॥१॥**

कुवा आदि खनेर त्यसबाट पानी आउन थालेपछि खन्नेले गरेका आधा पाप नाश हुन्छ ।

**तडागकृन्नित्यतृप्तो वारुणं लोकमश्नुते ॥२॥**

तलाउ खन्नेका सधैं तिर्खा मेटिन्छ र वरुण लोकमा गएर बस्न पाउँदछ ।

**जलप्रदः सदा तृप्तो भवति ॥३॥**

जसले जल दिन्छ उसले कहिल्यै (कुनै पनि जुनीमा) तिर्खाले आकुल हुनु पर्दैन ।

**वृक्षारोपयितुर्वृक्षाः परलोके पुत्रा भवन्ति ॥४॥**



जसले रुख रोप्दछ, अर्को जुनीमा ती रुख उसका छोरा (सन्तान) हुन्छन् ।

**वृक्षप्रदो वृक्षप्रसूनैर्देवान्प्रीणयति ॥५॥**

रुख दिनाले त्यो रुखले दिए जसरी नै खुशी देवताले उसलाई दिन्छन् ।

**फलैश्चातिथीन् ॥६॥**

यस्तै खुशी अतिथिलाई फलफूल दिनेले पनि पाउँदछ ।

**छायया चाभ्यागतान् ॥७॥**

यात्रुलाई छहारी (वा ओत) दिनेले पनि यस्तै खुशी पाउँदछ ।

**देवे वर्षत्युदकेन पितॄन् ॥८॥**

ती (आफूले रोपेका) रुखबाट वर्षात्मा चुहिएको पानी पितृलाई तर्पण गरेसरह हुनेछ र रोप्नेले खुशी प्राप्त गर्नेछ ।

**सेतुकृत्स्वर्गमाप्नोति ॥९॥**

पुल बनाउने स्वर्ग जान्छ ।

**देवायतनकारी यस्य देवस्यायतनं करोति तस्यैव लोकमाप्नोति ॥१०॥**

मन्दिर बनाउनेले जुन देवदेवीको मन्दिर बनाउँदछ उ तिनै तिनै देवदेवीको लोकमा जान्छ ।

**सुधासिक्तं कृत्वा यशसा विराजते ॥११॥**

जसले अरुले बनाएको मठमन्दिर चम्काउँदछ उसको यश फैलन्छ ।

**विचित्रं कृत्वा गन्धर्वलोकमवाप्नोति ॥१२॥**



जसले त्यस्ता मठमन्दिर रङ्गाउँदछ उसले गन्धर्वलोक प्राप्त गर्दछ ।

**पुष्पप्रदानेन श्रीमान्भवति ॥१३॥**

फूल दान गर्नेको भाग्य चम्कन्छ ।

**अनुलेपनप्रदानेन कीर्तिमान्भवति ॥१४॥**

लेप दान गर्नेको कीर्ति फैलन्छ ।

**दीपप्रदानेन चक्षुष्मान्सर्वत्रोज्ज्वलश्च ॥१५॥**

दीप (सबै खाले) दान गर्नाले दृष्टि क्षमता वृद्धि हुन्छ र सर्वत्र खुशियाली पाउँदछ ।

**अन्नप्रदानेन बलवान् ॥१६॥**

अनाज दान गर्नाले बलवान् हुन्छ ।

**देवनिर्माल्यापनयनाद्गोदानफलमाप्नोति ॥१७॥**

देवस्थलमा चढाइएका फूलप्रसाद सेलाउने (वा व्यवस्थापन) गर्नेले गाई दान गरेको फल पाउँदछ ।

**देवगृहमार्जनात्तदुपलेपनाद्ब्राह्मणोच्छिष्ट-**
**मार्जनात्पादशौचादकल्यपरिचरणाच्च ॥१८॥**

यही फल मठमन्दिर धोइपखाली गर्दा, लिपपोत गर्दा, ब्राह्मणको जुठो सोर्दा, उसका गोडा धुँदा र उ विरामी हुँदा स्याहार गर्दा पनि पाइन्छ ।

**कूपाराममतडागेषु देवतायतनेषु च ।**
**पुनःसंस्कारकर्ता च लभते मौलिकं फलम् ॥१९॥**

कुवा, उपवन, तलाउ, मठमन्दिर आदि मर्मत, जिर्णोद्धार र पुनः निर्माण गर्नेले पनि त्यही फल पाउँदछ जुन फल यी कुरा नयाँ बनाउनेले पाउँदछ ।



**॥ समाप्तमिदमेकनवतितमोऽध्यायः ॥९१॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको एकान्नब्बेऔं अध्याय पूर्ण भयो ।



## द्विनवतितमोऽध्यायः
## (बयान्नब्बेऔं अध्याय)

**सर्वदानाधिकमभयप्रदानम् ॥१॥**

सबै दानभन्दा अभय-दान श्रेष्ठ हो ।

**तत्प्रदानेनाभीप्सितं लोकमाप्नोति ॥२॥**

त्यो दान गर्नाले (मरणोपरान्त) आफूले चाहेको लोक पाइन्छ ।

**भूमिप्रदानेन च ॥३॥**

जमिन दान गर्नाले पनि यस्तै फल पाइन्छ ।

**गोचर्ममात्रामपि भुवं प्रदाय सर्वपापेभ्यः पूतो भवति ॥४॥**



गोचर्म मात्र जमिन दान गर्नाले मात्र पनि सबै पाप नाश भई पवित्र हुन्छ ।

**गोप्रदानेन स्वर्गलोकमाप्नोति ॥५॥**

गाई दान गर्नाले स्वर्गलोक पाइन्छ ।

**दशधेनुप्रदो गोलोकान् ॥६॥**

दशवटा गाई दान गर्नाले गोलोक पाइन्छ ।

**शतधेनुप्रदो ब्रह्मलोकान् ॥७॥**

सय वटा गाई दान गर्नाले ब्रह्मलोक आदि जस्ता लोक पाइन्छन् ।

**सुवर्णश्रृङ्गीं रौप्यखुरीं मुक्तालाङ्गूलां कांस्योपदोहां वस्त्रोत्तरीयां दत्त्वा धेनुरोमसङ्ख्यानि वर्षाणि स्वर्गलोकमाप्नोति ॥८॥**

जसले सिङलाई सुनले, खुरलाई चाँदीले, पुच्छरलाई मोतिले र दूध दुहुने भाँडो काँसले मोरी गाईलाई वस्त्रले ढाकी दान दिन्छ, उ त्यो गाईको शरीरमा जति रौँ छन् त्यति वर्षसम्म स्वर्गमा बस्न पाउँदछ ।

**विशेषतः कपिलाम् ॥९॥**

अझ यसमा पनि कैली गाई भए उत्तम हुन्छ ।

**दान्तं धुरन्धरं दत्त्वा दशधेनुप्रदो भवति ॥१०॥**

प्रशिक्षित एउटा साँढे दान गर्नू दश वटा गाई दान गर्नू समान हुन्छ ।

**अश्वदः सूर्यसालोक्यमाप्नोति ॥११॥**

घोडा दान गर्नेले सूर्यलोक पाउँदछ ।



**वासोदश्चन्द्रसालोक्यम् ॥१२॥**

वस्त्र दान गर्नेले चन्द्रलोक पाउँदछ ।

**सुवर्णदानेनाग्निसालोक्यम् ॥१३॥**

सुन दान गर्नेले अग्निलोक पाउँदछ ।

**रूप्यदानेन रूपम् ॥१४॥**

चाँदी दान गर्नेले सुन्दर रूप पाउँदछ ।

**तैजसानां पात्राणां प्रदानेन पात्रीभवति सर्वकामानाम् ॥१५॥**

(सुन, चाँदी आदि) धातुका भाँडा दान गर्नाले मनका इच्छा सबै पूरा हुन्छन् ।

**घृतमधुतैलप्रदानेनारोग्यम् ॥१६॥**

घिउ, मह र तेल दान गर्नाले आरोग्य पाइन्छ ।

**औषधप्रदानेन च ॥१७॥**

औषधी दान गर्नाले पनि यही फल पाइन्छ ।

**लवणप्रदानेन च लावण्यम् ॥१८॥**

नुन दान गर्नाले आकर्षक व्यक्तित्व हुन्छ ।

**धान्यप्रदानेन तृप्तिम् ॥१९॥**

वर्षादमा फल्ने अनाज दान गर्नाले तृप्ति पाइन्छ ।

**सस्यप्रदानेन च ॥२०॥**



हिउँदमा फल्ने अनाज दान गर्नाले पनि यही फल पाइन्छ ।

**अन्नदः सर्वम् ॥२१॥**

सबै खाले अन्न दान गरे पनि यही पल पाइन्छ ।

**धान्यप्रदानेन सौभाग्यम् ॥२२॥**

अनाज दान गर्नाले सौभाग्य (पनि) प्राप्त हुन्छ ।

**तिलप्रदः प्रजामिष्टाम् ॥२३॥**

तिल दान गर्नाले चाहेजस्ता सन्तान (वंश) हुन्छन् ।

**इन्धनप्रदानेन दीप्ताग्निर्भवति ॥२४॥**

इन्धन दान गर्नाले पाचकाग्नि (वा तेज) बढ्दछ ।

**सङ्ग्रामे च सर्वजयमाप्नोति ॥२५॥**

युद्धमा सबैतिर विजय पनि प्राप्त हुन्छ ।

**आसनप्रदानेन स्थानम् ॥२६॥**

आसन दान गर्नाले उच्च स्थान पाइन्छ ।

**शय्याप्रदानेन भार्याम् ॥२७॥**

शैया दान गर्नाले पत्नी पाइन्छ ।

**उपाननप्रदानेनाश्वतरीयुक्तं रथम् ॥२८॥**

जुत्ता दान गर्नाले बग्गी (वा रथ) पाइन्छ ।



**छत्रप्रदानेन स्वर्गम् ॥२९॥**

छाता दान गर्नाले स्वर्ग पाइन्छ ।

**तालवृन्तचामरप्रदानेननध्वसुखित्वम् ॥३०॥**

पङ्खा वा चमर दान गर्नाले यात्रामा सुख पाइन्छ ।

**वास्तुप्रदानेन नगराधिपत्यम् ॥३१॥**

आवास दान गर्नाले नगराधिपति बनिन्छ ।

**यद्यदिष्टतमं लोके यच्चास्ति दयितं गृहे ।**
**तत्तद्गुणवते देयं तदेवाक्षय्यमिच्छता ॥३२॥**

यसलोकमा आफूलाई  आफन्तलाई मनपर्ने कुरा सोही

अनुसारका योग्य ब्राह्मणलाई दान गर्नाले त्यो अक्षय हुन्छ ।

**॥ समाप्तमिदं द्विनवतितमोऽध्यायः ॥९२॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको
बयान्नब्बेऔँ अध्याय पूर्ण भयो ।



# त्रिनवतितमोऽध्यायः
# (त्रियान्नब्बेऔँ अध्याय)

**अब्राह्मणे दत्तं तत्सममेव पारलौकिकम् ॥१॥**

ब्राह्मण बाहेकककालाई दिइएको दान अर्को जन्ममा
जेजति दिइयो त्यो बराबर हुन्छ (पाइन्छ) ।

**द्विगुणं ब्राह्मणब्रुवे ॥२॥**

जन्मका आधारमा ब्राह्मण भएकालाई दिइए त्यो दोब्बर हुन्छ ।

**सहस्रगुणं प्राधीते ॥३॥**

वेदपढेका ब्राह्मणलाई दिइयो भने हजार गुना हुन्छ ।

**अनन्तं वेदपारगे ॥४॥**



वेदविज्ञलाई दिइयो भने त्यो अक्षय हुन्छ ।

**पुरोहितत्स्वात्मन एव पात्रम् ॥५॥**

पुरोहितले जजमान बाहेक अरुसँग दान नलिनू।

**सवसा दुहितृजामातरश्च ॥६॥**

(जजमानका) दीदिबहिनी, छोरीचेली, ज्वाइँ आदिबाट पनि दान लिन हुन्छ (तर अपरिचितसँग दान नलिनू) ।

**न वार्यपि प्रयच्छेत वैडालव्रतिके द्विजे ।**
**न बकव्रतिके विप्रे नावेदविदि धर्मवित् ॥७॥**

बिडालवृत्तिका द्विजलाई र बकवृत्तिका तथा वेद नपढेका ब्राह्मणलाई  पानी पनि दान नदिनू ।

**धर्मध्वजी सदा लुब्धश्छाद्मिको लोकदाम्भिकः ।**
**वैडालव्रतिको ज्ञेयो हिंस्रः सर्वाभिसन्धिकः ॥८॥**

जो धर्मको झण्डा (वा चिह्न) नित्य बोकेर हिँड्दछ, लोभी छ, नक्कली भेषभूषा धारण गर्दछ ( ढोँगी छ), जोसँग पनि अभिमान गर्दै हिँड्दछ, दयालु छैन र सबैलाई शङ्का गर्दै हिँड्दछ त्यस्ता बिरालाको जस्तो द्विजको स्वभावलाई बिडालवृत्ति भनिन्छ ।

**अधोदृष्टिर्नैकृतिकः स्वार्थसाधनतत्परः ।**
**शठो मिथ्याऽविनीतश्च बकव्रतपरो द्विजः ॥९॥**

जो जहिले पनि घोसो मुन्टो लाएर हिँड्दछ, जो अरुलाई हानी गरेर आफ्नो जीवन पाल्दछ, जो आफ्नो स्वार्थसिद्ध गर्न सदा तत्पर रहन्छ, जो मूर्ख छ, जो झूटो छ र जो नम्र छैन, यस्तो बकुल्लाको जस्तो पेसालाई बकवृत्ति भनिन्छ ।

**ये बकव्रतिनो लोके ये च मार्जारलिङ्गिनः ।**
**ते पतन्त्यन्धतामिस्रे तेन पापेन कर्मणा ॥१०॥**



जो बकवृत्तिका र बिडालवृत्तिका मानिसहरु छन् ती त्यो पापले गर्दा अन्धतामिस्र नामक नरकमा पर्दछन् ।

**न धर्मस्यापदेशेन पापं कृत्वा व्रतञ्चरेत् ।**
**व्रतेन पापं प्रच्छाद्य कुर्वन्स्त्रीशुद्रदम्भनम् ॥११॥**

पाप गरेर धर्मको बहानामा (पाप पखाल्न) व्रत, उपवास आदि नगर्नू, नबस्नू । व्रतले पापलाई लुकाउँदछु भन्नु स्त्री र शूद्रलाई झुक्याउनु मात्र हो

व्याख्याः- पाप गरेपछि अनिवार्यरुपमा त्यसको पहिले प्रायश्चित गर्नुपर्दछ, अनि मात्र उ धर्मकर्मका लागि योग्य हुन्छ । पाप गरेर त्यो पाप लुकाउन सन्त बनेकाहरुबाट धेरै स्त्री र शूद्रहरु (वा सोझाहरु) ठगिने वा झुक्किने गर्दछन् । प्रायश्चित दुई किसिमका हुन्छन् । एक शास्त्रले तोके अनुसारको र अर्को आफू बस्ने देशको कानुनले तोके अनुसारको । तर पापीले यि दुबै थरी प्रायश्चित गर्नू पर्दछ, पर्दछ । यो जुनीमा नगरे अरु हजारौं जुनीसम्म जबसम्म त्यो पापको प्रायश्चित गरिन्न तबसम्म त्यसको असर रहिरहन्छ । यति मात्र होइन कुनै व्यक्ति कुनै पनि पाप गरी प्रायश्चित नगरी मर्दछ भने त्यसको असर सन्तान दरसन्तानमा समेत सधैं जान्छ ।

**प्रेत्येह चेदृशो विप्रो गर्ह्यते ब्रह्मवादिभिः ।**
**छद्मनाचरितं यच्च व्रतं रक्षांसि गच्छति ॥१२॥**

यस्ता विप्रहरू मरेपछि प्रेत हुन्छन्, ढौंग गरेर तिनले गरेका सबै
व्रतको फल राक्षसहरूले प्राप्त गर्दछन् ।

**अलिङ्गी लिङ्गिवेषेण यो वृत्तिमुपजीवति ।**
**स लिङ्गिनां हरत्येनस्तिर्यग्यौनौ प्रजायते ॥१३॥**

जसले वैदिक अधिकार बिना अरु कसैको (कुनै वर्णको वा आश्रमको) भेषभूषा गरी आफ्नो जीवन पाल्दछ, उसले जसको नक्कल गरेको छ त्यसको पाप बोक्दछ र मरेपछि उ कीरा वा जनावर भएर जन्मनु पर्दछ ।

**न दानं यशसे दद्यान्न भयान्नोपकारिणे ।**
**न नृत्यगीतशीलेभ्यो धर्मार्थमिति निश्चितम् ॥१४॥**



"दान" नाम कमाउन भनेर नदिइयोस् । "डरले" उपकार नगरियोस् । धर्मको नाउँमा नाचगान गर्नेहरूसँग दान नलियोस् । यी कुरा सबै शास्त्रले तोकेका अकाट्य नियम हुन् ।

**॥ समाप्तमिदं त्रिनवतितमोऽध्यायः ॥९३॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको
त्रियान्नब्बेऔं अध्याय पूर्ण भयो ।



## चतुर्नवतितमोऽध्यायः
## (चौरान्नब्बेयौँ अध्याय)

**गृही बलीपलितदर्शने वनाश्रयो भवेत्॥१॥**

आफ्नो छाला चाउरी पर्न थालेको र कपाल फुलेको देखेपछि गृहस्थले वनको आश्रय लिनू।

**अपत्यस्य चापत्यदर्शने वा ॥२॥**

नाती (छोराको छोरो) को मुख देखेपछि पनि यसै गर्नू ।

**पुत्रेषु भार्यां निक्षिप्य तयानुगम्यमानो वा ॥३॥**

पत्नीलाई छोराहरुको जिम्मा लगाएर वा सँगै लिएर वनमा जानू ।

**तत्राप्यग्नीनुपचरेत्॥४॥**



त्यहाँ पनि अग्निको उपासना गरी होम गर्ने गर्नू ।

**अफालकृष्टेन पञ्च यज्ञान्न हापयेत्॥५॥**

खनजोत गरेर नउमारिएका कुराले पञ्चयज्ञ गर्नू, नछाड्नू ।

**स्वाध्यायञ्च न जह्यात्॥६॥**

वेद पढ्न नछाड्नू ।

**ब्रह्मचर्यं पालयेत्॥७॥**

ब्रह्मचर्यमा रहनू ।

**चर्मचीरवासाः स्यात्॥८॥**

छाला वा बोक्राका लुगा लगाउनू ।

**जटाश्मश्रुलोमनखाँश्च बिभृयात् ॥९॥**

कपाल, दाह्री, रौं र नङ पाल्नू ।

**त्रिषवणस्नायी स्यात् ॥१०॥**

दिनहुँ तीन पटक नुहाउने गर्नू ।

**कपोतवृत्तिर्मासनिचयः सम्वत्सरनिचयो वा ॥११॥**

परेबाले जसरी सबैतिरबाट अलिअलि लिएर एक महिना वा एक वर्षका लागि गुजारा (अनाज आदि) जम्मा गर्नू ।

**सम्वत्सरनिचयः पूर्वनिचितमाश्वयुज्यां जह्यात् ॥१२॥**



एक वर्षलाई पुग्ने गरी सञ्चिती गरिएको भए पनि हरेक आश्विन पूर्णिमामा ती कुराहरु होम गरेर वा सेलाएर विसर्जन गर्नू ।

**ग्रामादाहृत्य वाश्नीयादष्टौ ग्रासान्वने वसन् ।**
**पुटेनैव पलाशेन पाणिना शकलेन वा ॥१३॥**

गाउँबाट लेराइएको भिक्षा वनमा बसी दुनामा, पातमा, हातमा वा खबटामा आठ गाँस खानू ।

**॥ समाप्तमिदं चतुर्नवतितमोऽध्यायः ॥९४॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको चौरान्नब्बेयौं अध्याय पूर्ण भयो ।



# पञ्चनवतितमोऽध्यायः
# (पञ्चान्नब्बेऔं अध्याय)

**वानप्रस्थस्तपसा शरीरं शोषयेत् ॥१॥**

वानप्रस्थले तपस्या गरी आफ्नो शरीर सुकाउनू ।

**ग्रीष्मे पञ्चतपाः स्यात् ॥२॥**

गर्मीमा पञ्चाग्नि ताप्नू ।

**आकाशशायी प्रावृषि ॥३॥**

वर्षामा खुला आकाश मुनि बस्नू ।

**आर्द्रवासा हेमन्ते ॥४॥**



जाडोमा भिजेका लुगा लगाउनू ।

**नक्ताशी स्यात् ॥५॥**

रातमा मात्र खाना खाने गर्नू ।

**एकान्तरद्व्यन्तरत्र्यन्तराशी वा स्यात् ॥६॥**

एकदिन, दुई दिन वा तीन दिन बिराएर खाना खानू ।

**पुष्पाशी ॥७॥**

फूल खानू ।

**फलाशी ॥८॥**

फल खानू ।

**शाकाशी ॥९॥**

साग खानू ।

**पर्णाशी ॥१०॥**

पात खानू ।

**मूलाशी ॥११॥**

कन्दमूल खानू ।

**यवान्नं पक्षान्तयोर्वा सकृदश्नीयात् ॥१२॥**

हरेक पक्षान्तमा जौ खानू ।



**चान्द्रायणैर्वा वर्तेत ॥१३॥**

अथवा चान्द्रायण व्रत बस्नू ।

**अश्मकुट्टः ॥१४॥**

खाने कुरा पिँध्न वा फोर्न ढुङ्गाको प्रयोग गर्नू ।

**दन्तोलूखलिको वा ॥१५॥**

अथवा दाँतले नै यि काम लिनू ।

**तपोमूलमिदं सर्वं दैवमानुषकं जगत् ।**
**तपोमध्यं तपोऽन्तञ्च तपसा च तथा धृतम् ॥१६॥**

यो सबै दैवी र मानुषी जगत तपको आधारमा टिकेको छ । यसको बीचमा र

अन्तमा पनि तप छ । सबै तपकै भरमा टिकेको छ ।

**यद्दुश्चरं यद्दुरापं यद्दूरं यच्च दुष्करम् ।**
**सर्वं तत्तपसा साध्यं तपो हि दुरतिक्रमम् ॥१७॥**

जुन पाउन कठिन छ, जहाँ पुग्न कठिन छ, जुन गर्न कठिन छ ती सबै तपस्याका माध्यमले सम्भव हुन्छन् । यसैले तप गरेर नपाइने कुरा केही पनि छैन ।

**॥ समाप्तमिदं पञ्चनवतितमोऽध्यायः ॥९५॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको
पञ्चान्नब्बेयौं अध्याय पूर्ण भयो ।



## षण्णवतितमोऽध्यायः
## (छयान्नब्बेऔं अध्याय)

**अथ त्रिष्वाश्रमेषु पक्वकषायः प्राजापत्यामिष्टिं कृत्वा सर्वं वेदं दक्षिणां दत्त्वा प्रव्रज्याश्रमी स्यात् ॥१॥**

शुरुका तीन आश्रमको मोहबाट अघाएपछि, प्रजापतिको होम गरी व्यवहार, माया, मोह आदि सब त्यागी सन्यासाश्रम ग्रहण गर्नू ।

**आत्मन्यग्नीनारोप्य भिक्षार्थं ग्राममियात् ॥२॥**

आफ्नै आत्मामा अग्निलाई आरोपण गरी भिक्षाका लागि (मात्र) गाउँमा प्रवेश गर्नू ।

**सप्तागारिकं भैक्षमादद्यात् ॥३॥**

सात वटा घरबाट भिक्षा लिनू।



**अलाभे न व्यथेत ॥४॥**

भिक्षा नपाउँदा दुःखी नहुनू ।

**न भिक्षुकं भिक्षेत ॥५॥**

अर्को भिक्षुकसँग भिक्षा नमाग्नू ।

**भुक्तवति जने अतीते पात्रसम्पाते भैक्षमादद्यात् ॥६॥**

सबै (गाउँले) ले खाइ सकेपछि र भाँडाकुँडा थन्क्याइ सकेपछि भिक्षा माग्न जानू ।

**मृन्मये दारुपात्रेऽलाबुपात्रे वा ॥७॥**

माटाका, रुखका वा तुम्बाका भाँडामा भिक्षा थाप्नू ।

**तेषाञ्च तस्याद्भिः शुद्धिः स्यात् ॥८॥**

ती भाँडालाई पनि जलले पखालेर शुद्ध गर्ने गर्नू ।

**अभिपुजितलाभादुद्विजेत॥९॥**

पाएको भिक्षालाई पूजा र विनम्रतापूर्वक अभिभादन गरी खानू ।

**शून्यागारनिकेतनः स्यात्॥१०॥**

सुनसान घरलाई वासस्थान बनाउनू ।

**वृक्षमूलनिकेतनो वा॥११॥**

अथवा रुखको फेदलाई बनाउनू ।

**न ग्रामे द्वितीयां रात्रिमावसेत्॥१२॥**



एउटै गाउँमा दोश्रो रात बास नबस्नू ।

**कौपीनाच्छादनमात्रमेव वसनमादद्यात्॥१३॥**

वस्त्रमा लँगौटीमात्र प्रयोग गर्नू ।

**दृष्टिपूतं न्यसेत्पादम्॥१४॥**

जमिनमा राम्ररी हेरेर पाइला टेक्ने गर्नू ।

**वस्त्रपूतं जलमादद्यात्॥१५॥**

कपडछान गरी पवित्र बनाइएको जल पिउने गर्नू ।

**सत्यपूतं वदेत्॥१६॥**

सत्य वचन बोल्ने गर्नू ।

**मनः पूतमाचरेत् ॥१७॥**

पवित्र मनले भने बमोजिमका आचरण गर्नू ।

**मरणं नाभिकामयेत जीवितञ्च ॥१८॥**

बाँच्ने वा मर्ने चाहना नगर्नू ।

**अतिवादांस्तितिक्षेत ॥१९॥**

(अपमान, बकवास आदिमा) धैर्यधारण गर्ने हुनु ।

**न कञ्च नावमन्येत ॥२०॥**

कसैलाई हैँला नगर्नू ।



**निराशीः स्यात् ॥२१॥**

कसैलाई आशिर्वाद नदिनू ।

**निर्नमस्कारः ॥२२॥**

कसैलाई अभिभादन नगर्नू ।

**वास्यैकं तक्षतो बाहुं चन्दनेनैकमुक्षतः ।**
**नाकल्याणं न कल्याणं तयोरपि च चिन्तयेत् ॥२३॥**

कसैले आफ्नै हात बञ्चरोले काटे वा हातमा चन्दन छर्के पनि
तिनको कल्याण अकल्याणका बारेमा नसोच्नू ।

**प्राणायामधारणाध्याननित्यः स्यात् ॥२४॥**

नित्य प्राणायाम, धारण र ध्यानमा लागिरहनू ।

## संसारस्यानित्यतां पश्येत् ॥२५॥

यो संसार अनित्य छ भनेर (भित्री आँखाले) देख्ने हुनू ।

## शरीरस्याशुचिभावम् ॥२६॥

शरीर पनि अपवित्र छ भनेर जान्नू ।

## जरया रूपविपर्ययम् ॥२७॥

सुन्दरकताको उल्टो वृद्धत्व हो भनेर बुझ्नू ।

## शारीरमानसागन्तुकव्याधिभिश्चोपतापम् ॥२८॥

शारीरिक वा मानसिक रोगले हुने दुःखका बारेमा सोच्नू ।



## सहजैश्च ॥२९॥

प्राकृतिकरूपमा सहजै हुने दुःख (काम, लोभ, मोह, क्रोध र मात्सर्य जन्य) का बारेमा जान्नू ।

## नित्यान्धकारे गर्भे वसतिम् ॥३०॥

अन्धकारमय लामो गर्भवासका बारेमा चिन्तन गर्नू ।

## मूत्रपुरीषमध्ये च ॥३१॥

गर्भको मलमूत्रको आहालको बासका बारेमा पनि सोच्नू ।

## शीतोष्णदुःखानुभवनम् ॥३२॥

त्यहाँको (गर्भको) तातोचिसोको पीडालाई महशूष गर्नू ।

**योनिसंकटनिर्गमनान्महद्दुःखानुभवनम् ॥३३॥**

योनीमार्गबाट बाहिर निस्कँदाको पीडा सम्झनू ।

**बाल्ये मोहं गुरुपरवश्यताम् ॥३४॥**

बालककालको गुरु (पिता, माता ) आदिमा हुने परनिर्भरताका विषयमा मनन गर्नू ।

**अध्ययनादनेकक्लेशम् ॥३५॥**

पढ्नु आदिजस्ता अनेक दुःखका बारेमा सोच्नू ।

**यौवने च विषयाप्राप्तावमार्गे तदवाप्तौ विषयसेवनान्नरके पतनम् ॥३६॥**

युवावस्थामा पाइने रतिसुख पनि नरकको कारण हुन्छ भनेर थाहा पाउनू ।

**अप्रियैवसतिं प्रियैश्च विप्रयोगम् ॥३७॥**



यसबेला पनि जसलाई माया गरिन्छ त्योसँग बिछोड र जसलाई
मन पराइन्न त्यो सँग सँगै बस्नु पर्दछ भनेर जान्नू ।

**नरके च सुमहद्दुःखम् ॥३८॥**

नरकमा पनि अती नै कष्ट हुन्छ भनेर थाहा पाउनू ।

**संसारसंसृतौ तिर्यग्योनिषु च ॥३९॥**

त्यो भोगेपछि संसारमा जन्म लिई हुने पशु र कीराका दुःखका बारेमा त भनिरहन नै परोइन ।

**एवमस्मिन्सततयायिनि संसारे न किञ्चित्सुखम् ॥४०॥**

यो लिसो टाँस्सिए जसरी टाँस्सिने संसारमा केही पनि सुख छैन भनेर निश्चय गर्नू ।

**यदपि किञ्चिद्दुःखापेक्षाया सुखसंज्ञं तदप्यनित्यम् ॥४१॥**

दुःखको तुलनामा केही सुखदायक देखिने कुरा पनि स्थायी छैनन् ।

**तत्सेवाशक्तावलाभेन वा महद्दुःखम् ॥४२॥**

त्यही सुखलाई पनि भोग्न नसक्दा वा नपाउँदा (फेरी) ठूलो दुःख नै हुन्छ ।

**शरीरं चेदं सप्तधातुकं पश्येत् ॥४३॥**

यो शरीर सात प्रकारका धातुले बनेको हुन्छ भनेर जान्नू ।

**वसारुधिरमांसमेदोऽस्थिमज्जाशुक्रात्मकम् ॥४४॥**

ती बोसो, रगत, मासु, मेद, हाड मासी र शुक्र हुन् ।

**चर्मावनद्धम् ॥४५॥**

यी सबैलाई छालाले बेरेको हुन्छ ।



**दुर्गन्धि च ॥४६॥**

दुर्गन्धित हुन्छ ।

**मलायतनम् ॥४७॥**

मैलो हुन्छ ।

**सुखशतैरपि वृतं विकारि ॥४८॥**

सैयौं सुख भएपनि विकारले घेरिएको हुन्छ ।

**प्रयत्नाद्धृतमपि विनाशि ॥४९॥**

जतिसुकै स्याहार गरेपनि नासिन्छ ।

**कामक्रोधलोभमोहमदमात्सर्यस्थानम् ॥५०॥**

यो शरीर काम, क्रोध, लोभ, मोह र मात्सर्यको घर हो ।

**पृथिव्यप्तेजोवाय्वाकाशात्मकम् ॥५१॥**

यो पञ्चतत्वले बनेको हुन्छ ।

**अस्थिशिराधमनिस्नायुयुतम् ॥५२॥**

यो हाड, शिरा, धमनि र नसाले युक्त हुन्छ ।

**रजस्वलम् ॥५३॥**

अशुद्ध हुन्छ ।

**षट्त्वचम् ॥५४॥**



छ थरीका छाला हुन्छन् ।

**अस्थ्नां त्रिभिः शतैः षष्ट्यधिकैर्धार्यमाणम् ॥५५॥**

तीन सय साठी वटा हाडले बनेको हुन्छ ।

**तेषां विभागः ॥५६॥**

ती यसरी बसेका हुन्छन् ।

**सूक्ष्मैः सह चतुःषष्टिर्दशनाः ॥५७॥**

सूक्ष्म (आधार) सहित चौसठ्ठी वटा दाँत हुन्छन् ।

**विंशतिर्नखाः ॥५८॥**

बीस वटा नङ हुन्छन् ।

**पाणिपादशलाकाश्च ॥५९॥**

हातगोडाका औंलामा पनि प्रशस्त सङ्ख्याका हाडहरू हुन्छन् ।

**षष्टिरङ्गुलीनां पर्वाणि ॥६०॥**

हातखुट्टाका औंलामा साठी वटा जोर्नी हुन्छन् ।

**द्वे पार्ष्ण्योः ॥६१॥**

कुर्कुच्चामा दुई हाड हुन्छन् ।

**चतुष्टयं गुल्फेषु ॥६२॥**

गोलिगाँठामा चार हुन्छन् ।



**चत्वार्यरत्न्योः ॥६३॥**

कुहिनामा पनि चार हुन्छन् ।

**चत्वारि जङ्घयोः ॥६४॥**

पिँडुल्लामा चार हुन्छन् ।

**द्वे द्वे जानुकपोलयोः ॥६५॥**

घुँडा र गालामा दुई दुई हुन्छन् ।

**ऊर्वंसयोः ॥६६॥**

तिघ्रा र काँधमा दुई दुई हुन्छन् ।

**अक्षतालूषकश्रोणिफलकेषु ॥६७॥**

कन्चट, माख्लो च्यापु र चाकको फिलामा दुई दुई हुन्छन् ।

**भगास्थ्येकम् ॥६८॥**

जननेन्द्रियमा एक हुन्छ ।

**पृष्ठास्थि पञ्चचत्वारिंशद्भागम् ॥६९॥**

ढाडमा पैँतालीस हुन्छन् ।

**पञ्चदशास्थीनि ग्रीवा ॥७०॥**

घाँटीमा पन्ध्र हुन्छन् ।

**जत्र्वेकम् ॥७१॥**



घाँटीको मूलमा एउटा हुन्छ ।

**तथा हनुः ॥७२॥**

चिउँडोमा एक हुन्छ ।

**तन्मूले च द्वे ॥७३॥**

त्यसको पेदमा दुईटा हुन्छन् ।

**द्वे ललाटाक्षिगण्डे ॥७४॥**

निधार, आँखाको खाल्टो र गालामा दुई दुई हुन्छन् ।

**नासा घनास्थिका ॥७५॥**

नाकमा एउटा हुन्छ ।

**अर्बुदैः स्थालकैश्च सार्धं द्वासप्ततिः पार्श्वकाः ॥७६॥**

पछाडिका करङ्ग जम्मा बहत्तर हुन्छन् ।

**उरः सप्तदश ॥७७॥**

छातीमा सत्र हुन्छन् ।

**द्वौ शङ्खकौ ॥७८॥**

कन्चट नजिक दुई हुन्छन् ।

**चत्वारि कपालानि शिरसश्चेति ॥७९॥**



टाउकामा चार हुन्छन् ।

**शरीरेऽस्मिन्सप्त शिराशतानि ॥८०॥**

यो शरीरमा सात सय शिरा हुन्छन् ।

**नव स्नायुशतानि ॥८१॥**

स्नायु नौ सय हुन्छन् ।

**धमनीशते द्वे ॥८२॥**

धमनी दुई सय हुन्छन् ।

**पञ्च पेशीशतानि ॥८३॥**

पाँच सय मांसपेशी हुन्छन् ।

**क्षुद्रधमनीनामेकोनत्रिंशल्लक्षाणि नव शतानि षट्पञ्चशद्धमन्यः ॥८४॥**
मसिना धमनीहरु उनन्तीस लाख नौ सय छपन्न वटा हुन्छन् ।

**लक्षात्रयं श्मश्रुकेशकूपानाम् ॥८५॥**

टाउकामा तीन लाख रोमकूप हुन्छन् ।

**सप्तोत्तरं मर्मशतम् ॥८६॥**

मर्मस्थलमा एक सय सात रोमकूप हुन्छन् ।

**सन्धिशते द्वे ॥८७॥**

जोर्नीमा दुई सय रोमकूप हुन्छन् ।

**चतुःपञ्चाशद्रोमकोटयः सप्तषष्टिश्च लक्षाणि ॥८८॥**


मानव शरीरमा कूल चौवन्न करोड सतसठ्ठी लाख रोमकूपहरू हुन्छन् ।

**नाभिरोजो गुदं शुक्रं शोणितं शङ्खकौ मूर्धा कण्ठो हृदयं चेति प्राणायतनानि ॥८९॥**

नाइटो, फोक्सो, चाक, शुक्र, रगत, कन्चट, शीर, घाँटी र मुटु : यी प्राणवायुका घर हुन् ।

**बाहुद्वयं जङ्घाद्वयं मध्यं शीर्षमिति षडङ्गानि ॥९०॥**

दुई हात, दुई गोडा, पेट र टाउका : यी “छ अङ्ग” हुन् ।

**वसा वपा अवहननं नाभिः क्लोमा यकृत्प्लीहा क्षुद्रान्त्रं वृक्ककौ बस्तिः पुरीषाधानमामाशयो हृदयं स्थूलान्त्रं गुदमुदरं गुदकोष्ठम् ॥९१॥**

बोसो, मासी, देब्रे फोक्सो, नाइटो, दाहिने फोक्सो, कलेजो, फियो, साना आन्द्रा, मृगौला, मूत्राशय, मलाशय, आमाशय, मुटु, ठूलो आन्द्रा, मलद्वार, पेट र मलथैली शरीरका भित्री अङ्ग हुन् ।

**कनीनिके अक्षिकूटे शष्कुली कर्णौ कर्णपत्रकौ गण्डौ भ्रुवौ शङ्खकौ दन्तवेष्टावोष्ठौ ककुन्दरे वंक्षणौ वृषणौ वृक्कौ श्लेष्मसङ्घातकौ स्तनौ उपजिह्वा स्फिजौ बाहू जङ्घे ऊरूपिण्डिके तालूदरं बस्तिशीर्षौ चिबुकं गलशुण्डिके अवटुश्चेत्यस्मिन्शरीरे स्थानानि ॥९२॥**

दुबै नानी (कनीनिके), दुबै आँखाका पुतली (अक्षिकूटे), दुबै कानका प्वाल (शष्कुली), दुबै कान (कर्णौ), दुबै कानका लोती (कर्णपत्रकौ), दुबै गाला (गण्डौ), दुबै आँखीभौं (भ्रुवौ), दुबै कञ्चट ( शङ्खकौ), गिजा (दन्तवेष्टव), दुबै ओठ (ओष्ठौ), दुबै तिघ्राको फिलाको दुबैतिरका खाल्डा ( ककुन्दरे), दुबै तिघ्राका जोर्नी (वंक्षणौ), दुबै अण्डकोश (वृषणौ), दुबै मिर्गौला (वृक्कौ), कफ निष्कासन गर्ने ग्रन्थी (श्लेष्मसंघातकौ ?), दुई स्तन (स्तनौ), किलकिले वा रुद्रघण्टी ( उपजिह्वा), कम्मरको मांसल खण्ड (स्फिजौ), दुबै हात (बाहू), दुबै पिँडौला (जङ्घे), दुबै तिघ्राका मांसल खण्ड (ऊरूपिण्डिके), तालु, माख्लो पेट (उदर), तल्लो पेटका दुई भागका मांसपेशी (बस्तिशीर्षौ), चिउँडो (चिबुकं), तालुकोम माथितिर रहेको दुई सूक्ष्म जिभ्रो ( गलशुण्डिके) र बाहिरी किलकिले (अवटु)-यि यो शरीरका (शक्तिसञ्चार हुने) स्थान हुन् ।

**शब्दस्पर्शरूपरसगन्धाश्च विषयाः ॥९३॥**



शब्द, स्पर्श, रूप, रस र गन्ध यि इन्द्रियका विषय (लक्ष्य) हुन् ।

**नासिकालोचनत्वग्जिह्वाश्रोत्रमिति वुद्धीन्द्रियाणि ॥९४॥**

नाक, आँखा, छाला, जिभ्रो र कान यि ग्रहण गर्ने इन्द्रियहरू हुन् ।

**हस्तौ पादौ पायूपस्थं जिह्वेति कर्मेन्द्रियाणि ॥९५॥**

हात, गोडा, मलद्वार, जननेन्द्रिय र जिभ्रो यि कर्मगर्ने इन्द्रियहरू हुन् ।

**मनो वुद्धिरात्मा चाव्यक्तमितीन्द्रियातीताः ॥९६॥**

मन, बुद्धि र आत्मा यि व्यक्त गर्न नसकिने तथा इन्द्रियको सीमाभन्दा परका विषय हुन् ।

**इदं शरीरं वसुधे क्षेत्रमित्यभिधीयते ।<br>एतद्यो वेत्ति तं प्राहुः क्षेत्रज्ञमिति तद्विदः ॥९७॥**

हे पृथ्वी ! मानव शरीरलाई क्षेत्र (वा खेत) पनि भनिन्छ । जसलाई यो क्षेत्रका बारेमा (सही तरिकाले के गरी जिउने भनेर) जानकारी हुन्छ उसलाई “क्षेत्रज्ञ” भनिन्छ ।

**क्षेत्रज्ञमपि मां विद्धि सर्वक्षेत्रेषु भाविनि ।**
**क्षेत्रक्षेत्रज्ञविज्ञानं ज्ञेयं नित्यं मुमुक्षुणा ॥९८॥**

हे सबै क्षेत्रलाई धारण गर्ने भएकी देवी, सबै तरिकाले जन्म लिने क्षेत्रज्ञले यो ज्ञानलाई निरन्तर बुझ्नून् र ती सबैका नियन्त्रक मलाई पनि बुझ्नून् ।

**॥ समाप्तमिदं षण्णवतितमोऽध्यायः ॥९६॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको
छयान्नब्बेयौं अध्याय पूर्ण भयो ।



## ॥ अथ सप्तनवतितमोऽध्यायः ॥
## (सन्तान्नब्बेऔं अध्याय)

**ऊरूस्थोत्तानचरणः सव्ये करे करमितरं न्यस्य तालुस्थाचलजिह्वो दन्तैर्दन्तानसंस्पृशन्स्वं नासिकाग्रं पश्यन्दिशश्चानवलोकयन्विभीः प्रशान्तात्मा चतुर्विंशत्यातत्त्वैर्व्यतीतं चिन्तयेत् ॥१॥**

पद्मासनमा बसी, देब्रे हातमाथि दाहिने हात टेकाई, तालुमा जिभ्रो नहल्लाई, दाँतको अलिकति हार पनि नदेखाई, दाँत नकिटी वा नजोडी, नाकको टुप्पोमा दुवै आँखाको दृष्टि केन्द्रित गरी, कुनै दिशातिर पनि नहेरी, निर्भय भई, प्रसन्न चित्तले चौबीस तत्वभन्दा भिन्न "पुरुष" को ध्यान गर्नू ।

**नित्यमतीन्द्रियमगुणं शब्दस्पर्शरूपरसगन्धाततिं सर्वज्ञमतिस्थूलम् ॥२॥**

ती : जो सनातन छन्, जसलाई इन्द्रियका गुणले जान्न सकिन्न, जो ब्द-स्पर्श-रूप-रस-गन्धको क्षमता भन्दा पर छन्, सर्वज्ञ छन् र अति विशाल छन् । अनि जो..।



**सर्वगमतिसूक्ष्मम् ॥३॥**

सर्वत्र अतिसूक्ष्मरूपमा रहन्छन्, ।

**सर्वतःपाणिपादं सर्वतोऽक्षिशिरोमुखं सर्वतःसर्वेन्द्रियशक्तिम् ॥४॥**

जसका हातगोडा सबैतिर छन्, जसका आँखा-शीर-अनुहार सबैतिर छन्, जो सबैतिरका सबै कुरालाई  सबै इन्द्रियले जान्दछन्, (यस्ता "पुरुष" लाई) ।

**एवं ध्यायेत् ॥५॥**

(सम्झेर) ध्यान गर्नू ।

**ध्याननिरतस्य च सम्वत्सरेण योगाविर्भावो भवति ॥६॥**

एक वर्षसम्म यसरी ध्यान गरिरहँदा उसमा योगको प्रादुर्भाव हुन्छ ।

**अथ निराकारे लक्षबन्धं कर्तुं न शक्नोति तदा पृथिव्यप्तेजोवाय्वाकाशमनोवुद्ध्यात्माव्यक्तपुरुषाणां पूर्वं पूर्वं ध्यात्वा तत्र लब्धलक्षस्तत्तत्परित्यज्यापरमपरं ध्यायेत्॥७॥**

यसरी निराकार प्रभूमा ध्यान एकत्रित गर्न नसक्नेले पृथ्वी, जल, अग्नि, वायु, आकाश, मन, बुद्धि, आत्मा र त्यसपछि अव्यक्त पुरुषको ध्यान गर्नू । एउटामा पूरा ध्यान केन्द्रित हुन थालेपछि त्यसलाई छाड्दै क्रमशः अर्कोमा ध्यान केन्द्रित गर्नू ।

**एवं पुरुषध्यानमारभेत॥८॥**

यही तरिकाले पुरुषको ध्यान गर्न शुरु गर्नू ।

**अत्राप्यसमर्थः स्वहृदयपद्मस्यावाङ्मुखस्य मध्ये दीपवत्पुरुषं ध्यायेत्॥९॥**

यदि यो तरिकाले पनि ध्यानमग्न हुन सकिएन भने आफ्नै हृदयमा कमलको बीचमा झलझलती बलिरहेको दियोलाई पुरुषझैं सम्झी ध्यान गर्नू ।



**तत्राप्यसमर्थो भगवन्तं वासुदेवं किरीटिनं कुण्डलिनमङ्गदिनं श्रीवत्साङ्कं वनमालाविभूषितोरस्कं सौम्यरूपं चतुर्भुजं शङ्खचक्रगदापद्मधरं चरणमध्यगतभुवं ध्यायेत्॥१०॥**

यसो गर्न पनि नसकिए मुकुट-कुण्डल-बाला लाएका, छातीमा श्रीवत्स चिह्न भएका, वनमालाले विभूषित, चारहातमा शङ्ख-चक्र-गदा- कमल लिएका र पृथ्वीबाट चरण पूजिइ रहेका भगवान् वासुदेवलाई ध्यान गर्नू ।

**यद्ध्यायति तदाप्नोति ध्यानगुह्यम्॥११॥**

जसले यसरी ध्यान गर्दछ उसले ध्यानको अद्भूत शक्ति प्राप्त गर्दछ ।

**तस्मात्सर्वमेव क्षरं त्यक्त्वा अक्षरमेव ध्यायेत्॥१२॥**

त्यसैले सबै नाशवान् कुरालाई छाडी अविनाशीको मात्र ध्यान गर्नू ।

**न च पुरुषं विना किञ्चिदप्यक्षरमस्ति॥१३॥**

पुरुष बाहेक अरु केही कुरा पनि अविनाशी छैन ।

**तं प्राप्य मुक्तो भवति ॥१४॥**

तिनलाई पाएपछि मोक्ष होइन्छ ।

**पुरमाक्रम्य सकलं शेते यस्मान्महाप्रभुः ।**
**तस्मात्पुरुष इत्येवं प्रोच्यते तत्त्वचिन्तकैः ॥१५॥**

सारा संसार (पुर) लाई आक्रमण गरेर (वा त्यसमा पसेर) महाप्रभू शयन गर्नू हुन्छ, त्यसैले उहाँलाई तत्वदर्शीहरू “पुरु श” याने “पुरुष” भन्ने गर्दछन् ।

**प्राग्रात्रापररात्रेषु योगी नित्यमतन्द्रितः ।**
**ध्यायेत पुरुषं विष्णुं निर्गुणं पञ्चविंशकम् ॥१६॥**



रातको पहिलो र अन्तिम भागमा पूरै मग्न भई योगीले निर्गुण र पच्चीस तत्व भन्दा पर रहेका भगवान् विष्णुको ध्यान गर्नू ।

**तत्त्वात्मामगम्यञ्च सर्वतत्त्वविवर्जितम् ।**
**असक्तं सर्वभृच्चैव निर्गुणं गुणभोक्तृ च ॥१७॥**

जो सूक्ष्मतर छन्, अगम्य छन्, सबै तत्वबाट रहित छन् । संलग्नताभन्दा बाहिर छन्, सबैका सहारा छन् गुणभन्दा पर छन् र पनि गुणको भोग गर्दछन् ।? ।

**बहिरन्तश्च भूतानामचरञ्चरमेव च ।**
**सूक्ष्मत्वात्तदविज्ञेयं दुरस्थञ्चान्तिके च तत् ॥१८॥**

चर अचर सबै सृष्टिको बाहिर भित्र उनै छन् । उनको सूक्ष्मता जानी नसक्नु छ, अपार छ र पनि उनलाई अन्तरात्मामा पाउन सकिन्छ ।?।

**अविभक्तञ्च भूतेन विभक्तमिव च स्थितम् ।**
**भूतभव्यभवद्रूपं ग्रसिष्णु प्रभविष्णु च ॥१९॥**

ती परमात्मा विभागरहित एकरुपले आकाशसमान परिपूर्ण भएर पनि चराचर सबै जीव ( भूतमा) बाँडिएको जस्तो भान हुन्छ । त्यसै गरी उनी जान्नयोग्य परमात्मा विष्णु भई पालन, रुद्र भई संहार र ब्रह्मा भई सृष्टि गर्दछन् ।

**ज्योतिषामपि तज्ज्योतिस्तमसः परमुच्यते ।**
**ज्ञानं ज्ञेयं ज्ञानगम्यं हृदि सर्वस्य धिष्ठितम् ॥२०॥**

त्यो परब्रह्मलाई ज्योतीहरूको पनि ज्योति र मायाभन्दा अत्यधिक टाढाको भनिन्छ । ती परमात्मा बाधेस्वरुप, जान्न योग्य, तत्वज्ञानले पाउन योग्य छन् एवं विशेषरुपले रहेका छन् ।

**इति क्षेत्रं तथा ज्ञानं ज्ञेयञ्चोक्तं समासतः ।**
**मद्भक्त एतसद्विज्ञाय मद्भावायोपपद्यते ॥२१॥**

यसप्रकार क्षेत्र तथा ज्ञान अनि जान्न योग्य परमात्माको स्वरुपका बारेमा संक्षेपमा बताइयो । मेरा भक्तहरु यो कुरालाई तत्वले जानी मेरै स्वरुपमा लिन हुने गर्दछन् । (यि १९-२१ श्लोक गितामा पनि छन्) ।



**॥ समाप्तमिदं सप्तनवतितमोऽध्यायः ॥९७॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको सन्तान्नब्बेयौं अध्याय पूर्ण भयो ।



# अष्टनवतितमोऽध्यायः
# (अन्ठान्नब्बेऔं अध्याय)

**इत्येवमुक्ता वसुमती जानुभ्यां शिरसा च नमस्कारं कृत्वोवाच ॥१॥**

जब भगवान् विष्णुले आफ्ना कुरा सक्नु भयो तब पृथ्वीले घुँडा टेकी शीरले नमस्कार गर्दै उहाँलाई यो कुरा भन्न लागिन् ।

**भगवंस्त्वत्समीपे सततमेवं चत्वारि महाभूतानि कृतालयान्याकाशः शङ्खरुपी वायुश्चक्ररूपी तेजश्च गदारूप्यम्भोऽम्भोरुहरूपी अहमप्यनेनैव रूपेण भगवत्पादमध्ये परिवर्तिनी भवितुमिच्छामि ॥२॥**

"हे भगवान् ! (पञ्चमहाभूत मध्येका) चार महाभूत आकाश शङ्खकारूपमा, वायु चक्रकारूपमा, तेज गदाकोरूपमा र जल कमलकोरूपमा हजूरको सान्निध्यमा अनवरतरूपमा घर बनाएर बसिरहेका छन् । म पनि यही रूपले हजुरको चरणकमलबाट दबेर रहन चाहन्छु" ।

**इत्वेवमुक्तो भगवांस्तथेत्युवाच ॥३॥**



पृथ्वीले यति भनेपछि भगवानले "तथास्तु" भन्नु भयो ।

**वसुधापि लब्धकामा तथा चक्रे ॥४॥**

पृथ्वीले पनि चाहेको वरदान पाएपछि आफूले भने बमोजिम गर्न थालिन् ।

**देवदेवञ्च तुष्टाव ॥५॥**

(त्यसपछि यसरी) उनले देवताका पनि देवताको स्तुति गरिन् ।

**ओं नमस्ते ॥६॥**

हजुरलाई नमस्कार छ ।

**देवदेव ॥७॥**

हे देवताका पनि देवता !

**वासुदेव ॥८॥**

हे वासुदेव !

**आदिदेव ॥९॥**

हे आदिदेव !

**कामदेव ॥१०॥**

हे कामदेव !

**कामपाल ॥११॥**



हे कामपाल !

**महीपाल ॥१२॥**

हे महीपाल !

**अनादिमध्यनिधन ॥१३॥**

हे आदि, मध्य र अन्त नभएका !

**प्रजायते ॥१४॥**

हे प्रजायते !

**सुप्रजायते ॥१५॥**

हे सुप्रजायते !

**महाप्रजायते ॥१६॥**

हे महाप्रजायते !

**ऊर्जस्पते ॥१७॥**

हे शक्तिका मालिक !

**वाचस्पते ॥१८॥**

हे वाणिका मालिक !

**जगत्पते ॥१९॥**

हे जगत्का मालिक !



**दिवस्पते ॥२०॥**

हे स्वर्गका मालिक !

**वनस्पते ॥२१॥**

हे वनका मालिक !

**पयस्पते ॥२२॥**

हे दूधका मालिक !

**पृथिवीपते ॥२३॥**

हे पृथ्वीका मालिक !

**सलिलपते ॥२४॥**

हे जलका मालिक !

**दिवपते ॥२५॥**

हे आकाशका मालिक !

**महत्पते ॥२६॥**

हे महत्का मालिक !

**मरुत्पते ॥२७॥**

हे वायुका मालिक !

**लक्ष्मीपते ॥२८॥**



हे लक्ष्मीका पति !

**ब्रह्मरूप ॥२९॥**

हे ब्रह्मरूप !

**ब्राह्मणप्रिय ॥३०॥**

हे ब्राह्मणप्रिय !

**सर्वग ॥३१॥**

हे सर्वव्यापक !

**अचिन्त्य ॥३२॥**

हे असोचनीय !

**ज्ञानगम्य ॥३३॥**

हे ज्ञानले जान्न सकिने !

**पुरहूत ॥३४॥**

हे पुरहूत !

**पुरष्टुत ॥३५॥**

हे पुरष्टुत !

**ब्रह्मण्य ॥३६॥**

हे ब्रह्मण्य !



**ब्रह्मप्रिय ॥३७॥**

हे ब्रह्मप्रिय !

**ब्रह्मकायिक ॥३८॥**

हे ब्रह्मकायिक !

**महाकायिक ॥३९॥**

हे विराटस्वरूपी !

**महाराजिक ॥४०॥**

हे महाराजिक (देवगण विशेष) !

**चतुर्महाराजिक ॥४१॥**

हे चतुर्महाराजिक !

**भास्वर ॥४२॥**

हे भास्वर !

**महाभास्वर ॥४३॥**

हे महाभास्वर !

**सप्त ॥४४॥**

हे सामवेदका सप्तस्वर !

**महाभाग ॥४५॥**



हे महाभाग !

**स्वर ॥४६॥**

हे स्वर !

**तुषित ॥४७॥**

हे तुषित !

**महातुषित ॥४८॥**

हे महातुषित !

**प्रतर्दन ॥४९॥**

हे विनाशक !

**परिनिर्मित ॥५०॥**

हे स्रष्टा !

**अपरिनिर्मित ॥५१॥**

हे अस्रष्टा !

**वशवर्तिन् ॥५२॥**

हे वशवर्ति !

**यज्ञ ॥५३॥**

हे यज्ञ !



**महायज्ञ ॥५४॥**

हे महायज्ञ !

**यज्ञयोग ॥५५॥**

हे यज्ञयोग !

**यज्ञगम्य ॥५६॥**

हे यज्ञगम्य !

**यज्ञनिधन ॥५७॥**

हे यज्ञनिधन !

**अजित ॥५८॥**

हे अजेय !

**वैकुण्ठ ॥५९॥**

हे वैकुण्ठ !

**अपार ॥६०॥**

हे अपार !

**पर ॥६१॥**

हे पर !

**पुराण ॥६२॥**



हे पुराण !

**लेख्य ॥६३॥**

हे लेख्य !

**प्रजाधर ॥६४॥**

हे प्रजाधारक !

**चित्रशिखण्डधर ॥६५॥**

हे चित्रशिखण्डधारी !

**यज्ञभागहर ॥६६॥**

हे यज्ञभागहर !

**पुरोडाशहर ॥६७॥**

हे पुरोडाशहर !

**विश्वेश्वर ॥६८॥**

हे विश्वेश्वर !

**विश्वधर ॥६९॥**

हे विश्वधर !

**शुचिश्रवः ॥७०॥**



हे शुचिश्रव !

**अच्युतार्चन ॥७१॥**

हे अच्युतार्चन !

**घृतार्चिः ॥७२॥**

हे घृतार्चि !

**खण्डपरशो ॥७३॥**

हे खण्डपरशु !

**पद्मनाभ ॥७४॥**

हे पद्मनाभ !

**पद्मधर ॥७५॥**

हे पद्मधर !

**पद्मधाराधर ॥७६॥**

हे पद्मधराधर !

**हृषीकेश ॥७७॥**

हे हृषीकेश !

**एकश्रृङ्ग ॥७८॥**

हे एकश्रृङ्ग !



**महावराह ॥७९॥**

हे महावराह !

**द्रुहिण ॥८०॥**

हे द्रुहिण !

**अच्युत ॥८१॥**

हे अच्युत !

**अनन्त ॥८२॥**

हे अनन्त !

**पुरुष ॥८३॥**

हे पुरुष !

**महापुरुष ॥८४॥**

हे महापुरुष !

**कपिल ॥८५॥**

हे कपिल !

**सांख्याचार्य ॥८६॥**

हे सांख्याचार्य !

**विष्वक्सेन ॥८७॥**



हे विष्वक्सेन !

**धर्म ॥८८॥**

हे धर्म !

**धर्मद ॥८९॥**

हे धर्मद !

**धर्माङ्ग ॥९०॥**

हे धर्माङ्ग !

**धर्मवसुप्रद ॥९१॥**

हे धर्मवसुप्रद !

**वरप्रद ॥९२॥**

हे वरप्रद !

**विष्णो ॥९३॥**

हे विष्णु !

**जिष्णो ॥९४॥**

हे जिष्णु !

**सहिष्णो ॥९५॥**

हे सहिष्णु !



**कृष्ण ॥९६॥**

हे कृष्ण !

**पुण्डरीकाक्ष ॥९७॥**

हे पुण्डरीकाक्ष !

**नारायण ॥९८॥**

हे नारायण !

**परायण ॥९९॥**

हे परायण !

**जगत्परायण ॥१००॥**

हे जगत्परायण !

**नमो नम इति ॥१०१॥**

हजूरलाई नमस्कार छ, नमस्कार छ ।

**स्तुत्वा त्वेवं प्रयत्नेन मनसा पृथिवी तदा ।**
**उवाच सम्मुखं देवीं लब्धकामा वसुन्धरा ॥१०२॥**

यसरी चाहेको वरदान पाएकी पृथ्वीले प्रयत्नपूर्वक भगवान् विष्णुको मनले स्तुति गरिसकेपछि श्रीलक्ष्मीलाई यसो भन्न लाग्नु भयो ।

**॥ समाप्तमिदमष्टनवतितमोऽध्यायः ॥९८॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको अन्ठान्नब्बेयौं अध्याय पूर्ण भयो ।



## एकोनशततमोऽध्यायः
## (उनान्सयौं अध्याय)

**दृष्ट्वा श्रियं देवदेवस्य विष्णोर्गृहितपादां तपसा ज्वलन्तीम् ।**
**सुतप्तजाम्बूनदचारुवर्णां पप्रच्छ देवीं वसुधा प्रहृष्टा ॥१॥**

देवताका पनि देवता भगवान् विष्णुका गोडा मिचिरहेकी, तपका प्रभावले धपक्क बलिरहेकी तथा पगालिएको सुनझैं तेजिली श्रीलक्ष्मीलाई देखेर पृथ्वी खुशी भई सोध्न लागिन् ।

**उन्निद्रकोकनदचारुकरे वरेण्ये उन्निद्रकोकनदनाभिगृहीतपादे ।**
**उन्निद्रकोकनदसद्मसदास्थितीते उन्निद्रकोकनदमध्यसमानवर्णे ॥२॥**

हे फुलेको रक्तकमल हातमा लिएर शोभयमान भएकी, हे नाइटोबाट निस्केको फुलिरहेको रक्तकमल भएकाको चरण मिचिरहेकी, हे फुलिरहेको रक्तकमलमा सधैं निवास गर्ने तथा फुलिरहेको रक्तकमलझैं उज्याली देवी !

**नीलाब्जनेत्रे तपनीयवर्णे शुक्लाम्बरे रत्नविभूषिताङ्गि ।**

**चन्द्रानने सूर्यसमानभासे महाप्रभावे जगतः प्रधाने ॥३॥**

हे नीलकमल समान नेत्र, सुन जस्तै चम्किलो वर्ण, सेतो पहिरन, रत्नले आभूषित शरीर, चन्द्रमा समान चम्किलो अनुहार, सूर्य समान तेज भएकी देवी हजुरको संसारभर पर्ने प्रभाव अवर्णनीय छ ।

**त्वमेव निद्रा जगतः प्रधाना लक्ष्मीर्धृतिः श्रीर्विरतिर्जया च ।**
**कान्तिः प्रभा कीर्तिरथो विभूतिः सरस्वती वागथ पावनी च ॥४॥**

हजुर नै जगतकै प्रधान मानिएको निद्रा हुनु हुन्छ । लक्ष्मी, धृति, श्री, विरति, जया पनि हजुर नै हुनु हुन्छ । कान्ति, प्रभा, कीर्तिरथ, विभूति, सरस्वती, प्रस्तुतीको माध्यम र पवित्रकर्ता पनि हजुर नै हुनु हुन्छ ।

**स्वधा तितिक्षा वसुधा प्रतिष्ठा स्थितिः सुदीक्षा च तथा सुनीतिः ।**
**ख्यातिर्विशाला च तथानसूया स्वाहा च मेधा च तथैव बुद्धिः ॥५॥**

स्वधा, संयमता, वसुधा, प्रतिष्ठा, स्थिति, सुदीक्षा, सुनीति, ख्याति, विशाला,

अनसूया, स्वाहा, मेधा र बुद्धि पनि त हजुर नै हुनु हुन्छ ।

**आक्रम्य सर्वां तु यथा त्रिलोकीं तिष्ठत्ययं देववरोऽसिताक्षी ।**
**तथा स्थिता त्वं वरदे तथापि पृच्छाम्यहं ते वसतिं विभूत्याः ॥६॥**

जसरी त्रिलोकको लगाम समाएर भगवान् विष्णुसँगै यहाँ बसिरहनु भएको छ, त्यसरी नै हे काला आँखा भएकी देवी हजुर पृथ्वीमा कहाँ बस्ने कृपा गर्नु हुन्छ भनेर म सोध्न चाहन्छु ।

**इत्येवमुक्ता वसुधां बभाषे लक्ष्मीस्तदा देववराग्रतस्था ।**
**सदा स्थिताहं मधुसूदनस्य देवस्य पार्श्वे तपनीयवर्णे ॥७॥**

पृथ्वीका यस्ता वचन सुनेपछि विष्णुका समिपमा उठेर लक्ष्मीले पृथ्वीलाई भन्न थाल्नु भयो-
"म सुनभैं देदिप्यमान मधुसूदन भगवानको समिपमा बस्ने गर्दछु ...।

**अस्याज्ञया यं मनसा स्मरामि श्रिया युतन्तं व्रवदन्ति सन्तः ।**
**संस्मारणे चाप्यथ यत्र चाहं स्थिता सदा तच्छृणु लोकधात्रि ॥८॥**



हे पृथ्वी ! जसले मनले (उनलाई) सम्भन्छन् यिनका आज्ञाले ती लक्ष्मीले युक्त हुन्छन् भनेर सन्तहरू भन्ने गर्दछन् । यसबाहेक म कहाँ कहाँ सदा रहन्छु भन्ने कुरा तिमी सुन ।

**वसाम्यथार्के च निशाकरे च तारागणाढ्ये गगने विमेघे ।**
**मेघे तथालम्बपयोधरे च शक्रायुधाढ्ये च तडित्प्रकाशे ॥९॥**

सूर्यमा, चन्द्रमामा, तारागणले डाकिएको आकाशमा, पानी बर्साउने बादलमा,
इन्देणीले सुसज्जित बादलमा, विजुली चम्कने बादलमा....।

**तथा सुवर्णे विमले च रूप्ये रत्नेषु वस्त्रेश्वमलेषु भूमे ।**
**प्रासादमालासु च पाण्डुरासु देवालयेषु ध्वजभूषितेषु ॥१०॥**

हे पृथ्वी ! सुनमा, निर्मल चाँदीमा, सफा रत्न, गहना र वस्त्रमा, सेता
भवन (दरबार)हरूको लहरमा, ध्वजापताकाले सिँगारिएका मन्दिरहरूमा...।

**सद्यः कृते चाप्यथ गोमये च मत्ते गजेन्द्रे तुरगे प्रहृष्टे ।**

**वृषे तथा दर्पसमन्विते च विप्रे तथैवाध्ययनप्रपन्ने ॥११॥**

गाईको आलो गोबरमा, श्रेष्ठ हात्तीको चालमा, तेजस्वी घोडाको बलमा,
गर्ब गर्ने साँढेमा, वेदाध्ययन गर्ने ब्राह्मणमा,...।

**सिंहासने चामलके च बिल्वे छत्त्रे च शङ्खे च तथैव पद्मे ।**
**दीप्ते हुताशे विमले च खड्गे आदर्शबिम्बे च तथा स्थिताहम् ॥१२॥**

सिँहासनमा, अमलाको बोटमा, बेलको बोटमा, छातामा, शङ्खमा, कमलको फूलमा,
बलिरहेको अग्निमा, चम्काइएको खड्गमा, सफा गरिएको ऐनामा म बस्ने गर्दछु ।

**पूर्णोदकुम्भेषु सचामरेषु सतालवृन्तेषु विभूषितेषु ।**
**भृङ्गारपात्रेषु मनोहरेषु मृदि स्थिताहं च नवोद्धृतायाम् ॥१३॥**

जलले भरिएका घडामा, चमर-पङ्खा भएका स्थानमा, सुनका सुन्दर पात्रमा, भर्खर खनिएको
माटोमा,...।

**क्षीरे तथा सर्पिषि शाद्वले च क्षौद्रे तथा दध्नि पुरन्ध्रिगात्रे ।**
**देहे कुमार्याश्च तथा सुराणां तपस्विनां यज्ञहुताश्च देहे ॥१४॥**

दूधमा, घिउमा, ताजा घाँसमा, महमा, दहीमा, विवाहिता स्त्रीमा,
कुमारी कन्यामा, देवप्रतिमामा, तपस्वी र होताको शरीरमा,..।

**शरे च सङ्ग्रामविनिर्गते च स्थितौ मृते स्वर्गसदःप्रयाते ।**
**वेदध्वनौ चाप्यथ शङ्खशब्दे स्वाहास्वधायामथ वाद्यशब्दे ॥१५॥**

बाणमा, युद्धबाट फर्किएकाको शरीरमा, युद्धमा वीरगति पाउनेको आत्मा र स्थलमा,
वेदध्वनी-शङ्खशब्द-स्वाहा-स्वधा-सुमधुर वाद्ययन्त्र सुनिने स्थलमा,...।

**राजाभिषेके च तथा विवाहे यज्ञे वरे स्नातशिरस्यथापि ।**
**पुष्पेषु शुक्लेषु च पर्वतेषु फलेषु रम्येषु सरिद्वरासु ॥१६॥**

राजाको राज्याभिषेकमा, विवाहमा, यज्ञमा, बेहुलीमा, शीर नुहाएकाको
शीरमा, सेता फूलमा, पर्वतमा, फलफूलमा, सुन्दर स्थलमा, झरनामा,...।

**सरःसु पूर्णेषु तथा जलेषु सशाद्वलायां भुवि पद्मखण्डे ।**
**वने च वत्से च शिशौ प्रहृष्टे साधौ नरे धर्मपरायणे च ॥१७॥**

जलले भरिएका तलाउमा, हरियो घाँस भएको चौरमा, कमल र फलफूल हुने वनमा,
नवजात शिशुमा, मातृ-स्तनपानमा, हर्षमा, साधुजनमा, धर्मात्मामा,...।

**आचारसेविन्यथ शास्त्रनित्ये विनीतवेषे च तथा सुवेषे ।**
**सुशद्धदान्ते मलवर्जिते च मृष्टाशने चातिथिपूजके च ॥१८॥**

शास्त्र अनुसार आचरण गर्नेकोमा, विनम्रतामा, असल पहिरनमा, इन्द्रियलाई
नियन्त्रण गर्नेकोमा, निष्पापीकोमा, शुद्ध र सफा खानेकोमा, अतिथिपूजककोमा,...।

**स्वदारतुष्टे निरते च धर्मे धर्मोत्कटे चात्यशनाद्विमुक्ते ।**
**सदा सपुष्पे ससुगन्धिगात्रे सुगन्धलिप्ते च विभूषिते च ॥१९॥**

आफ्नी पत्नीसँग सन्तुष्ट हुनेकोमा, धर्मकर्ममा लागिरहनेकोमा, धर्ममा समर्पित हुनेकोमा,

धेरै र धेरैपटक नखानेकोमा, फूल फुल्न कहिल्यै नछाड्ने स्थानमा,
बास्ना आउने कुरा शरीरमा छर्कने वा दल्नेकोमा, गहनाले सुसज्जित शरीरमा,...।

**सत्ये स्थिते भूतहिते निविष्टे क्षमान्विते क्रोधविवर्जिते च ।**
**स्वकार्यदक्षे परकार्यदक्षे कल्याणचित्ते च सदा विनीते ॥२०॥**

सत्यमा रहेकाकोमा, सबै जीवलाई माया गर्नेकोमा, विवाहित दम्पत्ति भएका घरमा,
क्षमाशीलकोमा, नरिसाउनेकोमा, आफ्नो र अरुको कामकाजमा पोख्त हुनेकोमा, कल्याणदायी
मन हुनेकोमा, नम्र हुनेकोमा,...।

**नारीषु नित्यं सुविभूषितासु पतिव्रतासु प्रियवादिनीषु ।**
**अमुक्तहस्तासु सुतान्वितासु सुगुप्तभाण्डासु बलिप्रियासु ॥२१॥**

सधैं गहना लगाउने, पतिव्रता, मिठो बोली बोल्ने, जोगाउने आदत हुने, सन्तान हुने, घरका
भाँडाकुँडा आदि सजाएर राख्ने र परम्परादेखि चलि आएका
बलि आदिमा मन लगाउने स्त्रीमा,...।

**सम्मृष्टवेश्मासु जितेन्द्रियासु कलिव्यपेतासु पथिस्थितासु ।**
**धर्मव्यपेक्षासु दयान्वितासु स्थिता सदाहं मधुसूदने तु ॥२२॥**

घरपरिसर सफा राख्ने, गोबरले लिप्ने, इन्द्रियलाई वशमा राख्ने, कलह मन नपराउने, धर्ममा कट्टर, दयालु र चरित्रवान स्त्री तथा मधुसुधनका समिपमा म नित्य वास गर्दछु ।

**निमेषामात्रञ्च विनाकृताहं न जातु तिष्ठे पुरुषोत्तमेन ॥२३॥**

म एकछिन पनि भगवान पुरुषोत्तमसँग छुट्टिएर रहन सक्दिन ।

**॥ समाप्तमिदमेकोनशततमोऽध्यायः ॥९९॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको
उनान्सयौं अध्याय पूर्ण भयो ।



## शततमोऽध्यायः
## (सयौँ अध्याय)

**धर्मशास्त्रमिदं श्रेष्ठं स्वयं देवेन भाषितम् ।**
**ये द्विजा धारयिष्यन्ति तेषां स्वर्गे गतिः परा ॥१॥**

स्वयं भगवान विष्णुले बताउनु भएको यो धर्मशास्त्रलाई
जो द्विजले धारण गर्दछन् ती स्वर्ग जान्दछन् ।

**इदं पवित्रं मङ्गल्यं स्वर्ग्यमायुष्यमेव च ।**
**ज्ञानञ्चैव यशस्यञ्च धनसौभाग्यवर्धनम् ॥२॥**

यो शास्त्र अतिपवित्र, मङ्गलदायक, स्वर्गदायक, आयुवर्धक, ज्ञानवर्धक,
यश वर्धक, धन वर्धक र सौभाग्य वर्धक छ ।

**अध्येतव्यं धारणीयं श्राव्यं श्रोतव्यमेव च ।**
**श्राद्धेषु श्रावणीयञ्च भूतिकामैर्नरैः सदा ॥३॥**



यो शास्त्रलाई अध्ययन, धारण, श्रावण र श्रवण अवश्य गर्नू ।
उन्नती चाहने मानिसले श्राद्धमा यसलाई सधैँ सुन्ने गर्नू ।

**॥ समाप्तमिदं शततमोऽध्यायः ॥१००॥**



मोहन प्रसाद सापकोटाद्वारा भावानुवाद गरिएको विष्णुस्मृतिको
सयौँ अध्याय पूर्ण भयो ।



**॥ समाप्ता चेयं श्रीविष्णुस्मृतिः ॥**



नेपालको बाग्मती अञ्चल, काभ्रेपलाञ्चोक जिल्ला, अनैकोट गा.वि.स., वडा नं.३, चारघर टोलमा जन्म भई हाल गोकर्णेश्वर न.पा., वडा नं.७, दक्षिणढोकामा बसोबास गर्ने मोहन प्रसाद सापकोटाद्वारा गरिएको श्रीविष्णुस्मृतिको नेपाली भावानुवाद पूर्ण भयो ।



**सबैको कल्याण होस् !**